तरूण भारती

# हाम्रो पर्यावरण

लिक फुत्हेल्ली

*अनुवाद*

जी० एस० योञ्जन



नेशनल बुक ट्रस्ट, इंडिया

# विषय सूची

# स्वीकृति

मेरो हस्तलेख ध्यानपूर्वक पढ़ी केही आलोचना र सुझाउहरू गरिदिनुभएकोमा डा० माधभ गाडगीलज्यूप्रति म आभारी छु। गाउँहरू र समुद्रबारेमा सरसल्लाहको निम्ति बंकर रोय र सतीश भास्करज्यूलाई पनि क्रमानुसार धन्यवाद नदिई सक्दिनँ। जुन सहयोग र परामर्श मैले रोमुलस ह्वाइटेकर र मेरी स्वामी जफर फुत्हेल्लीबाट पाएँ त्यसको निम्ति वहाँहरूप्रति म खुबै कृतज्ञ छु।

# पर्वतहरू

## I

## *ती हरिया पहाड़हरू*

भारतको भौतिक मानचित्रमा हेर्‍यौं भने पर्वतहरूको समूहले एउटा सुस्पष्ट आकार अप्नाएको पाइनेछ, यस्तो भान हुन्छ कसैले सुसंगठित तथा सन्तुलित ढंगमा ती पर्वतहरूलाई स्वेच्छानुसार गुथेंर राखेको छ। सम्पूर्ण देशका निम्ति ती हिमाली पर्वतमालाहरूले एउटा तम्बूरूपी छानोको स्थान लिएका छन्। यस छानोको सर्वोच्च बिन्दुचाहिँ मध्यस्थानदेखि केही टाढ़ा रहेको छ, पश्चिमी भाग छोटो हुनको साथ चाँड़ै पाकिस्तानसित सम्मिलित हुन्छ अनि पूर्वीय भाग लामो छ र वक्र रेखाझैं घुम्दै सिधै दक्षिणमा गएर बङ्गालको खाड़ीको नजीकैमा पुगेर अड़िन्छ।

छानो विषय अरू भनिरहन नपर्ला, पृथ्वीको सर्वोच्च पर्वतमाला यस छानोका कतिपय शिखरहरू २०,००० फीटभन्दा अल्गा छन्। यसको सिधै मन्तिर हिमाली भूभागको समग्र लम्बाइसित किनारिएर गएको एउटा समतल भूमिको फराकिलो पेटी छ — त्यो हो भारतीय गांगेय मैदान। कुनै महान् अलौकिक तत्त्वले मिलाएर राखेको झैं प्राय: यो देखापर्दछ जसमा शीघ्र वेगमा पर्वतहरूबाट ओह्रलो बग्ने पग्लेको हिउँ तल मैदानमा पुग्दा फेरि सुस्त वेगमा बहँदछ जहाँ ती हिमजलहरूको उपयोग गर्ने अनि समतल भूमिलाई आदर्शरूपी कृषिप्रधान देशमा परिणत गर्ने मौका हामीलाई प्राप्त हुन्छ।

अन्य सर्वोच्च शिखरहरू सुदूर दक्षिणी भूखण्डमा निलगिरि र अन्नमलाई पर्वत श्रेणीअन्तर्गत पाइन्छन्। ती चुचुराहरूको बीचतिर भारतको "मुटु" र "पेट" तुल्य अधिकांश जमीनहरू हरदरमा प्राय: २,००० फीट अल्गा छन्। उपत्यकाहरू र समतल भूमिहरूसित पहाड़हरू एकान्तरित हुँदा विभिन्न आकारका भूमिहरूको उचित मिश्रण यहाँ पाइन्छ। रहल अन्य केही उल्लेखनीय पर्वत श्रेणीहरू पश्चिमी घाटहरू हुन् जसको त्यो लम्बाइदार शृङ्खला पश्चिमी तटसित समान्तर तौरले दौड़न्दछ, मुम्बईको केही उत्तरी भागबाट शुरू भएर पश्चिमी तट हुँदै कन्याकुमारीसम्म सो शृङ्खला आएको छ।

विविध प्रकारका पहाड़हरू, पर्वत-श्रेणीहरू अनि उच्च भूमिहरू पाउनु हाम्रो सौभाग्यको कुरो हो। पहाड़ र पर्वतहरू बाह्य दृश्यमा मनोरम हुनुको यथार्थताबाहेक ती भूमिहरूले जमीनलाई जुन प्रकारले मलिलो तथा उत्पादनकारी बनाउँछ सो कुरोको चेतना बिरलै मात्र हामीमा पाइन्छ; एक - दुइवटा पहाड़-पर्वतहरू मात्र त्यहाँ भए तथा कुनै पनि पहाड़ र पर्वत त्यहाँ नभएर यदि सम्पूर्ण देशचाहिँ समतल च्याप्टो हुँदो हो, यो देश एक प्रकारले मरूभूमि भइसक्ने थियो, शायद साइबेरियाको बिस्तीर्ण तृणभूमि जस्तै। कृतज्ञतापूर्वक अब हामीले विश्लेषण गरौं कि हाम्रो देशका पर्वतहरूप्रति हामी कतिसम्म ऋणी रहेछौं।

उदाहरणको निम्ति, उत्तरी सीमान्तरहरूको दृष्टिगत शोभा बड़ाउने काम अनि पृथ्वीको सर्वोच्च चुचुराहरूको अधिपति हामी हौं भन्ने स्थान प्रदान गर्नुबाहेक हिमाली भूखण्डले हामीलाई अन्य कुन कुन गुण गरेको छ? यो ता साधारण कुरो हो, साइबेरियाको चिसो अनि सुखा हावालाई ती हिमाली पर्वतहरूले देशबाहिर राख्छन् अनि उष्ण जलपूर्ण वर्साती हावालाई चाहिँ देशभित्रै सीमित राख्छन्। उच्च पर्वतहरूको पर्खाल त्यहाँ नभएको भए हाम्रो देशका जलवायु र उत्पादन सामर्थ्यता बिल्कुलै भिन्नै हुने थियो। हिमाली श्रेणीको उत्तरी पाटामा बहने साइबेरियाई पवनहरू सोझै भारतमा प्रवेश गर्ने थिए अनि शायद उत्तरी भागहरूलाई एउटा ठण्डा अनि उजाड़ क्षेत्रमा परिणत गरिदिने थियो। यसकारण हाम्रो वर्तमान जलवायुको संरचनामा हिमाली पर्वतहरू विशाल परिमाणमा जिम्मादार छन्।

हामीले उपभोग गरेका जलवायु र वृष्टिपातबाहेक अरू कुन कुरोको निम्ति हिमालयप्रति हामी कृतज्ञ छौं त? हिमाली पर्वतहरूदेखि तलको विस्तृत समतल भूमिमाथि नागबेली आकारमा बहने ती जम्मै विशाल नदीहरूको निम्ति हामी हिमालयप्रति ऋणी छौं जसले उक्त भूमिलाई जीवन र उर्वरता दिएको छ। ती पर्वतहरूको माथिल्लो भागमा हिउँ र वर्फ एकार्कामाथि थुप्रिन्दा फेदमा भएको सतह पत्रचाहिँ लगातार रूपमा पग्लिरहन्छ अनि यो पग्लेको हिउँ नै ती चिरस्थायी नदीहरूको श्रोत हो जुन नदीहरूले उत्तरी भारतका समतल भूमिमा पानी पुऱ्याउने काम गर्दछ।

ती हिमाली नदीहरूबाहेक धेरैजसो अन्य नदीहरू ऋतुकालिक छन्। विशेष कृष्णा र गोदावारीबाहेक अधिकांश भारतीय वर्षे नदीहरू वर्षाकालपश्चात् कि ता बिल्कुलै सुक्दछन् अथवा तपतपे धारामा परिणत हुन्छन्। तर हिमालयबाट उत्पन्न हुने गंगा, सिन्धु अनि ब्रह्मपुत्र नदीहरू आ-आफ्ना असंख्य उपनदीहरूलगायत प्रशस्त पानी बोकेर वर्षैभरि बगिरहन्छन्। यसकारण हामीलाई आवश्यक मात्रामा पानी दिएर उत्तरी भारतलाई प्राय: मरूभूमि हुनदेखि जोगाएकोमा हिमालय पर्वतप्रति हामी कृतज्ञ हुनुपर्छ।

टाढ़ाका वस्तुलाई नजीकमा ल्याएर हेरेझैं हिमाली पाखाहरूको वनस्पति उत्तरी गोलार्द्धमा भएका वनस्पतिकै प्रतिरूप हुन्। विभिन्न अक्षान्तरहरूमा जुन अनुक्रममा ती उद्भिद्हरू पाइन्छन् त्यस्तै रूपमा बदलँदो उँचाइहरूमा विविध थरीका रूखहरू, पोथ्राहरू अनि घाँसहरू समतल पेटीस्वरूप सजिएका छन्। निम्नत्तर उँचाइहरूमा साल (Shorea robusta) जस्ता उष्णकटिबन्धीय तथा अव-उष्णकटिबन्धीय वृक्षहरू पाइन्छन्। केही माथिल्लो उँचाइमा बज्राँठहरू र गुराँसहरूलगायत नातिशीतोष्ण मण्डलका वृक्षहरू पाइन्छन्। यो भूभाग विशेष सेउ (apple), नस्पाती (pear), आरूचा (plum) अनि अन्यत्र नातिशीतोष्ण मण्डलका फलबगैंचा लगाउनार्थ प्रयोग गरिएको छ। वास्तवमा भारतीय बजारहरूमा पाइने अधिकांश सेउ र नस्पातीहरू यही हिमाली भूतलबाट प्राप्त हुन्छ। अन्तिम अनि सर्वोच्च पेटी अति ठण्डा र कठिन वातावरणको सहन गर्न सक्ने सियो जस्ता पात भएका ती जम्मै सदाहरित धुपी जातीय वृक्षहरूद्वारा रचिएको छ। कैयौं शताब्दीअघिदेखि मधेश खण्डको निम्ति काठपातको भरपर्दो श्रोत यही कनिफर पेटी भएको छ।

शीघ्र गतिमा बद्लिरहने ती वनस्पतिका पेटीहरू विशेष गरी पूर्वीय हिमालयमा अद्‌भुत रूपमा मौजुत छन्, जहाँ समस्त पर्वत श्रेणी होचो अक्षान्तरहरूसम्मै फैलिएकोले फेदीका जङ्गलहरू वस्तुत : उष्णकटिबन्धीय प्रकारका एवं हराभरा छन्। जीप वाहनद्वारा अर्ध दिनभित्रमा नै उष्णकटिबन्धीय क्षेत्रबाट हिंड़ेर विभिन्न प्रकारका वनस्पति समूह हुँदै माथि हिउँरेखासम्म कोही पनि मानिस पुग्न सक्छन्। कारण कुनै एउटा निश्चित उँचाइमा धुपी तथा कनिफर जातीय रूखहरूले पनि चिसो र हुरीको सहन गर्न सक्दैनन्, माटोलाई समेत हावाले बहाइसकेकोले त्यहाँ नाङ्गो चट्टान मात्र पाइन्छ। तथापि उत्तर दिशास्थित ती असंख्य अनि प्राय: समान्तर रूपमा रहेका पर्वत श्रेणीहरू र उपत्यकाहरूले बनेका हिमाली समूहभित्र हिंड़डूल गरे विभिन्न वनस्पति अनुक्रमहरूले नियमित रूपमा एकार्कालाई पछ्याएको पाइन्न। वृक्षविहीन अग्ला डाँड़ाहरूबीच सुरक्षित भञ्ज्याङहरू छन् जसको होचो उँचाइको कारण त्यहाँ मधेशमा हुने कृषि उद्योग सम्भव हुँदछ अनि जहाँ भेंड़ा अनि गाई - भैंसीको बथान राख्न सकिन्छ।

माटोको गुण र यसमा पाइने शुद्ध पानीको परिमाण एउटा देशको सम्पन्नता मुल्याङ्कन गर्ने सर्वोत्तम मापडण्ड हो। माथिल्लो स्तरको केही इञ्ची माटोलाई सर्वोच्च तह भनिन्छ अनि यस्तै माटोमा मात्र बीजहरू उम्रन सक्छन् साथै कलिला बिरूवाहरूले पौष्टिक खाद्य पदार्थसित बाँचिरहने शक्ति यसबाट पाउँदछन्।

जहाँ जमीनको भिरालोपन मन्द अवस्थाको छ तथा ३० डिग्रीभन्दा कम्तीको छ, त्यहाँ घाँसको एउटा बाक्लो आवरण छ भने माटो सुरक्षित रहनेछ। अनि ती ढालू पाखा-पखेरूहरू भेंड़ा पालनको निम्ति उपयुक्त स्थान ठहरिन्छन्। बाख्रादेखि भिन्नै व्यवहार भएका भेंड़ाले घाँसको कलिलो टुसा मात्र खाँदा घाँसको बोट अझ बाक्लो भएर आउँछ। यो प्रत्यक्ष छ कि घाँससित बढ्दै गरेका बिरूवाहरू पनि भेंड़ाले खाइदिँदा रूखहरूको पुनर्उत्थान हुन सक्दैन, तर जतिञ्जेल उच्चत्तर भिराला स्थानहरू वृक्ष-आवरणले ढाकिएका हुन्छन्, हाम्रो उन उद्योग-धन्धा तल्ला पाखाहरूमा मात्र सीमित रहन्छन्।

तर, जहाँ जमीन भिरालिएर गएको छ, हामीलाई यस्तो वस्तु चाहिन्छ जसले जमीन भित्र पसेर माटोलाई बलियोसित समातेर राख्न सक्छ। अर्थात् जमीनभित्र चारैतिर फैलिने तथा गहिरिएर जाने ठूला रूखहरूका जराहरू हामीलाई चाहिन्छन्। भिरालो पार्वतीय भूमिमा अन्य कुनै वस्तुले माटोलाई पक्रेर राख्न सक्दैन। ती वृक्षहरू साथसाथै बसेको हुनुपर्दछ जसमा ती जराहरू एकअर्कामा छुनु अनि बेहेरिन सक्छन्, विभिन्न थरिका एवं स्वभावका जरा प्रणालीहरू त्यहाँ हुनुपर्दछ -कोही सिधै गहिरिएर जाने, कोही जमीनको माथिल्लो तहमा फैलिँदै जाने, जसमा ती जराहरूले माटोलाई जोड़सित पक्रेर सुरक्षित राख्दछन्। रूखहरूबाट बनेका चँदुवाहरू आपस्तमा खप्टिएर एउटाले अर्कोलाई ढाकेको हुनुपर्दछ जसमा घनघोर मुसलधारे वर्षाले पनि माटोको माथिल्लो तहलाई क्षतिग्रस्त पार्न सक्दैन, किनभने आकाशबाट खसेको पानीको तीव्र वेग सर्वप्रथम रूखको टुप्पोमा पर्दछ र पातहरूबाट सुस्तसँग पानी भूइँतिर तप्कन्दछ। यसकारण माटो-संरक्षणबाहेक असल रूख-आवरणले जमीनमनि पानीको सञ्चय गर्ने काममा पनि सहायता गर्दछ।

माटो छिचलेर भूमिभित्र खोलानाला बन्नको निम्ति आकाशीय पानीलाई धेरै समयसम्म जमीनमा अड़ेर बस्ने मौका मिल्नपर्दछ। यो पानी स्वात्तै उँधो बगे सो असम्भव हुन्छ। बग्ने पानीको वेगलाई साधारणत: मन्तिरको माटो-पत्र तथा भूइँमाथिको सोतरले अवरोध पुर्‍याउँदा पानी सिधै बगेर जान सक्दैन अनि यथावत पृथ्वीभित्र प्रवेश गर्न सक्छ अनि मौनसित कोही भूइँमनिका जलसमूहसित मिल्दछ। त्यसैबीच घनघोर वृष्टि हुँदा केही पानी बगेर गए तापनि रूखहरूले माटोलाई सुरक्षित राखेका हुन्छन् साथै खोलानालातिर बग्ने पानी सङ्गलो हुन्छ, त्यहाँ बालुवा र माटोको थेग्रो हुँदैन। उक्त पानी फेरि निम्नस्थित स्थानहरूमा प्राकृतिक धाराको रूपमा देखापर्छ।

यसरी एउटा पहाड़ी भूमिलाई रूख र घाँस दुवैको बाक्लो आवरणले ढाकेको छ भने अरू जम्मै कुराहरू उचित अवस्थामै रहेको पाइनेछ। खोला-नदीहरूमा

ढुंगा-माटोको जमावत हुनेछैन, ती खोला-नदीहरू फुस्रो-धमिलो नभएर सङ्लो र उज्ज्वल हुनेछन् जुन पानी उपत्यका र मधेस इलाकाहरूमा अन्न उत्पादनको निम्ति प्रयोग गरिनेछन्।

पहाड़ी भूमिको लागि मिश्रित थरीका उद्भिद्हरूले रचिएको पतझड़ी जङ्गलले एउटा आदर्श आवरणको काम गर्छ। अनि पुस्ता-पुस्तासम्म हाम्रा जम्मै पहाड़ी भूभागलाई अघि प्राकृतिक तौरले उम्रेका यस्तै झार-जङ्गलले ढाकेको थियो।

अन्य कुराहरूसरह प्रशस्त काठपातको उत्पादन पर्वतहरूमा हुन्छ अनि सावधानीसित छानबीन गरी रूखहरू काटे पहाड़ी भूमिमा भएको एउटा स्वास्थ्य वनले आश्चर्यजनक परिमाणमा काठपात उपलब्ध गराउन सक्छ। तैपनि अधिकांश मानिसहरूको विचारमा हिमालय फल उत्पादन हुने क्षेत्र होइन न ता काठपातकै क्षेत्र हो, ऊन तथा अन्नबाली उप्जाउने इलाका पनि होइन। हिमालय एउटा यस्तो जमीनको टुक्रा हो जुन दृष्टिगत रूपले अति विस्मयकारी र ज्ञानवर्धक छ; यो यथावत कार्य परिवेशदेखि यति भिन्नै छ कि हामीलाई नयाँ मानसिकी एवं आध्यात्मिकी स्फूर्ति र जोश दिएर चङ्गा राखिदिने सामर्थ्य यसमा छ। आफ्नो उत्साह र जीवनशक्तिको बैट्रिलाई फेरि तेजिलो बनाउन हामी हिमालयको दर्शन गर्छौं। हिमालयलाई त्यसैबिथ्यैमा ईश्वरीय स्थानको उपमा दिइएको छैन। आधिकारिक तथा दफ्तरीय भाषामा हिमालय भन्नाले एउटा पर्यटक क्षेत्र बुझिन्छ।

समस्त हिमाली फेदहरूमा पश्चिमको श्रीनगरदेखि पूर्वको दार्जीलिङसम्मै अत्यन्त रमणीय स्थानहरूमा अवस्थित छन् मनोरम शहरहरू, जो प्रत्येक गृष्म ऋतुमा पर्यटकहरूको खचाखचले भरिपूर्ण हुन्छन्। यस्तो हुनु स्वभाविकै हो, अनि ती मनोहर स्थानहरू हामीसित रहनु हामी भारतभित्र बस्नेहरूका निम्ति सौभाग्यको कुरो ठहर्दछ – जति नै तर्क गरे पनि हाम्रो देशको सिमानाभित्र पर्ने ती स्थानहरू पृथ्वीको सबैभन्दा रमणीय पहाड़हरू हुन्। स्थानीय जनताको आर्थिक कल्याणार्थ ऋतुकालिक पर्यटकहरूले एउटा मुख्य भूमिका खेलेको छ, यसकारण पर्यटकहरूले आफ्नो भ्रमणबाट आनन्द लिन्छन् भने स्थानीय जनतालाई पनि आफ्ना उप्जाउहरू र सेवाहरूको उचित मोल प्राप्त गर्ने सुअवसर त्यहाँ मिल्दछ। तर प्रत्येक ठाउँमा त्यस ठाउँले थाम्नु सक्ने व्यक्तिहरूको एउटा सुहाउँदो संख्या हुन्छ अनि प्राय: पर्यटक स्थानहरूको पूर्ण सफलता, दर्शनार्थीहरूको संख्या र यसले उप्जाएका व्यापारिक मालताल र यातायातको आफ्नो प्रकारका खतराहरू छन् जुन विषय अर्को अध्यायमा हामी चर्चा गर्नेछौं।

गत केही वर्षहरूभित्र ती शहरहरूमा पर्यटकको संख्या वृद्धि भएको छ भने ती शहरहरूदेखि बाहिर गएर पहाड़को माथिल्लो तहतिर घुमफिर गर्नेहरूको संख्या पनि

त्यही अनुपातमा बड़ेको छ ; अनि यस परिस्थितिले पनि केही समस्याहरू सृष्टि गरेको छ, हिमाली पारिस्थितिकी सदैव "दुर्बल" (fragile), "भंगुर" (brittle) र "असुरक्षित" (vulnerable) छ भनेर चित्रण गरिएको छ। वनस्पतिका विभिन्न जातिहरूबीच, उद्भिद् जीवन र माटोबीच, माटो, वनस्पति र पानीबीच भएका अन्तर्सम्बन्धहरू यति घनिष्ठ र नाजुक प्रकारले सन्तुलित रहेका छन् कि कुनै एउटामा केही परिमाणमा पनि अदल-बदल आए यसले समस्त अरूमाथि प्रभाव पादर्छ। स्थानीय उद्भिद् तथा जीव-जन्तुमाथि भएको केही प्रतीत आघातले जल-सम्भरण कार्यमा अप्रत्याशित एवं विपद्युक्त असर ल्याउन सक्छ। उदाहरणको निम्ति, पर्वतारोही अभियान दलहरूले दाउरा बटुल्दा पनि सो कुरो कतिपय सर्वोत्तम हिमाली क्षेत्रहरूको विकृतिको मुख्य कारण बन्न सक्छ।

हिमाली पर्वत श्रेणीहरूको आफ्नै विशेष स्थान छ अनि तिनीहरूदेखि धेरै मन्तिर आफ्नै उँचाइ र नाटकीय खेल लिएर आउँदछ दोस्रो श्रेणीका अति महत्त्वपूर्ण पर्वतहरू। तथापि पश्चिमी घाटहरूले सम्पूर्ण भारतीय प्रायदीपमाथि प्रभाव पारेका छन्, अनि पृथ्वीको अन्य कतिपय पर्वत श्रेणीहरूसरह ती पर्वतहरूले पनि प्राकृतिक हरियाली र दृष्टिगत रमणीयता सम्हालेर राखेका छन्।

हिमालयले झैं पश्चिमी घाटहरूले मौसमी हावालाई नियन्त्रण तथा निर्देशन गर्ने काममा एउटा मुख्य भूमिका खेलेको छ। समयको प्रारम्भमा यदि हामीसित सल्लाह हुन सम्भव भएको भए समुद्र किनारको यति नजीक नरहेर केही सय माइल अन्तरस्थलीय यी घाटहरूको श्रेणी हुनुपर्दछ भनेर हामी भन्ने थियौं होला। कारण समुद्रबाट बहने मौसमी हावाहरू घाटहरूसँग ठोक्कर खाँदा ती हावाहरूले ल्याएको जल पश्चिमी पाटामा मात्र खस्छ र पहाड़हरूको विशाल क्षेत्रमाथि भने प्राय: कुनै वृष्तिपात हुँदैन। यसरी मुम्बईले प्राय: १०० इञ्च वर्षा पाउँछ भने घाटहरूको पल्लोपट्टिको १०० माइलभन्दा थोरै टाढ़ामा रहने पुनेले केवल ३० इञ्च झरी पाउँदछ। घाटहरूका पश्चिमी तथा समुद्राभिमुख ढालु पाखाहरू उद्भिद् संसारले हराभरा छन्; तर ती पाखाहरूबाट उत्पन्न भएका नदीहरू त्यो पातलो तटवर्ती भूमिलाई छेड़ेर द्रूत गतिमा समुद्रमा सामेल भएको देख्दा हामी विश्वाद अनुभव गर्छौं। समस्त ती बहुमूल्य पानी एकापट्टि निरर्थक रूपमा समुद्रमा विलिन हुन्छ भने अर्कोपट्टि पूर्वीय पाटामा बस्ने किसानहरू त्यही पानीको भीषण अभावले तड़पिरहन्छन्। यो साँचो हो कि पूर्वीय पाखाहरूका आफ्नै नदीहरू छन्, जस्तै कृष्ण नदी, जुन नदीहरू प्रायद्वीप वारपार हुँदै अर्को तटमा खस्दछन्। तर ती नदीहरूको पानी पर्याप्त छैन। गृष्म कालमा वर्षा हुनभन्दाअघि प्रायद्वीपका वर्षे नदीहरू

सुकेर ससाना खोलाहरू हुने प्रवृतिका छन्, कहिलेकाहीँ पानी सुक्दा नदीको शुष्क पिंध पनि देखापर्दछ।

अन्य वृहत् स्तरका पार्वतीय क्षेत्रहरू जस्तै सत्पुरा, विन्ध्या, अराभल्ली अनि पूर्वस्थित खासी र गारो पहाड़हरूले खेल्ने भूमिका पनि धेरथोर यस्तै प्रकारको छ।

स्थलाकृति अल्प मात्रामा पनि तरंगवत् भए त्यो खूबै चित्ताकर्षक हुन्छ, अनि साधारणत: पूर्व रूपले समतल भूमिभन्दा ज्यादै उत्पादनकारी हुन्छ। अवतलको उपस्थितिले अझ बड़ी मात्रामा आर्द्रता थामेर राख्ने सम्भावना छ, साथै ध्वंसकारी हुरी-बतासदेखि जोगिनु सक्छ। पहाड़हरूबीचका सुरक्षित अवतलहरूका उत्पादनशीलताको एउटा अलौकिक उदाहरण हो दक्षिणी भारतीय पहाड़हरूमा भएको ''शोला'' नामक जङ्गलहरू जहाँ घनघोर जङ्गलसँग खुल्ला पहाड़ी वनस्पति वृक्षविहीन घाँसस्थलहरू एकान्तरित हुन्छन्। समतल भूमिभन्दा असमान स्थलाकृति भएको भूमि नै थुप्रै अनि विभिन्न थरीका प्राकृतिक जीवजन्तु, जस्तै-चरा-चुरूङ्गी, कीटपतंग अनि मसिना स्तनधारी पशुहरूको लागि अनुकुलनीय ठहरिन्छन् अनि जसका उचित तत्त्वहरू यसमा पाइन्छन्।

हाम्रा पहाड़-पर्वतहरूबाट असंख्य फाइदाहरू हामीले पाउने हुनाले यो स्पष्ट छ कि जबसम्म हाम्रा ती पहाड़-पर्वतहरूलाई हामीले नीरोगी राख्दैनौं तबसम्म तिनीहरूले उचित रूपमा हाम्रो सेवा गर्न सक्नेछैनन् तथा वास्तवमा कुनै सेवै गर्न सक्नेछैनन् ।

# पर्वतहरू

## II

## *ती नाङ्गा पहाड़हरू*

एउटा नीरोगी पर्वत केलाई भनिन्छ अनि एउटा स्वस्थ पर्वत अस्वस्थ भएको कसरी चिन्न सकिन्छ? हामीले बुझेअनुसार वृक्षरेखादेखि माथिको इलाका तथा कुनै माटो अढ़िन नसक्ने भिरालो टाकुराबाहेक एउटा स्वस्थ पर्वत फेददेखि टुप्पोसम्मै राम्रो मलिलो माटोले ढाकेको हुनुपर्दछ। बढ्ने उद्भिद् जराहरूले मात्र अब यस मलिलो माटोलाई राम्ररी समातेर राख्न सक्छन्। ज्यादै भिरालो जग्गाहरूमा बलियो र ठूला जराहरू हुनु आवश्यक छ, कम भिरालो जग्गामा भने घाँसका जराहरू नै उत्तम ठहरिन्छन्, रूख भएको इलाकालाई पटेर रूख-जङ्गलले ढाकेको हुनुपर्छ, एकाध संख्यामा मात्र रूखहरू हुनुहुँदैन।

एउटा पहाड़ी क्षेत्रमा जताभावी रूखहरू काटिए ती रूखहरूबाट आगामी दिनहरूमा पाइने उप्जाउको मात्रा नाश नभएर भूक्षय पनि शीघ्र गतिमा शुरू भइहाल्छ, अनि केही समयमा नै त्यो रित्तिँदै गएको माटोमाथि वृक्षरोपन कार्य असम्भव बन्दछ।

एउटा हस्तक्षेप नभएको प्राकृतिक वन-जङ्गल निश्चय नै कालान्तरमा लहलह भएर आउँछ। मानव हस्तक्षेपकै कारणले रूखहरू र हाँगाहरू काटेकोले, जङ्गलमा आगो लगाएकोले अनि कलिला टुसाहरू र बिरूवाहरू पद्दलित भएकोले जङ्गलहरू पातलिँदै जान्छन् अनि काम नलाग्ने बन्दछन्। यसबाट के बुझिन्छ भने जब मानिसहरू काठपातको निम्ति जङ्गल पस्छन् कुनै उपायले जङ्गलले दिन सक्ने अतिरिक्त अंश मात्र उनीहरूले लान सक्छन् जुन अंशको पुनर्उत्पादन चाँड़ै नै जङ्गलले गर्न सक्दछ।

जङ्गलहीन उदाङ्गो पहाड़ी भूमिबाट ढीला माटो ओह्रलो बग्छ अनि नदी-तलहरूमा थुप्रेर बस्छ (कारण नदी-तलहरू निम्नतम ऊँचाइ भएका स्थानहरू हुन्)। ढुङ्गा-माटो यसरी जमिन्दा नदीको ऊँचाइ बढ्छ, बारम्बार पानी नदीतटदेखि बाहिर बग्दा वरिपरिका जमीन बाड़ग्रस्त हुँदछ। यसकारण भिरालो पहाड़ी जमीनमाथि असल वृक्ष - आवरण नहुँदा यसले धेरै टाढ़ासम्म पर्ने असरहरू पैदा गर्दछ, साथै यस्ता क्षेत्रहरूमा नोक्सान गराउँदछ जुन क्षेत्रहरू पहाड़हरूसित पटक्कै सम्बन्धित नभएको देखापर्दछ।

भिरालो घाँसस्थलहरूको पनि यस्तै अवस्था छ। खुला जङ्गली वा घरेलु पशुहरूका निम्ति ती स्थलहरू आहार स्थान हुन्। जङ्गली पशुहरू, जस्तै मृग र बराँठ्ले ती जग्गाहरूमा स्थायीरूपी क्षति पुऱ्याउँदैनन् कारण तिनीहरू अत्यन्त गतिशील भएकोले एउटै ठाउँमाथि धेरै बेरसम्म हिँड्डिबस्दैनन्। वास्तवमा दिन प्रतिदिन एउटै ठाउँलाई लगातार कुल्चिरहने घरेलु पशुहरूको कारणले नै भूइँघाँसहरू फेरि पलाउन सक्दैनन्। समयान्तरमा माटो सिमेण्टजस्तै चाम्रो हुँदछ अनि कलिला घाँसका बोटहरूबाट नयाँ टुसाहरू भूइँमाथि आउन सक्दैनन्।

जसरी अल्प समयको निम्ति कहिलेकाहीँ एउटा रोगी व्यक्तिले आफ्नो बिरामीलाई लुकाएर पूर्ण रूपले स्वस्थ भएको देखाउन सक्छ त्यस्तै रीतिले एउटा पर्वत पनि कुनै समय सुन्दर र स्वस्थ देखापर्दछ जबकि वास्तवमा यो बिल्कुलै बिरामी अवस्थामा पीडित रहेको हुन्छ। उदाहरणको निम्ति, वर्षाकालमा छिटो बढ्ने जम्मै थरिका घाँस र अन्यन्य उद्भिद्हरू धमाधम पलाउन थाल्दा पार्वतीय भूमि पूर्ण रूपमा हरियालीले ढाकेको देखिन्छ। त्यहाँ भएका दुइ–चारवटा रूखहरूमा प्रशस्त पातहरू लागेका देखिन्छन् जसमा कमसेकम केही टाढ़ाबाट हेर्दा हामीलाई यस्तो भान हुन्छ कि त्यहाँ यथेष्ट रूपमा रूखहरू छन् अनि भूक्षय हुने कुनै डर छैन।

तथापि वर्षाकालमा एउटा विशेष कुरो छ जुन पर्वतको स्वास्थ्यको सत्य लक्षण ठहरिन्छ। यो लक्षण हो खोला–नदीमा भएको पानीको वर्ण। यदि पानी सङ्लो भए माटो स्थिर रूपमा अड़ेर बसेको स्पष्ट हुन्छ अनि जम्मै कुराहरू राम्रै रहेको बुझिन्छ। तर यदि पानी धमिलो भए त्यो देखावटी हरियालीले हामीलाई झुक्याउन सक्दैन अनि यथेष्ट परिमाणमा हरियो वनस्पति देखापरे पनि भू–संरक्षणको निम्ति यो मनग्य हुँदैन।

जेहोस्, शुष्क एवं उष्ण ऋतु प्रारम्भ हुँदा त्यो अल्पकालिक अवस्था अदृश्य हुँदछ र सत्यता झल्किन्छ। शीघ्र गतिमा उम्रने ती ऋतुकालिक घाँसपातहरू मरिसकेका हुनेछन्, अनि त्यस्तै रीतिले अन्य अल्पायु उद्भिद् र तरूलताहरू पनि; वृक्षस्कन्धहरूलाई ढाकेर राख्ने चौड़ादार पातहरूको अनुपस्थितिमा ती अल्पसंख्यक अनि टाढ़ा–टाढ़ास्थित साथै प्राय: सदैव विकलांगित एवं रोगग्रस्त अवस्थामा रहेका स्कन्धहरू जस्ता छन् त्यस्तै देखिन्छन्। ती चिरस्थायी घाँसका बोटहरू अब लुप्त भएका छन् साथै वर्षाकालमा चहक–महक रूपमा देखापरेका ती ऋतुकालिक घाँसहरू पनि सुक्दै गइरहेका पाइने छन्।

कुन कारणले एउटा स्वस्थय पार्वतीय भूमि बिरामी हुन्छ सो कुरोको विश्लेषण गरौं।

समयको शुरूआतदेखि नै मानिस जाति पर्वतमाथि, पर्वत वरिपरि अनि पर्वतसित बसोबास गर्दै जिउँदै आएका छन्। ससाना जमीन क्षेत्रहरूमा तिनीहरूले खेती लगाउँथे तथा जनजातिहरू जङ्गलमा पाइने प्राकृतिक खाद्य जस्तै फलहरू, बोक्रा, पातहरू र जराहरू खाएर जिउँथे। थोरै परिमाणमा मालमत्ता यातायात गरिन्थ्यो, अनि मानिसहरू स्वयं पैदल हिँड्थे नत्र भए गोरूगाड़ी वा घोड़सवारद्वारा यात्रा गरिन्थ्यो। उनीहरूलाई सड़कको आवश्यकता थिएन; पहाड़हरूका रूपरेखाअन्तर्गत सहज भिराला स्थानहरू हुँदै रूखहरू र वनस्पतिबीचका केही अप्ठ्यारो तथा घुमौरा गोरेटोहरू भए उनीहरूलाई भइहाल्थ्यो। सम्भाव्यत : तीमध्ये धेरैजसो गाई-गोरू हिँड़ने गोरेटोहरू थिए जुनचाहिँ कालान्तरमा फराकिलो कच्चा सड़कमा परिणत भए। अतएव: जब हात्तीको पिठ्यूँले लिएको यातायातको भार ट्रक र जीप बाहनहरूले लिन थाल्यो, त्यहाँ उचित रूपमा पक्का सड़कहरू बनाइनपर्‍यो। हामीले केही क्षण सोंचे यही पाउनेछौं कि पार्वतीय देशमा बनाएको नयाँ सड़कले सबै प्रकारका अदृश्य परिवर्तनहरू ल्याउने सम्भावनाहरू तथा निश्चयताको ढोका खुलाउन सक्छ।

पहिले सड़क स्वयंको शारीरिक निर्माणको कुरो त्यहाँ आउँदछ। मजदूरहरूका ठूला-ठूला दलहरू ल्याइन्छन् अनि तिनीहरू निर्दिष्ट स्थानमा डेरा लगाएर बस्छन्। जीविका चलाउनका निम्ति घरदेखि टाढ़ा रहनपर्दा डेरा वरिपरिका प्राप्य काठपातको चाहिँ लूटमार भइरहन्छ। बस्ने आश्रय अनि खाने कुरो पकाउनका निम्ति रूखहरू काटिन्छन्। अति प्राचीन कालदेखि चल्दै आएको भारतीय परम्पराअनुसार जो कोही पनि स्वतन्त्र रूपमा दाउरा काट्न जङ्गल पस्न सक्छन्। यो मुनासिब र उचित नै थियो जतिञ्जेल दाउराको लागि सुकेका डाँख्लाहरू मात्र काटिन्थे अनि मानव जनसंख्या जमीनको श्रोतले थाम्न सक्ने अवस्थामा थियो। तर गत 40 वर्षभित्र जनसंख्या दोबर बढ़ेको छ अनि देशमा पर्याप्त मात्रामा दाउरा पाइन्न। त्यसो हुँदा मानिसहरूले जीउँदो रूखहरूकै हाँगाहरू काट्छन्; रूख मर्ने हिसाबले बोक्रा खुर्कन्छन् जसमा समग्र रूख नै पाउन सकिन्छ; काठको निम्ति आगो लाएर पनि तिनीहरूले रूखहरूलाई मार्छन्। त्यसउसले स्वभावत: जब सड़क खन्नेहरूको एउटा दल पार्वतीय इलाकाभित्र पस्छ, निश्चय नै रूखहरूको काल आएको कुरो हामी बुझ्छौं। ठेकादारहरूले आफ्नो श्रमिकहरूको दाउराको निम्ति बैकल्पिक व्यवस्था नगरेसम्म ती रूखहरूलाई बचाउन सकिँदैन। कुनै पनि याथार्थिक हिसाबअनुसार श्रमिकवर्गलाई इन्धन उपलब्ध गराइनुपर्दछ। तर यसको सट्टामा जुनै दृष्टिकोणले पनि सम्पूर्ण राष्ट्रको बहुमूल्य सम्पति स्वेच्छानुसार लुट्ने र ध्वंस पार्ने काममा उनीहरूलाई स्वतन्त्रता दिइएको छ।

यसरी सड़क निर्माण जस्तो बोझिल काम वास्तवमा शुरू हुनभन्दा अघि नै इन्धन बटुल्ने ध्वंसकारी प्रथाद्वारा भूखण्डमा क्षति पुर्‍याउने काम शुरू हुँदछ। सड़कको काम पुरा नहुञ्जेल उक्त प्रथाहरू चलि नै रहन्छन्।

यो एक प्रकारको विध्वंस हो जुन कुरोलाई यसको परिणाम जति नै विपद्‌जनक भए तापनि सड़क निर्माताहरूले सायदै ख्याल गरेका तथा स्वीकारेका छन्। यसबाहेक फेरि सड़क खन्ने काम स्वयंममा विशाल मात्रामा माटो र चट्टानको व्यवहार र सञ्चालन क्रियाहरू आवेष्टित छन्। पहाड़ी पाटाहरूलाई विस्फोटन गरिन्छ, रूखहरू काटिन्छन् जराहरू भूइँबाहिर अंगभंग भएर रहन्छन् अनि ती घाउहरू कसैको सहायता नपाई जतिसक्दो आफै निको हुनुपर्दछ। पानी परेको समय असुरक्षित माटो बगेर गइहाल्छ अनि मुसलधारा वर्षा भएमा पैह्रोहरू पनि घरिघरि गइरहन्छन्। वर्षाकालमा पैह्रोको कारणले मानिसहरू मरेको, बस-बाहनहरू पल्टेको, यातायात र सञ्चार विच्छेद भएका समाचारहरूले खबरकागजहरू परिपूर्ण हुन्छन्। कुनै बस-बाहनहरू नपल्टे तापनि अनि कुनै व्यक्ति नमरे तापनि प्रत्येक पैह्रो माटो र रूखहरू नष्ट यसले गरेको परिपेक्ष्यमा राष्ट्रको निम्ति खूबै क्षतिपूर्ण ठहरिन्छ।

जहाँ शीर्षभागको माटो गायब भएको छ त्यहाँ रूखपात उम्रन सक्दैन; उदाहरणको निम्ति अधिकांश मरूभूमिहरूको अवस्था यस्तै प्रकारको छ किनभने हावाले माथिल्लो भाग माटोलाई बहाइसकेको छ र त्यहाँ उप्रान्त कुनै रूखहरू उम्रन सक्दैन। नयाँ शीर्ष माटो उपार्जन गर्ने एउटै उपाय हो राम्रो स्थानको शीर्ष माटो एउटा खराब स्थानमा लैजानु। वास्तवमा हामीले शीर्ष माटोको सिर्जना गर्न सक्दैनौं, कारण शीर्ष माटो भूइँका असंख्य पात-सोतरका पत्रहरू अनि छिन्नभिन्न हुँदै पृथ्वी धरातलसित मिसेर बस्ने मृत उद्भिदी पदार्थहरूबाट निस्केको संयुक्त उपज हो। एक इञ्ची नयाँ शीर्ष माटो बनिनलाई कमसेकम ५००-देखि १००० वर्ष समय लाग्छ भन्ने कुरोमा विशेषज्ञहरू एकमत छन्। यसकारण जति नै धनराशी खर्च गरे तापनि करोड़ौं रूपियाँ किन नहोस् यसले हाम्रो निम्ति नयाँ माटो किन्न सक्दैन भन्ने कुरो महसूस गर्दा हामी मनमनै चकित हुन्छौं। हामीसित जेजति छन् त्यसैलाई बारम्बार प्रयोग गरिरहनपर्छ; अनि त्यसको एउटै रति पनि नष्ट नपार्नेतिर होशियारी रहनु नै हामीलाई बेस होला।

के माटोलाई हामीले गुमाउने कुरा उचित हो? जेहोस् एउटा पहाड़ी स्थानबाट माटोको ढीका बहिष्कृत भएजस्तो लागे ता पनि तलतिर कहीं न कहीं त्यसको पक्राउ भइहाल्छ। यसकारण माटोले केवल स्थानहरू फेर्दछ तर त्यो एउटा पहाड़भित्रै रहेको हुन्छ। वास्तवमा माटोलाई कुनै टाढ़ा स्थानमा लैजाँदा के त्यहाँ कुनै आपत्ति छ -

जबसम्म त्यो माटो देशको भौगोलिक सीमाभित्रै रहँदछ? एउटा क्षेत्रले खप्नपरेको नोक्सान अर्कोको निम्ति लाभ हुँदछ।

जबसम्म हाम्रो माटोको ढेला जमीनमै बस्छ अनि त्यहाँ त्यसको प्रयोग गरिन्छ (पौधाहरू रोपेर), कुरा त्यत्ति गम्भीर छैन। तर खास कुरा के हो भने माटोको ढेलाले कहिले पनि उँभोतिर फाल हाल्नु सक्दैन र जम्मै फोस्के माटो उँभोदेखि उँधोतिर बग्ने गर्छ जबसम्म अन्तमा सबैभन्दा निम्नतम स्तरमा त्यो माटो पुग्दैन जुन स्तर नदीतल नै हुन सक्छ। यदि माटो नदीको पींधमा गएर बसे त्यो सधैँको निम्ति लुप्त भएको हामी बुझ्छौं। वास्तवमा अधिकांश फोस्के माटो चाँड़ै नै नदी पींधमा पुगिहाल्छ, कारण मुसलधारे वर्षा हुँदा आकाशको पानी (भेल)-सितै त्यो बगेर जान्छ जुन पानी नजीकैको खोलासँग मिलित हुने कार्यमा व्यस्त देखिन्छ; त्यो खोला फेरि आफ्नो पालोमा नजीकैको नदीसँग मिलित हुन हतारसाथ बगिरहेको हुन्छ। खोला वा नदी द्रूत गतिमा बगुञ्जेल पानीलाई धमिलो पार्दै माटो पनि एकसाथमा बगिरहेको हुन्छ। समतल भूमिमा आइपुग्दा नदीको पींधमा जम्छ अनि केही मात्रामा यस जमावतले नदीतललाई उच्च पार्छ। नदी-तललाई यसरी उच्च पार्ने विधिलाई सिल्टेसन भन्दछन्, अनि यही नै हामीलाई हरेक वर्ष दु:ख दिइरहने बाढ़को मूल कारण हो। उत्तरी भारतका प्राय: जम्मै भूभागलाई जलथल बनाउने १९७८ र १९८० सालहरूका असाधारण बाढ़हरू नदी-तलहरूका सिल्टेसनले नै भएको हो, जुन घटना फेरि पार्वतीय क्षेत्रहरूमा माटोलाई पक्रेर राख्ने रूखहरूको अभावले गर्दा हो। असाधारण ढंगमा भारी वर्षा हुँदा हिउँबाट उप्जेका नदीहरू किनारदेखि बाहिर बग्छन् अनि समस्त गांगेय समतल भूमिलाई धक्का पुऱ्याउँछन्।

बाढ़चाहिँ नोक्सानको एउटा पाटा मात्र हो। माटोको थेग्रो र हिलोको भारी बोकेर नदी समुद्रमा खस्दा त्यहाँका बन्दरगाहहरू पनि थेग्रोले भरिभराउ हुँदछ जसमा लगातार रूपमा थेग्रोलाई निकर्षण गर्ने महङ्गो कार्बाहीको आवश्यकता परिरहन्छ।

बहुमूल्य शीर्ष माटोको बारम्बार क्षति गराउने काम, नदी तलहरूको सिल्टेसन भएको अनि यसको परिणामस्वरूप उत्पन्न भएको बाढ़ले कुनै पनि देशलाई सहजै कंगाल पार्न सक्छ। तर गहिराइमा हेर्‍यौं भने स्थिति झन नराम्रो पाइन्छ। कारण माटोको रक्षा गरेनौं भने हामीले माटो मात्र नगुमाएर विशाल मात्रामा भूमिगत जल राशीलाई पनि गुमाउनेछौं। त, यस्तो घटना कसरी हुन सक्ला?

हामीलाई थाहा छ कि थालजस्तो समतल भूमिमा वृष्टि हुँदा पानी सलल बगेर जाँदैन - जमीन भिरालो नभएकोले पानी त्यहीं जमिरहन्छ जबसम्म पानी पूर्णत: जमीनमा

सोसिन्दैन। माटोको एउटा छेउदेखि अर्को छेउ हुँदै पानी पृथ्वीमा रसिन्छ जबसम्म त्यो पानीको जमीनमनि बग्ने नाला तथा साना-ठूला जलराशीसित भेट हुँदैन। यो भूमिगत जलराशी हाम्रो निम्ति एउटा आरक्षित भण्डार हो जुनचाहिँ वास्तवमा हुनुपर्ने नै हो; जतिबेला हामीलाई पानीको आवश्यकता पर्छ कुवा खनेर हामी पानी तानी लिन्छौं। एउटा नाङ्गो पहाड़मा भने यो काम सम्भव हुँदैन। जमीन भिरालो भएकोले पानीले जम्ने मौका पाउँदैन र पृथ्वीमा सोसिन सक्दैन। ढुङ्गा-माटो बोकेर यो पानी लगत्तै पहाड़देखि उँधो बगिहाल्दछ।

पहाड़ी पाटाहरूमा असल वृक्ष-आवरण भए मात्र बग्ने पानीलाई रोक्न सकिन्छ अनि पानी पृथ्वीमा सोसिन सक्छ। हालसालै गत केही वर्षहरूभित्र असंख्य मात्रामा पार्वतीय क्षेत्रमा पानीको मूल सुकिसकेको जुन सत्य घटना छ त्यो कुनै दुर्बोध दुर्भाग्यको कारणले होइन। यो ता हाम्रा पहाड़हरूका रूखहरूको संख्यामा भएको घटाइको प्रत्यक्ष परिणाम हो।

घोड़ाको नालमा एउटा काँटी नहुँदा युद्धमा पराजित हुनपरेको कथाझैं कतिपय ठूला-ठूला आपत्तिहरू नपत्याउँदो ससाना कारणहरूले गराउँदछन्। प्रकृति एउटा रूमलिएको कुटिल संरचना हो जहाँ हरेक वस्तु पारस्परिक निर्भरतामा बस्दछन्। यस संरचनाको एउटा सानो ढुङ्गा पनि हटाइदिए सम्पूर्ण महलको सन्तुलन लुप्त अनि ढल्न तथा यसको रूप बदलन सक्छ। हामीले बुझेअनुसार बाक्लो जङ्गलहरूले ढाकेका पर्वतहरू निसन्देह विपुल जलराशीका खानी हुन्, चाहे यस जलराशीले मूलको पानी, भूमिगत पानी तथा संग्लो अनि नियमित ढंगमा बग्ने नदीहरूको रूप नै किन नलियोस्। रूखहरू काटिए मूलको अनि भूइँमनिको पानी सुक्नेछ, नदीहरू धमिलो हुनेछन् साथै बाढ़ आउन सक्छ, बन्दरगाहहरू माटो र बालुवाले भरिनेछन्। अनि सबभन्दा खराब कुरो के हो भने शीर्ष माटो लुप्त हुन सक्छ जुन कारणले हामीले आफ्नो भूललाई सुधार्ने इच्छा गर्‍यौं भने पनि पार्वतीय भूमिमा फेरि वनस्पति लगाउन सकिन्न। यो यस्तो स्थिति हो जहाँ हरेक वस्तुले हरेक अरू वस्तुलाई प्रभावित पारिरहेको हुन्छ जसलाई प्राकृतिक सन्तुलन भनिन्छ।

गत पचास वर्षको अवधिमा सरकारले धेरैवटा जलविद्यूत परियोजनाहरू कार्यान्वयन गरेका छन्। यसको अर्थ हो एउटा उपत्यकाबाट बग्ने नदीमाथि एउटा विशाल बाँध लगाइन्छ जसद्वारा जम्मै पानीहरू मिलेर एउटा सरोबरको सृष्टि हुन्छ। सरोबरदेखि-बाहिर बग्ने अधिशेष पानीको शक्तिलाई विद्युत उत्पन्नमा प्रयोग गरिन्छ। बाहिरी हिसाब-मुताबिक विद्युत उत्पादन साथै क्षेत्र विकासको निम्ति ती परियोजनाहरू उचित उपाय

ठहरिन्छन्। तर अनुभवले के देखाउँछ भने प्राकृतिक इलाकाहरूमाथि यस्तो विशाल मात्राको हस्तक्षेप भयो भने यसले धेरै हानिकारक परिणामहरू पैदा गर्छ ज़ो अघिबाट प्राय: कहिल्यै थाहा हुँदैन। अनि यो सम्भव छ कि एउटा क्षेत्रप्रति छोटो अवधिमा धेरै फाइदाहरू दिलाउन लाउने ध्येयले गरिएका चेष्टाहरूले त्यस क्षेत्रलाई बिल्कुलै ध्वंस पार्न सक्दछ। अति विशाल परिमाणमा भन्दा सुस्त गतिमा अनि सामान्य परिमाणमा कार्यकलाप गर्नु नै प्राय: उत्तम ठहरिन्छ। यस्तै केही विशाल परियोजनाहरूले उत्पन्न गरेको उत्तरप्रभाव (after- effects) को आधारमा "सानो चीज सुन्दर हुन्छ" भन्ने आफ्नो प्रसिद्ध निष्कर्षमा ***सूमाकर*** पुगेका थिए।

अब हामी ठूला–ठूला बाँध परियोजनाहरूले उत्पन्न गरेका सुविधा र असुविधाहरूका विश्लेषण गरौं तथा कति क्यूबिक फीट पानीबाट कति किलोवाट बिजुली प्राप्त गर्न सकिन्छ भन्ने फाइदजनक कुरोलाई शायद अगावै स्वीकारी लिन सकिन्छ। असुविधाहरूको भने कहिलेकाहीं मात्र स्मरण गरिन्छ अनि प्रायश: असुविधाहरूको भयावहले सम्पूर्ण परियोजनालाई नै निष्फल पार्न सक्दछ।

परियोजना स्थानसम्म हिंड्ने सड़क तयारी गर्नु नै परियोजना कार्यको प्रथम चिह्न हो। एउटा बाटोले बनिन्दै गर्दा तथा बनिसकेपछि पारेको क्षतिको परिमाणको ज्ञान हामीलाई थाहा भएकै कुरो हो, यसकारण यति भने यथेष्ठ होला कि परियोजना स्थानलाई हेलिकप्टर बाहनबाट हेरे आकाशबाट यो प्रत्यक्ष देख्न सकिन्छ कि जुन स्थानहरूमा सड़क छेड़िएको छ ती ठाउँहरूमा वन प्रचुर मात्रामा पातलिएको पाइनेछ।

सर्वश्रेष्ठ रूखहरू र वनहरू उपत्यकाहरूअन्तर्गत पहाड़हरूका सुरक्षित मोड़हरूमा विशेष पाइन्छन्। यसकारण नदीमाथि बाँध हालेर एउटा कृत्रिम सरोवर सृष्टि गर्नुको अर्थ हुन्छ सर्वश्रेष्ठ स्थानीय जङ्गललाई जलामय बनाउनु। हजारौं वृक्षहरू, उद्भिद्हरू अनि लताहरूको संहार हुनेछ। यो प्रत्यक्ष छ कि बाढ़ शुरू हुनुभन्दा पहिले ती वृक्षहरू काटिनेछन् अनि काठपात बिक्री गरिनेछन्; तर यो ता एक पक्षको कार्वाही मात्र भयो, कारण यदि जङ्गललाई पटक्कै नछोएको भए यसले लगातार अनि नियमित रूपमा विशाल परिमाणमा काठपातसरह अन्य वन्य फसलहरू दिइरहने थियो।

सत्यता के हो भने निर्दिष्ट क्षेत्र बाढोन्मुख हुनुभन्दा धेरैअघि नै त्यहाँको अदृष्टित वन मेलैसित लुटिनेछ। बाँध स्वयंको निर्माणमा केही वर्ष समय लाग्नेछ अनि त्यहाँ आइपुगेको त्यो विशाल श्रमिक दल डेरा लाएर लामो समयसम्म बस्नेछन्। कुनै वैकल्पिक इन्धनको अनुपस्थितिमा ती श्रमिकहरूले रूखहरू काट्ने छैनन् भनेर विश्वास गर्नु के यथोचित ठहरिएला ?

उदाहरणलाई पुष्टि गर्नका निम्ति पश्चिमी घाटका साइलेन्ट भ्याल्लीमाथि बहस गरौं जसलाई डुबाउने प्रकल्पनाले वन संरक्षकहरूमाझ एउटा ठूलो खलबली मच्चाएको थियो। योजनामुताबिक ३९० फीट अल्गो र ७२०फीट चौंड़ा भएको बाँध बनाइने थियो जसद्वारा ५००० ऐकर जमीनलाई सिंचाइ गराउने अनि १२० मेगावाट जलविद्युत शक्तिको उत्पादन हुने थियो। यस कुरोबाट वन संरक्षकगण निश्चित थिए कि बाँध निर्माणले जुन परिमाणमा क्षति गर्नेछ सो फाइदाभन्दा धेरै गुणा ज्यादा हुनेछ। तुलन–पत्र सरल थियो। साइलेन्ट भ्याल्लीको सदाहरित वर्षे जङ्गल, जुन जङ्गल बाँधको कारणले डुब्ने स्थितिमा थियो, –को विकास हुन हजारौं वर्ष समय लागेको छ; यस्तो जङ्गल भएका इलाकाहरू भारतमा धेरै कम्ती संख्यामा छन्, अनि एकपल्ट यो लुप्त भएपछि यसको अर्थ के हुन्छ भने हामीले जङ्गललाई मात्र गुमाउदैनौं तर अझसम्मन् अध्ययन नगरिएको सैकड़ौं उद्भिद् थरिहरूलाई पनि गुमाउनेछौं। भाग्यवश संरक्षणवादीहरूको चापले गर्दा उक्त परियोजनालाई रद्द गर्रिदैछ।

हाम्रै सानाठूला शहर बजारहरूमा पनि चारैतिर प्रहरी बसेको हुँदाहुँदै पनि सार्वजनिक र राष्ट्रिय सम्पतिको मर्यादा र रक्षात्मक सिद्धान्तहरूको कदर भएको छैन साथै पूर्ण रूपले ती सिद्धान्तहरूलाई लागू गराउन सकिन्न। यसबाट यो स्पष्ट हुन्छ कि मानिसहरूमा हाम्रा प्राकृतिक जङ्गलहरूको ध्वंस नगर्ने स्वार्थहीन विचार छ भन्ने कुरोमा विश्वास गर्नु भ्रमात्मक मात्र ठहरिन्छ।

वास्तवमा निर्माण कार्य हुँदै गर्दा पर्यावरण सुरक्षाप्रति ख्याल नराखेकोले परियोजनाको आयु प्रायश: घटेको हो। श्रमिकहरूको गतिविधिले गर्दा ऊपरी भागको वन प्राय: ज्यादै पातलिंदै गएको हो; अघिल्ला पाताहरूमा हामीले देखेअनुसार पातलो जङ्गलले पहाड़मा माटो पक्रेर राख्न सक्दैन। त्यसकारण त्यस नयाँ कृत्रिम तालतिर माटो बगेर जान्छ। पहाड़ी भूमिबाट माटो रित्तिंदै जाँदा ठूला–ठूला रूखहरू त्यहाँ उम्रन सक्दैनन्। ताल चाँडै नै माटो – बालुवाले भरिन्छ अनि पाँच वर्षको अवधिमा परिकल्पित रकमको आधांश जल मात्र त्यहाँ पाइनेछ। दोस्रो पाँच वर्षपश्चात् पानीको मात्रा घटेर यति कम हुन्छ जसमा तलावले कुनै हितकर कार्य गर्न सक्दैन। एउटा विशाल वन क्षेत्रलाई पानीमा डुबाइएको छ, विराट पार्वतीय इलाकाहरूलाई वृक्षहीन पारिएको छ, हजारौं संख्यामा वन्य पशु–प्राणीहरूको घात गरिएको छ। यी जम्मै अर्थहीन छन्। गत ३० वर्षभित्रमा बनिएका धेरैजसो बाँधहरूको प्रतिरूपक किस्सा यस्तै प्रकारको छ।

आखिरी केही वर्षहरूभित्रमा आवह इलाकाको सुरक्षा र पुनर्वनरोपनको लागि समय –समयमा कोषहरू तोकिएका छन्। पछि, जब भाव चर्किन्छ अनि अर्थ–व्ययमा

कटौती गर्ने आवश्यकता पर्छ त्यसबेला आवह इलाकामा पुनर्वनरोपन गर्ने अत्यावश्यक कुरोलाई भुलिन्छ। प्राय: हरेक समय जलमग्न इलाकाहरूबाट स्थानान्तरित भएका ग्रामवासीहरूलाई त्यही इलाकामा पुनर्वास गराइँदाससाना रहलपहल वनहरूको पनि ध्वंस हुन्छ। आकस्मिक जल -दौड़द्वारा थोरै समयमा नै माटो र बालुवाले बाँध भरिन्दा बाँधको जीवन आयु धेरै नै कम भएर जान्छ अनि प्रारम्भिक प्रायोजनाहरू निरर्थक बन्दछन्।

हाम्रो देशमा बनाइएका ४३५ वटा बाँधहरूमध्ये १३ वटाचाहिँ पूरै बेकामे भएको खबर छ जसमध्ये यी बाँधहरू पनि सामेल छन् : कदाह बाँध, पन्चेत बाँध, नानकसागर बाँध, चिक्खोले बाँध, दाँतीवाधा अनि अराइस बाँधहरू, अर्कोतिर अन्य धेरै बाँधहरू आंशिक रूपमा विफल छन्। ठूला बाँधहरूमा उच्चतम दरमा दुर्घटनाहरू भइरहेछन्। ५० वर्षअघि बनाइएको भन्दर्दरा बाँध १९६९ सालमा अरोचक ढंगले चुहुने भए अनि बनिन्दै गरेको १० महीनाभित्रमा भीर बाँधमा दुइ विशाल फाटोहरू उब्जे। कोयनामा भएको प्रचण्ड भूइँचालो बाँध स्थापनाकै कारणमाथि आरोपन गरिएको छ किनभने बाँधले एउटा क्षेत्रको भूमिस्थितिमा दबाव र भार सृष्टि गर्दछ जसको मर्म तथा निर्धारण गर्न आधुनिक उन्नत पद्धति पनि असमर्थ रहेको छ। खेदपूर्ण सत्य के हो भने भारतमा निर्माण गरिएका ठूला बाँधहरूको ९.२ प्रतिशत बाँधहरू भङ्ग भएका छन्-जुन अंकचाहिँ विश्व हरदरको दोबरभन्दा पनि ज्यादा छ।

अन्तमा, बाँधले वास्तवमा कल्याणभन्दा ज्यादा हानि गराउँछ भन्ने सत्य कुरो विशेष बाँध-प्रभावित मानिसहरूले बुझ्दैछन्। उदाहरणार्थ, तेहरीमा बनिन्दै गरेको विशाल बाँधले स्थानीय जनतामा प्रचण्ड विरोधको भावना सृष्टि गरेको छ। यो बाँधले तेहरी शहर, २२ वटा गाउँहरू पूर्ण रूपले अनि आंशिक रूपमा ७६ वटा गाउँहरू डुबाउनेछ। अर्थात् ९००० ऐकर कमाइखाने जमीन ध्वस्त हुनेछ अनि ६०,००० मानिसहरूले आफ्नो घरबार गुमाउन पर्नेछ अनि अन्य कुनै ठाउँमा बसाइँ सर्न पर्नेछ। नि: सन्देह बाँधले उत्पन्न गराएको सरोवरले उत्तराखण्डको एउटा सबैभन्दा फराकिलो खाल्डोलाई ढाक्नेछ। स्थानीय जनताले यो बाँधको प्रतिरोधमा एउटा संघर्ष समिति गठन गरेका छन्। चाखलाग्दो कुरो के छ भने तिनीहरूको बाँधमाथिको अविश्वास आफैले भोगिरहेका असुविधा वा टुट्टामाथि आधारित छैन तर सो छ अन्य बाँधहरूको विगत इतिहास एवं विफलता र ती विशाल बाँधहरूले सृजना गरेका अस्थायी भौतिक अवस्थाहरूमाथि। उदाहरणार्थ, संघर्ष समितिले भनेको छ कि बाँध क्षेत्रको चट्टानयुक्त रचावटलाई विचारी लिंदा करोड़ौ फीट क्षेत्रको कृत्रिम झीलको ओजनले भूइँचालोको सृष्टि गराउन सक्छ।

अपितु यस प्रकारको चट्टानले बनेको जगलाई हेर्दा कुनै दिन बाँधको भित्ता भत्कन सक्ने कुरोले समितिको मनमा डर पैदा गरेको छ, जुन घटना अघि थुप्रैचोटि भइसकेको छ। स्वभावत: बाँधको आकार जति विशाल छ उतिकै विध्वंस एउटा भत्केको बाँधद्वारा हुन सक्छ। अनि अन्तमा वरिपरिका भिरालो पाखाहरूमा उचित रूपमा जङ्गल नभएकोले साथै यसको फलस्वरूप सिल्टेसन भएको कुरोले समितिमा खलबली ल्याएको थियो।

त्यस इलाकाको निम्ति सहसौं प्रकल्पित बाँधहरूमध्ये तेहरी बाँध प्रथम बाँध हो जसको निर्माणमा कसमेकस १० वर्ष समय लाग्नेछ। चीजमालको भाव बढ़ेको वर्तमान कालमा तोकिएको भन्दा धेरै गुणा बेसी खर्च हुँदैन भन्ने कुरोमा विश्वास गर्नु असम्भव हुन्छ न ता पुनर्वनरोपन कार्यको लागि छुट्याएर राखेको रकम अन्यन्य कार्यार्थ प्रयोग गर्न सकिँदैन भन्न सकिन्छ।

हालको अत्यन्त विवादास्पद योजनाचाहिँ नर्मदा बाँध भएको छ जसको कारणले हजारौं मानिसहरू विस्थापित हुन सक्छन्। वरिपरि बस्ने जनताले यस बाँधको विरूद्ध प्रतिवाद जनाएका छन्।

आफ्नो हितमा क्षति पुर्‍याउने विशाल परियोजनाहरूको विरूद्ध स्थानीय जनताले उठाएका मौखिक प्रतिवादहरू मन खिन्न बनाउने स्थितिको परिपेक्ष्यमा एउटा खुशीको कुरो नै ठहर्दछ। भर्खरै गड़वाल-कुमाव पहाड़हरूमा भएको ''चिप्को'' आन्दोलनले जनताको ध्यान पूर्ण रूपले आकर्षित गरेको छ। आफ्नो जीवन यापनको निम्ति जमीनमाथि नै निर्भर गर्नुपर्ने हुनाले ती पहाड़ी मानिसहरू रूखहरूको प्रत्यक्ष अनि अप्रत्यक्ष महत्त्व विषय पूर्णतया अभिज्ञ छन्। त्यसैले जब धेरै संख्यामा काठ काट्ने ठेकेदारहरू जङ्गल पसे, अनि जुन ठेकेदारहरूले तोकिएको भन्दा ज्यादै गुणा बेसी रूखहरू काट्न थाले, रूखहरूलाई बचाउनका निम्ति स्त्री र पुरूष मानिसहरू आपस्तमा संगठित भए। रूखहरूमै टाँसिएर तथा ठेकेदारको बञ्चरो र रूखमाझ आफ्नो शरीरलाई राखेर तिनीहरूले रूखलाई बचाउने काम गरे। पानी र दाउरासित जीवनलाई भरण-पोषण गर्ने प्राय: अन्य जम्मै वस्तुहरूको निम्ति रूखहरूमाथि नै भर पर्नुपर्ने कुरो मानिसहरूलाई थाहा थियो। एउटा पहाड़ी इलाकाका रूखहरू संहार हुँदा त्यहाँ फेरि ती रूखहरू उम्रन नसक्ने कुरोसित पनि तिनीहरू सचेत थिए।

सानो परिमाणमा गरिएको कार्य राम्रै हुन्छ भन्ने सोचाइमा यथेष्ट सुगुणहरू लुकेका हुन्छन्। सानो रूपमा लाभहरू पनि स्थिर रहन्छन् अनि कुनै भूल भएको खण्डमा त्यस भूलले गराएको क्षति पनि सानै हुन्छ साथै त्यसको संशोधन सहजै गर्न सकिन्छ।

नियमअनुगत अधिकांश आदिवासीहरू र जनजातिहरू आफ्ना पर्यावरणहरूसित शान्त भावले मिलेर बस्छन्। तिनीहरूले जङ्गलबाट त्यति नै लैजान्छन् जुन सहजै आपूरण गर्न सकिन्छ। तथापि कोही पहाड़वासीहरूले, विशेष आसामवासीहरूले ''झूम खेती'' गर्छन्। वनको केही भागलाई फांड़फूड़ गरी दुइ-तीन सालसम्म त्यहाँ बाली लगाउँछन्। नयाँ जमीन भएको हुनाले पहिलो वर्षको फसल लहलह भएर आउँदछ; अर्को वर्षको फसल केही कम हुन्छ, अनि तीन-चार वर्षको अवधिमा नयाँ मलजल नपाएको खण्डमा जमीन रूखो बन्दछ। त्यसपछि मानिसहरू फेरि जङ्गलको अर्को भागमा गएर भस्मे फाँड़न शुरू गर्छन्। यस्तो अच्चाकाली हानिकारक परम्परालाई रोक्न सजिलो छैन कारण सैकड़ौं वर्षअघिदेखि यो एउटा परम्पराको रूपमा चल्दै आएको छ, अनि उत्तर-पूर्व पहाड़हरूका केही जनजातिहरूले यस परम्परालाई आफ्नो जन्मसिद्ध अधिकारको रूपमा मानिलिन्छन्।

अनि यथार्थमा जतिञ्जेलसम्म ती जनजातिहरू कम्ती संख्यामा थिए अनि जङ्गलमाथि अरू चाप पर्दैनथ्यो, ती पहाड़ी जङ्गलहरूले उक्त प्रथालाई थामेकै थियो। वर्तमान परिस्थितिहरूको सन्दर्भमा ''झूम खेती'' अत्यन्त क्षतिकरसिद्ध भएको छ, अनि यो आशा गरिन्छ कि सम्बन्धित प्रान्तहरूले यसको रोकथामका उपायहरू निकाल्नेछन्।

पार्वतीय पर्यावरणहरूको विध्वंसलाई दुइ श्रेणीमा विभक्त गर्न सकिन्छ: जानी-बुझीकन गरेको विशाल परिमाणको विध्वंस अनि अपरिकल्पित तथा आकस्मिक ढंगमा गरिएको विध्वंस, जुनचाहिँ हालत ज्यादै खराब भइसकेपछि मात्र चाल पाइन्छ। पहिलो श्रेणीमा पर्ने मुख्य उदाहरणहरूका परिचय हामीले अघि नै पाइसकेका छौं-जस्तै, सड़क र बाँधहरूको निर्माण अनि झूम खेती। कच्चा मालहरूको निम्ति कागज, प्लाइवुड अनि पोलिफाइबर बनाउने ठूला-ठूला उद्योगहरू जङ्गलहरूमाथि नै भर पर्छ। भूल धारणाभन्दा पनि लोभ-लालचकै कारणवश ती मानिसहरूले जङ्गलले दिन सक्नेभन्दा ज्यादा वस्तुहरू जङ्गलबाट लैजान्छन्, अनि अन्तमा सुनौलो अण्डा पार्ने हंसिनीकै हत्या त्यहाँ गरिन्छ।

दोस्रो श्रेणीमा आउने विध्वंसप्रेमीहरूको उदाहरण हो काठपात तथा दाउरा काट्ने व्यक्तिहरू। जुनै जङ्गलमा पनि सदैव प्रशस्त मात्रामा सुकेका काठपात पाइन्छन् तर गत ३० वर्षको अवधिमा भने यसमाथि निर्भर गर्ने मानिसहरूको संख्या धेरै गुणा बढ़ेको छ। अनि इन्धन लोभी मानिसहरूद्वारा हरियो साथै सुकेको काठपात निष्कासन गर्दिँदा जङ्गल रिक्त भइ सकेको छ।

रूखको सन्तान फैलाउने कार्यमा बाधा पुऱ्याउने दोस्रो शत्रुहरू हुन् गाई-गोरू र बाख्राहरू। ती घरेलु पशुहरू स्वतन्त्र रूपमा जङ्गलमा घुमफिर गर्छन्-जुन पालन गर्दै

ल्याएको परम्परा ती गृहपालित जन्तुहरू र मानिसको संख्या कम हुञ्जेल तर जङ्गलको क्षेत्रफल वृहत हुञ्जेल हानिकारक थिएन। अब भने स्थिति ठीक विपरीत भएको छ - जङ्गलमा असंख्य गाईवस्तु हुनु नै विध्वंसको एउटा कारण भएको छ। गाईवस्तुको टेकाइले माटोलाई चाम्रो बनाउँछ अनि नयाँ टुसाहरूलाई उँभो आउनदेखि रोक्छ; अर्कोपट्टि बाख्राहरूले पात र हाँगाहरू मात्र नचुँड़ाएर ससाना घाँस पौधाहरूलाई जरासितै उखेल्छन् जसको विपरितमा भेंड़ाले चाहिँ टुसाको माथिल्लो भाग मात्र खाँदछ। भेंड़ाको वरकौंलाहरूले जमीनको उर्वरता बढ़ाउनमा सहायता गर्छ। पाखा-पखेरूमा चर्दै गरेको भेंड़ाको हूलको दृश्य कुनै पनि संरक्षणकर्ताको निम्ति मनोरञ्जनात्मक हुन्छ भने फेरि त्यहीँ ठाउँमा चर्दै गरेको बाख्राको बथानले उसलाई उदास बनाउँछ । असंख्य बाख्राहरूको बथानले एउटा सानो जमीनलाई चाँड़ै नै मरूस्थलमा परिणत गर्न सक्छ।

वास्तवमा जहाँ भिरालो पाखाहरू प्राकृतिक ढंगमा घाँसले ढाकिएको देखापर्छ, यो सम्भवत: मानिस अनि गाईवस्तुकै गतिविधिले भएको हो भनेर हामी भन्न सक्छौं। पहिलेको आवरण शायद रूख जङ्गलको थियो; तर जमीन अति भिरालो नभएकोले मानिसहरूले यसलाई घरेलु पशुहरूको चरन बनाए, जसको हिँड़डूल र टेकाइले नयाँ वृक्षवृद्धिमा रोकावट आयो, फलत: केवल घाँसहरू आफ्नो प्रभुत्व जमाउन समर्थ भयो। काश्मीरको ''मार्गस्'' वा हरियो पाखाहरू भेड़ा चर्नाको कारणले नै सृजना भएको हो। भेंड़ाले कलिला पौधा र घाँस खाएपछि वृक्षवृद्धिमा बाधा आउँछ। यसर्थ आदर्श रूपमा भन्नु हो भने जम्मै पाखा-पखेरूहरू रूखले ढाकेको हुनुपर्दछ।

हामीलाई याद छ, अति सावधानसित बाँधद्वारा सुरक्षित राखेको जमीनबाहेक भूक्षयको कारणले कृषि उद्योग भिरालो पहाड़ी इलाकामा त्यति भयपूर्ण नभए तापनि अनुचित गतिविधि ठहरिन्छ।

यो सत्य हो कि कतिपय देशहरूमा, जस्तै - जापानमा रूखहरू काटिएका छन् अनि भिरालो पहाड़ी जमीनमा खेतीपाती लगाइन्छन्। होशियारसित जमीनका गराहरू बनाईंछन्, भऱ्याङको खुड़किलाहरूको आकारमा जमीनका पट्टिहरू बनाइन्छन्, जसमा प्रत्येक गरा सम्म छ अनि माटो बगेर जानु सक्दैन; जहाँ वृष्तिपात कम्ती मात्रामा हुन्छ त्यहाँ यो कार्य सम्भव छ साथै जहाँ पानी मन्द गतिमा पर्छ अनि तत्कालै यो पानी जमीनमा सोंसिन्छ। तर भारतमा हाम्रो मौसमी वृष्टिपात मुसलधारे भएकोले भर्खरै खनजोत गरिएको जमीनदेखि बीजबीजनहरू उम्रनभन्दाअघि बाँधहरूको सहायताले मात्र माटोलाई बचाउन सकिन्न। पुरातत्त्वविद्हरूले हालसालै पाएका प्रमाणअनुसार कुनै समयमा कर्नाटकाको वर्तमान नाङ्गो चट्टानी चुचुरामा कृषि उद्योग कार्य कार्यान्वित

भएको हुनुपर्दछ। शायद ती कृषकहरूको गलत परम्पराले गर्दा ती चुचुराहरू नाङ्गो भएका छन्; रूखहरूलाई त्यहाँ रहन दिएको भए अनि खेतीपाती पहाड्को तल्लो स्तर र उपत्यकाभित्र सीमित रहेको भए उत्तम हुने थियो होला। कम्ती ऊँचाइ भएका उपत्यकाहरू नै खेतीपातीका उचित स्थान हुन्। हिमालयभित्र पनि घाँटीहरू प्रायै गर्मी भएकोले त्यहाँ धान जस्ता उष्णकटिबन्धीय अनाजको खेती गरिन्छ; नत्र भए गहुँ, जौं, मकै अनि सागसब्जीहरू खूबै असल रूपमा हुँदछन्। केही थप सुविस्ता र ध्यान दिन सके ती फसलहरूको रकम अझ बड़ाउन सकिन्थ्यो।

कृषि उद्योगभन्दा फलको बगैंचा अनि चिया र कफीको खेती अति उत्तम विकल्प हो, कारण यसो हुँदा कमसेकम जमीन रूखहरूले ढाकेको हुन्छ, यद्यपि थुप्रै थरिहरूको मिसोटको सट्टामा दुइ-चारवटा उत्कृष्ट थरिका रूखहरू मात्र त्यहाँ किन नहोस्। सेउँ (apple), आरूचा (peaches) अनि नस्पाती (pears)-का फल बगानहरू हिमाली पहाड्हरूमा खूबै राम्रा हुन्छन्। अर्कोतिर चिया र कफीको खेती अहिलेसम्म आसाम प्रान्तका पहाड्हरूका न्यानो र मौसमी जलवायुभित्र सीमित छन् साथै दक्षिण भारतका पहाड़ी श्रेणीहरूभित्र। अन्नबालीको खेती विशेष फाँटिलो उपत्यकाहरूमा सफल भएको छ अनि यस्ता ठाउँहरू हिमालय पहाड्हरूमा थुप्रै नै छन्। आजसम्म यस्तो खेती जीवन गुजाराको निम्ति मात्र गरिँदैछ अनि गहुँ र दालहरू जस्ता फसल एउटा सिङ्गो परिवारको प्रयोगको निम्ति मात्र लगाइन्छन्। एक शताब्दीभन्दा अघिदेखि पहाड़ी स्थानहरूमा खेतीपाती यति अलाभदायक भएको छ कि पुरूष व्यक्तिहरू रोजगारको खोजीमा मधेसतिर लाग्न बाध्य हुन्छन्। घरमा बसेर खेतबारी साथै घरपरिवारको हेरचाहको भार स्त्री मानिसहरूले लिनुपर्दछ र उप्जाउको परिमाण पनि त्यस्तै हिसाबले निम्न स्तरमा हुँदछ। तर उच्चतर शिक्षा विज्ञानको प्रयोगद्वारा फसलमा ठूलो सुधार ल्याउन सकिन्थ्यो। विशेषज्ञहरूको अनुभवअनुसार निलगिरि र पश्चिमी घाट इलाकाहरूमा लगाइएका कफी, कोकोआ, अलैंची अनि मरिच जस्ता नयाँ फसलहरू हिमाली उपत्यकाहरूमा पनि उमार्न सकिन्थ्यो। ती फसलहरू उच्च दामका तर कम्ती ओजनका भएकोले ती क्षेत्रहरूमा लगाउन सकिन्छ जहाँ फसललाई बजारहरूमा लैजाने यातायातको मोल महँगो पर्दछ।

हिमालय पर्वतहरूलगायत अन्य दुर्गम पर्वतहरूको पनि कुनै भाग शायद छैन जहाँ मानिस पुगेको छैन। एउटा निर्दिष्ट क्षेत्रले कुनै मानव गतिविधिलाई थाम्नु नसकेकोमा सो क्षेत्रलाई पर्यटकहरूको निम्ति प्रयोग गरिन्छ। एउटा होटलले एभेरेष्ट पर्वतको

फेदीसम्मै पर्यटकहरूलाई ल्याउने काम गर्दछ। सहस्रौं मानिसहरूलाई मनोरञ्जन दिन सक्ने अनि देशमा प्रशस्त विदेशी धन ल्याउन सक्ने दोषरहित गतिविधिको रूपमा यो देखापरे तापनि पर्वतहरूको स्वास्थ्यको निम्ति पर्यटन गतिविधि खतराको अर्को कारण मानिन्छ।

पर्यटकहरूको सुविधाको निम्ति पानीबाहेक धेरै परिमाणमा इन्धनको व्यवस्था पनि गरिनुपर्दछ जसले गर्दा वरिपरिका जङ्गलहरूको लुटमार हुने गर्दछ। दुर्गम स्थानहरूमा जबर्जस्त सड़कहरूको निर्माण हुँदा त्यसको नतिजा के हुन्छ सो हामीलाई अघि नै थाहा भएको कुरो हो।

मानव हस्तक्षेप जति कम हुन्छ उति नै स्वस्थकर पार्वतीय प्रणाली बन्दछ भन्ने कुरोलाई हामी स्वीकार गर्छौं। अभाग्यवस विशाल अनुपातमा बढ़िरहेको जनसंख्याको कारणले पार्वतीय सम्पद्को झट्टै प्रयोग नगर्ने विचारलाई असम्भव पार्दछ। उच्च हिमालयमा पर्वतारोहन गर्दा देहान्त भएका एक प्रसिद्ध पर्वतारोही विषय एउटा कहानी छ। उ हिन्दु भए तापनि आफ्नो पार्थिव शरीरलाई नजलाएर माटोमनि गाड़ने आदेश उनले दिइराखेका थिए कारण आफ्नो प्राणप्रिय पर्वतहरूका निम्ति उनको देहान्तवस एउटै रूख पनि गुमाएको उनले चाहेनन्।

हालसालमा जनप्रिय भएको (अनि स्वस्थकर) ट्रेकिङ तथा पर्वतारोहण जस्ता क्रियाकलापले कतिपय अन्य थरीका समस्याको सृजना गरेको छ। त्यसमा प्रमुख हो फोहोरमैला व्यवस्थापनको समस्या र यसमा जैव-रद्दी पनि अन्तर्भुक्त छन्। कतिपय कर्तव्यनिष्ठ मानिसको समूहचाहिँ खाल्टा खन्ने र ती खाल्टामा टिन तथा प्लास्टिकका बट्टाहरूलगायत सबै मैला-कुचेला गाड़ने प्रयत्न गर्छन्। उनीहरू आफ्नो पद-चिह्न सिवाय अरू केही पनि पछि छोड़ेर न आएकोमा गर्व गर्छन्। तर सबै पर्वतारोहीहरू यस्ता ईमान्दार हुँदैनन् र निकट भविष्यमा हिमालयका कुनै-कुनै ढालहरू शहरतिरका मैला फ्याँक्ने स्तुपजस्तो देखिन थाल्छ भन्ने आशंका छ।

पर्वतहरूलाई एउटा उपयोगी कलपूर्जाको रूपमा विचार गरौं। लगातार चलाइरहनका निम्ति तिनीहरूलाई हामीले समय-समयमा सफा गर्न, तेल लगाउन तथा मरम्मत गरिरहनपर्दछ। लापरवाही र दुरूपयोगद्वारा एउटा कलपूर्जा चाँड़ै नै बेकामे बन्नेछ। पर्वतहरूलाई पनि स्वस्थ राख्न, देखभाल गर्न अनि स्याहार-सुसार गरिरहन आवश्यक हुन्छ, नत्र भए जुन कुराहरूको निम्ति तिनीहरूमाथि हामी भर पर्छौं सो तिनीहरूले गर्न सक्नेछैनन्। आफ्नै हितलाई ध्यानमा राख्दै हामीले यति मात्र लिनपर्छ जति पर्वतहरूले हामीलाई दिन सक्तछन्।

हामी धेरैजसोका निम्ति पर्वतहरू एउटा आर्दश क्रीड़ास्थल हो। चाहे हामी पहाड़मा हिँड़डूल र चढ़ने-ओर्लने शारीरिक गतिविधिबाट आनन्द उपभोग गरौं तथा प्राकृतिक परिवेशमा रहेर आनन्दका क्षणहरू चूपचापसित मनाउँ तथा हिमालय पर्वतहरूलाई हेर्दा हामी धेरैको मनमा उत्पन्न हुने त्यो अलौकिक उद्‌वेगको अनुभव गरौं, हामी के देख्छौं भने जम्मै पर्वतहरूमा हामीलाई प्रेरणा दिने शक्ति निहित छ। हाम्रा पर्वतहरूलाई बिमारी पार्ने काम हामीले गर्नु हुँदैन।

# जङ्गलहरू

## I

## *जुन रूपमा तिनीहरू हुन्थे*

यो कुरो प्राय: धेरैपटक भनिएको छ कि भारतको सबैभन्दा ठूलो धन हो सूर्यप्रकाश, किनभने सूर्यबाट पाइने ताप र प्रकाश नै सबै जीवित वस्तुहरूको सञ्चालन र उर्जाको अन्तिम श्रोत हो। तर सूर्यप्रकाशले मात्र एउटा मरूस्थललाई प्राण हालेर सजग र हराभरा बनाउन सक्दैन – सूर्यको साथ पानी र माटोको सम्मिलनले मात्र एउटा विपुल वनस्पति जीवन तयार हुन सक्छ। यस प्रकारको सम्मिलन भारतका अधिकांश इलाकाहरूमा पाइन्छ भिन्न-भिन्न मात्रा र अनुपातमा। अनि यस्तै प्रकारले जहाँ कुनै एउटा जमीनक्षेत्र बाँझो रहेको छ भने अथवा त्यहाँ मानिस त्यति बाक्लो रूपमा बसोबासो गर्दैनन् भने त्यहाँ प्राकृतिक जङ्गल आफैआफ सृजना भएको हुन्छ।

वास्तवमा प्राचीन कालमा जब जनसंख्या कम मात्रामा थियो अनि घोड़ा र गोरूगाड़ीद्वारा मालमत्ता बोकिन्थ्यो, हाम्रो देशका अधिकांश भाग विभिन्न थरिका जङ्गलहरूले ढाकेको थियो, विशेष गरी पहाड़ी इलाकाहरूमा जहाँ मानिसको बसोबासो तथा आवादी पातलो थियो अनि खेतीपाती गर्न कठिन पर्थ्यो। वृक्ष नभएका इलाकाहरू जस्तै मथुराको मन्दिरहरूमा पाइने गैंड़ा र सिंहको मूर्तिकलाले एक समयमा ती ठउँहरू जङ्गलले ढाकेको थियो भन्ने कुरा प्रमाण गर्छ अनि जुन जङ्गलहरूले ठूला-ठूला स्तनपायी जन्तुहरूलाई आश्रय दिएका थिए। अन्य वैज्ञानिक प्रमाणबाहेक इतिहासका कथाहरू पढ्दा हामी के पाउँछौ भने नायक-नायिकाहरू निरन्तर जङ्गलभित्र हिंडिबस्थे। जङ्गल घरकै नजीकमा पाइन्थ्यो।

एउटा खुल्ला, रित्तो अनि बाँझो जमीनको टुक्राको चित्रण मनमा गरौं। केही बिउहरू त्यस जमीनमा झर्छ, हुन सक्छ ती बिउहरू हावाद्वारा तथा पशुका गोबर वा सुलीद्वारा वा चराहरूका प्वाँखद्वारा तथा ठूला जन्तुहरूका भुत्लाद्वारा बोकिएर त्यहाँ ल्याइएका छन्। जमीन कमलो अनि ग्रहणशील छ - मानिसको पाउले तथा पशुको खुरले जमीनलाई

चाम्रो बनाएको छैन। आकाशबाट वर्षा आउँछ, बीजहरू सम्भवत: नउम्रन पनि सक्छन् तथा उम्रेका ससाना पौधाहरू खड़ेरीले मर्न सक्छन्, तर कोही समय वातावरण अवश्यै रोचक बन्दछ जुन बेला भूइँमा झरेका बिउहरू टुसाउँछन् अनि समयान्तरमा रूखहरू हुन्छन्। त्यसपछि पहिलो टोलीसित अन्य बिउहरू पनि आएर मिल्दछन्,' अनि त्यहाँ अब कलिला वृक्षहरू, झाड़ीहरू, लहराहरू अनि अन्य सूर्यप्रेमी उद्भिद्हरूको समुदाय स्थापना हुँदछ, सबै उद्भिद्हरू उचित प्रकारले संगठित हुने कार्यमा संघर्ष गरिरहेका पाउँछौं। ससाना जन्तुहरू, चराहरू अनि कीटपतंग उक्त उद्भिद् समुदायमा प्रवेश गर्छन्। उद्भिद्का पातहरू, फलफूलहरू तथा गुलियो रस खानका निम्ति अनि ती पशुप्राणीहरूले अरू बिउहरू बोकेर ल्याउने काम गर्छन् (गोबर वा सुलीबाट खसाएका बिउहरू तथा शरीरको भुत्लासित टाँसिएका बीजहरूद्वारा)। चाँड़ै वृद्धि हुँदै गरेका विभिन्न अवस्थामा थुप्रै उद्भिद्हरू यो सानो जङ्गल क्षेत्रमा पाइन्छन्। जुन उद्भिद्को निम्ति उपलब्ध वातावरण रोचक छ त्योहरू मात्र बाँच्न तथा फस्टाउन सक्छन्, कोही उद्भिद्ले अरूलाई धकेल्दै लान्छ भने समयान्तरमा शायद ती उद्भिद्हरू स्वयं पनि अरू उद्भिद्हरूद्वारा धकेलिन सक्दछन्।

समयको यस अवधिमा उद्भिद्हरूले बिउ निकाल्दै गरेका पाउँछौं जसद्वारा फेरि कलिला पौधाहरूको नयाँ बाली तयारी हुन्छ। केही वर्षहरूपश्चात् रूखहरू पूर्ण तौरले बढ़िसकेका हुन्छन् अनि त्यसबेला हाम्रो सानो जमीनको टुक्राले एउटा जवान जङ्गलको आकार लिदैंछ। रूखहरूको सियाँल भूइँमाथि उम्रने झारपातको निम्ति अरोचक ठहरिन सक्छ तथा सियाँलले झारपातलाई पटक्कै उम्रन नदिन पनि सक्छ अनि विभिन्न प्रकारका सियाँलप्रेमी उद्भिद्जातीय ऊनीउहरू (जसको वृद्धिमा सियाँल रोचक ठहरिन्छ) अब देखापर्छन्। चराहरू, पशु-पंक्षीहरू अनि कीटपतंगको सन्तान फैलिनेछन्, नौलो थरिहरूको प्रवेश हुन्छ, किनभने त्यहाँ अब धेरै प्रकारका खाद्यहरू उपलब्ध छन् अनि त्यहाँ ती उद्भिद्वर्गले भर्नुपर्ने थुप्रै ''रिक्त स्थानहरू'' छन्। हाँगाहरू र रूखहरूको माथिल्लो भागले रचेको चँदुवाभित्र धेरै ऊँचाइमा बस्ने जीवजन्तु, जस्तै- पातप्रेमी चरा र बाँदरहरूको लागि प्रशस्त ठाउँ पाइन्छन्; मध्यतला र वृक्ष-स्कन्धमा नटध्याच, लाहाँचे अनि लोथर्केहरू बस्छन्; त्यहाँ पोथ्राहरू पाइन्छन् साथै भूइँमाथि घाँस र रूखबाट झरेका पातहरू अनि कुहुदै गरेका काठहरू पाइन्छन्। यो ठाउँमा धेरजसो चारखुट्टे जन्तुहरू बस्छन् साथै धेरजसो सर्पहरू, सरीसृप अनि केही भूइँपक्षीहरू बस्छन्। केही समयपछि ठूला जन्तुहरू जङ्गलतिर गएर सुरक्षित भई बस्छन्। मृग जातीय पशुहरू घाँसको खोजीमा,

बनेल जराको अनि बाँदर फलहरूको खोजीमा निस्कन्छन्। यी जन्तुहरू स्वयं बिरालो परिवारभित्र पर्ने बाघ र चितुवा जस्ता "राजाहरू"-का आहार हुन्, यद्यपि ससाना जन्तुहरू तथा आहारयोग्य थरिहरूका जीवन ती अपहारकहरूबाट लगातार जोगिएर बस्नुपर्दा भयपूर्ण अवस्थाको भए तापनि यस कुरोले ती जन्तुवर्गका भण्डारलाई स्वस्थ राख्न मद्दत गर्छ कारण साधारणत: बूढ़ो र बिमारी पशुहरू नै समातिन्छन् अनि मारिन्छन्।

प्रत्येक थरिले पारिस्थितिकिविद्को शब्दमा सम्बोधन गरिएका आफ्नै विशेष स्थान ओगटेर बसेको हुन्छ– अर्थात् यसको वास्तविक आवश्यकताहरू अरू थरिहरूको देखि भिन्दै प्रकारको हुन्छ। उदाहरणार्थ, केही चराहरू भूइँमा तथा भूइँदेखि केही नजीकमा बस्छन् अनि झरेका पातहरूभित्र भएका कीट-पतंग र खुमले किराहरू आहारस्वरूप खान्छन्; नटथ्याच तथा लाहाँचेहरूले रूख-स्कन्धका बोक्राका प्वाँलहरूमा लुकेर बसेका कीराहरू टिपेर खान्छन्; कोही चराहरू अग्ला वृक्षहरूका माथिल्लो तहबाट आहार बटुल्छन्; कोही चराहरूले उड्दै गरेका कीट-पतंगलाई पनि समात्न सक्छन् अनि बाहिर आँखा डुलाउनको लागि तिनीहरूलाई बस्ने ठाउँको आवश्यकता हुन्छ; कोही चराहरूले पखेटाद्वारा केही ठूला परिमाणका आहारहरू बटुल्छन्; अर्कोपट्टि अन्य चराहरू जस्तै गौंथलीले लामखुट्टे र भुसुनो खोजी खान्छन्, अर्थात् थुप्रै प्रकारका चराहरू र पशुहरू भए तापनि ती प्राणीहरू एकअर्कामाझ आहारको लागि ठोकाबाजी गर्दैनन्। तिनीहरूले आ-आफ्नै भोजन अनि फेरि आ-आफ्नै तरिकाहरू अपनाउदै खोजी निकाल्छन्।

घाँस खाने ठूला पशुहरूमा पनि विशेष प्रकारको खाद्य आचारण पाइन्छ। सबै घाँस खाने पशुहरूले एउटै किसिमको घाँस खान्छ भन्ने धारणा प्राय: हामीसित छ। तर वास्तवमा केही पशुहरूले घाँस खाए तापनि कोहीले पात मात्र खान्छन् अनि कोहीले दुइटा नै खान्छन्। भिन्न-भिन्न पशुहरूले एउटै घाँसलाई यसको विभिन्न वृद्धि अवस्थामा खाँदछन्। कतिपय पशुहरू खूबै छनौट गर्छन्, कुनै एउटा घाँसपातको प्रसंगमा मात्र होइन तर कुनै एउटा विशेष चरणस्थल लिएर पनि। उदाहरणको निम्ति, चितुवाले केही पातलो जङ्गलहरू अनि खुल्ला ठाउँ भएको समतलभूमि मनपराउँछ; सम्बरले पहाड़ी जङ्गल मनपराउँछ भने कालो मृगले चारैतिर फैलिएको अर्ध-सुखा घाँसे मैदानहरू रूचाउँछ।

पशुहरूमा अनुकूलन गर्ने शक्तिको मात्रा पनि अधिक परिमाणमा भिन्दा-भिन्दै छन्। अरोचक परिवेशसित कोही प्राणीहरू सहजै मिलेर बस्न सक्छन् भने अर्कोतिर

कतिपय वर्गका पशुहरू आफ्नो आवश्यकताको एउटा सानो अंश पनि अनुपस्थित रहे मर्दछन्। यसलाई प्रकृतिशास्त्रीहरू "सीमान्त कारक" (limiting factor) भन्दछन्, अनि बाहिरबाट हेर्दा राम्रै देखिए तापनि कोही प्राणीहरू कुनै विशेष स्थितिमा फस्टाउन असफल भएको कारण पनि यही सीमान्त कारकले नै बन्दछ।

जङ्गलको चरा, पशु र कीटपतंगको विशेष प्रकारको खाद्यादतको महसूस गरेपछि मात्र एउटा सानो टुक्रा जङ्गलले कसरी धेरै जीवित प्राणीहरूलाई पाल्न सक्छ भन्ने कुरो बुझ्न सक्छौं। अन्य देशहरूको तुलनामा भारतमा धेरै किसिमका खाने फल-फूलका वृक्षहरू छन् भन्ने कुरो थाहा लागेको छ। पूर्ण रूपले फल मात्र खाएर बाँच्ने थुप्रै प्रकारका चराहरू त्यहाँ पाइन्छन् अनि वर्षको कुनै ऋतुहरूमा खाद्यपदार्थको अभाव भए तापनि त्यहाँ कुनै समयावधि पाइन्न जब चराहरूको निम्ति खाने कुरा ठ्याम्मै उपलब्ध हुँदैन। अत्यन्त सुखौरा महीनाहरूमा पनि जब जङ्गलमा कुनै खाद्यवस्तु छैन भन्ने भान हुन्छ ती पातझरूवा वृक्षहरूका हरिया मुनाहरूका सहायताले जङ्गलवासीहरू सुस्वस्थ नै रहन्छन्। एउटा अचम्भको कुरो यही हो कि वर्षको सबैभन्दा गर्मी र सुखौरो समयमा ती मुनाहरू पातमा परिवर्तन हुँदछन्।

हामीले देखाउन खोजेको के हो भने विभिन्न वन्य उद्भिद्-प्राणीहरूले एकअर्काको क्षेत्रमा हस्तक्षेप गर्दैनन्। कहिलेकाहीँ केही मात्रामा अतिव्यापी भएको पाइन्छ तर मोटामोटी प्रत्येक उद्भिद्-प्राणीको आफ्नै विशेष क्षेत्र छ, अनि त्यहाँ अन्यन्य वर्गहरूका अधिकारमाथि अतिक्रमण हुँदैन। जङ्गली वनस्पति र प्राणी जीवनको प्रत्येक अंश र पक्ष प्रयोग गरिन्छ अनि त्यसबाट फाइदा उठाइन्छ अनि वन्य संसारभित्र भएका मिश्रित ढंगको आपसी सम्बन्धीहरूलाई अङ्कित गर्ने वा जोड्ने परम्परागत एउटै वाक्यांश हो "जीवनको जाल"। जब हामी विभिन्न परिमाणमा टाढ़ास्थित अनि परोक्ष तत्त्वहरूमाथि प्राय: भरपर्ने हरेक जीवजन्तु विषय सचेत हुन्छौं, त्यसबेला नपत्याउँदो परिवृत्ति तथा अन्तरहरू पनि कति महत्त्वपूर्ण हुँदारहेछन् भन्ने कुरो हामीलाई थाहा हुन्छ; एउटा सानो तत्त्वभित्र भएको तुच्छ हेरफेरले कसरी विशाल परिवर्तन गराउन सक्छ सो हामीलाई अनुभव हुन्छ।

यो पनि साँचो हो प्रकृतिका चक्काको ती जोल्ठिएका दाँतहरूले एउटा संकटबाट पुनरूद्धार हुन सक्ने मौका हामीलाई दिलाउँदछ। खड़ेरी परेको खण्डमा तथा जङ्गलमा आगो लागे तथा कोही पशुप्राणी रोगग्रस्त भए कतिपय समर्थक तत्त्वहरूले अल्प समयभित्रमा नै सामञ्जस्य ल्याउने उचित कार्य गरिहाल्दछन्। भावात्मक तौरमा

पशु-प्राणी नभएको जङ्गल सम्भव हुन सक्ला तर यस्तो जङ्गल मानवकृत अप्राकृतिक वृक्षहरू उभिएको ठाउँ मात्र हुनेछ। अनि प्राणीजगत्बाट पाइने सहयोगको अनुपस्थितिमा प्राकृतिक ढंगको उत्पति तथा पुनरूत्थान क्रिया खूबै सीमित रहन्छन्।

एउटा विशाल क्षेत्रको जङ्गल सबै थोकले भरिपूर्ण अनि स्वसञ्चालित सत्ता हुन आवश्यक छ, साथै अनन्तकालसम्म पुनर्उत्थान हुँदै बाँचिरहन सक्छ। यसका सिमानाहरूभित्र जीवन निश्चल नभए तापनि स्थिर छ कारण त्यहाँ परिवर्तनशील गतिविधिहरू लगातार चलिरहन्छन्। एउटा ऋतुमा कुनै एउटा वृक्षमा भारी मात्रामा फल लाग्छ। यस वृक्षका फलहरू खाने चरा-चुरूङ्गी वा पशुहरू सन्तान उत्पन्न गर्ने स्थितिमा हुन्छन्। यस क्रियाकलापले घटनाहरूको एउटा शृंखला सृजना गर्दछ जसले अपाहारीको संख्या वृद्धि हुन्छ , कारण प्रकृतिको साधारण नियमअनुसार खाद्य आपूर्तिमा वृद्धि हुनु नै अपाहारीहरूको संख्या वृद्धि हुनु हो। त्यसो हुँदा आहारका जन्तुहरूलाई बाँच्न साह्रै पर्छ फलत: तिनीहरूको संख्या घट्दछ।

आउँदो वर्षमा यो विशेष खाद्यको मात्रा कम्ती हुँदछ अनि त्यसो हुँदा विपरीत स्थिति पैदा हुन्छ। जब साधारणत: सीमादेखि बेसी एउटा थरीको संख्या बढ्छ, त्यो सँगसँगै अपहारी पशुको संख्या पनि बढ्छ, अनि आहार खोज्ने प्रतियोगितामा दुर्बल र नालायकहरू पराजित हुन्छन् अनि मर्छन्-त्यसबेला घड़ीको लङ्गुर फेरि एकपल्ट हरदर संख्याप्रति फर्कन्छ। उदाहरणको निम्ति, लाटकोसेरोहरू र मूसाहरूका माझमा भएको सम्बन्ध हामी सबैलाई याद छ। मूसाको संख्या वृद्धि भएको त्यो वर्षमा लाटोकोसेरोले थुप्रै अण्डाहरू काड़छन्।

जङ्गलको मूल आधार नै यसभित्र भएका वृक्षहरू हुन्। सर्वप्रथम रूखहरू नहुञ्जेल त्यहाँ अरू कुनै प्रकारका जीवित वस्तुहरू हुँदैनन्। अनि रूखबाहेक अरू सजीव वस्तुहरूको जीवनमा देखापर्ने घट्ती र बढ्ती अनि उत्थान र पतनले अन्तमा एउटा सन्तुलित रूप लिंदछ यदि वृक्ष संख्या प्रचुर अनि जोरदार छन् भने। जब हामी बहुसंख्यामा पाइने नाना प्रकारका पशुहरू, चराहरू, कीट-पतंग अनि सरीसृप विषय विशेष बहस गर्छौं अनि जसले आफ्नो आहार र आश्रय जङ्गलबाट नै प्राप्त गर्छन्, एक प्रकारले हामीले आवश्यक विषयमाथि नै चर्चा गरिरहेका हुन्छौं। तर कुन कुरोलाई हामी प्राय: भुल्दछौं भने पशुपक्षी मात्र होइन मानिसले पनि आफ्ना जम्मै आवश्यकताहरू जङ्गलबाट नै प्राप्त गर्छन् — याद राख्नुपर्ने शर्त यही छ -निश्चय नै जनसंख्या बेसी मात्रामा हुनुहुँदैन। जनजातिवर्ग प्राचीनकालदेखि जङ्गलभित्र नै बसोबासो गर्दै आइरहेछन् —

आफ्ना भोजन, आश्रय, लुगाफाटा अनि औषधि जस्ता खाँचोहरू उनीहरूले वन्य उपजबाट नै प्राप्त गर्छन्। कोही जनजातिहरू बहु प्रकारका हस्तकला र आफूलाई चाहिने सुविस्ताका सामग्रीहरू तयारी गर्न सफल भएका छन्; बाँकी जनजाति अहिले पनि खूबै सरल जीवन बिताइरहेछन्। तर प्रमाणित भइसकेको एउटा सत्य कुरो के हो भने एउटा स्वस्थ जङ्गलले मानव समाजलाई थाम्ने प्रशस्त सामग्रीहरू उप्जाउन सक्दछ अनि उप्जाइरहेछ।

जब जङ्गलको क्षेत्रफलमा घट्ती आउँछ त्यसको फलस्वरूप जनजातिहरू शहरीया जीवन अपनाउन बाध्य हुन्छन्। वन्य खाद्य, फलफूल, जड़ीबुट्टी, जरा र पातहरू विषय उनीहरूमा भएको ज्ञान लुप्त हुने डर छ जसमाथि उनीहरूको जीवन-संस्कृति कैयौं शताब्दीसम्म आधारभूत रहेका थिए। त्यसबाहेक वन्य पशुप्राणीहरूको चालचलन अनि जीवन-स्वभावसित अधिकांश जनजातिवर्ग शुरूदेखि नै सुपरिचित छन् जुन कुरो प्रकृति वैज्ञानिकहरूले बुझ्नको निम्ति धेरै वर्षको कठिन परिश्रम र अध्ययनको आवश्यकता पर्दछ।

यदि जङ्गल सम्पूर्ण रूपले एउटा स्वतन्त्र संसार हो भने जहाँ विविध वर्गका जीवित वस्तुहरू पारस्परिक प्रभाव र सहयोगभित्र बाँच्छन्, कस्तो फाइदा जङ्गलले यसबाहिरका जमीन र जीवित वस्तुहरूलाई पुऱ्याउँछ त? के एउटा विशाल जङ्गलले नि: सन्देह सुन्दर र आफूभित्र भरपूर भए तापनि यसको बाहिर रहेको देशको बाँकी भागलाई कुनै अवदान गर्छ? जङ्गलले निश्चय नै अवदान प्रदान गर्छ भन्ने कुरो जोरदारसित भन्न सकिन्छ।

सबै कृषकहरूलाई थाहा छ कि जङ्गलको छेउमा खेतबारी हुनु अत्यन्त फायदाजनक छ। केही यस्ता फायदाहरू यस प्रकार छन् :

- एउटा जङ्गलले आकाशको पानीलाई पक्रन्छ अनि भूइँमुनिको जलाशयमा पठाउँछ। अघिल्लो अध्यायमा यस विधिको वर्णन गरिसकेका छौं।
- जङ्गल छयाँलु भएकोले त्यहाँ शीतलता पाइन्छ। यसबाहेक पातहरूको विशाल समूहमा भएको उत्स्वेदनले वरिपरिका वायुमण्डललाई असर पार्छ; जङ्गल वरिपरिको इलाका साँच्ची नै शीतल हुन्छ, विशेष दिनभरि पोल्ने घाममा काम गर्नुपर्ने व्यक्तिहरूका निम्ति। राँची र पुने छेउका जङ्गलहरू काटिएकोले ती शहरहरू ज्यादै गर्मी भएका छन्।

- सूर्यको प्रचण्ड तापबाट केही अलग रहेर उम्रेको घाँसपात गाईवस्तुको निम्ति उत्तम र पौष्टिक ठहरिन्छ, विशेष गरी प्रचण्ड गर्मी महीनाहरूमा। त्यसकारण मालिकहरूले भोजनको निम्ति गाईवस्तुलाई जङ्गलतर्फ धपाउँछन्। अल्प मात्रामा यो मुनासीब नै छ – यस विधिले गाईवस्तुको कल्याण हुन्छ अनि जङ्गलको नोक्सान गर्दैन। गाईवस्तुको संख्या धेरै गुणा बढेकोले अनि जङ्गल क्षेत्रफल घटेकोले पशु-चरन जङ्गलको पुनर्जीविकरण क्रियामा ठूलो बाधा हुन गएको छ।
- किसानहरूको निम्ति नजीकको जङ्गलले अन्यन्य फाइदाहरू पनि दिन्छ जुन कुरो सहजै देख्न सकिँदैन। हावाले गराएको भूक्षयको रोकथाममा जङ्गलले ढालको काम गरेको यथार्थ कुरो स्पष्ट रूपमा देखिँदैन। जोड़तोड़ले हावा चलेको समय एउटै वृक्षको आयतनले पनि हामीलाई सुरक्षा दिन्छ, कारण वृक्षको सुरक्षितपट्टिमा शान्तताको कुण्ड पाइन्छ। धेरै माइल टाढ़ासम्म फैलिएको जङ्गलको ठूलो पर्खालले सृजना गरेको निस्तब्धताको क्षेत्रफलको कल्पना गर्नुहोस्। वायुवेगलाई रोक्न सक्ने जङ्गल किसानहरूको निम्ति अत्यन्त मुख्य ठहरिन्छ। जुन धुलोका बादलहरू खुल्ला विस्तृत ठाउँहरूमा प्राय: नै उड़िरहेका हामी देख्छौं, तिनीहरू वास्तवमा खेतबारी खनजोत भएको समय माटोको माथिल्लो मलिलो भाग हावाले बहाएर ल्याएको हो। हावाको वेगलाई छिन्नभिन्न पारेर जङ्गलले वरिपरिको जमीनको उर्वरतालाई सुरक्षित राख्छ।
- जङ्गलले किसानवर्गलाई अझै अर्को एउटा फायद दिन्छ जुन कुरोको मूल्यांकन उचित रूपमा भएको छैन। ध्वंसकारी प्राणीहरूको विरूद्धमा जङ्गलले ढालको काम गर्छ। ध्वंसकारी प्राणी भन्नाले एउटा पशु तथा कीरा-फटेङ्ग्रा बुझिन्छ जो आफ्नो स्थानमा नरहेर अनुचित स्थानहरूमा हिँड़डूल गरिरहन्छ तथा जसको संख्या अत्यधिक मात्रामा फैलिएको छ। यो घटना कुनै कारणबस एउटा जन्तुको खाद्यको आकस्मिक वृद्धि भएको समय हुन्छ (जस्तै, खेतबारीमा अन्नबाली पाकेको समय); अर्कोपट्टि, अपहारकको संख्या त्यहीँ अनुपातमा बढ़ेको हुँदैन र आहारका जन्तुले चाँड़ै सन्तान फैलाउने साथै विशाल मात्रामा क्षति पुऱ्याउने अवसर पाउँछ। एउटा असल जङ्गलको पसार नजीकैमा भए नाशकारी जन्तुका प्राकृतिक शत्रुहरू पनि नजीकैमा रहेको बुझिन्छ, कारण एकअर्कामाथि भरपर्ने चराहरू, पशुहरू, कीटपतंगहरू अनि सरीसृपहरू र उद्भिद्हरू जङ्गलमा भरपूर भएकोले कुनै कीटपतंग तथा पशुले देशानको रूपमा फैलिने मौका त्यहाँ पाउँदैन।

वास्तवमा जङ्गल क्षेत्रभित्र नै तथा जङ्गलको नजीकमा खेतीपाती गर्नु वाञ्छनीय ठहरिन्छ अनि त्यसैले किसानहरू यस्तो जमीन हात पार्न मरिमेट्‌दछन्। ती क्षेत्रहरूमा पानीका मुहानहरू तथा उच्चतम जल-सतह हुने सम्भावना रहेको हुन्छ। माटो उच्च स्तरको हुनेछ कारण त्यहाँ कम्ती मात्रामा भूक्षय भएको छ। खास गरी जङ्गल स्वयं नै नयाँ माटोको स्रष्टा हो कारण हाँगा-पातहरू कति सय वर्षसम्म कुहुन्दा त्यसबाट माटो बनिन्छ। जङ्गलले ताजा माटो निकालिरहन्छ अनि नाशक रोग निक्कै मात्रामा समाधान हुन्छ।

यो साँचो हो हरेक किसानले जङ्गलकै समीपमा जमीन पाउन नसक्ला, तर शायद यस कठिनाइलाई अर्कै प्रकारले हल गर्न सकिन्छ। शायद हामीले हाम्रा खेतीको वरिपरि जङ्गलका थुप्रै ससाना टुक्राहरू लगाउन सक्छौं। एउटा सम्पूर्ण रूपको प्राकृतिक जङ्गल त्यहाँ हुन सके अत्युत्तम कुरो हुनेछ, तर यसको सट्टामा आफै उम्रेका स्थानीय वृक्षहरूले बुद्धिमानी ढंगमा बनेको जङ्गल पनि उत्तिकै राम्रो हुन सक्छ।

जङ्गलले पानी पराउँछ भन्ने हाम्रो ठूलो धारणा छ तर यो कुरो कहिले पनि सन्तोषजनक रूपमा प्रमाणित भएको छैन। एकदुइवटा प्रयोगहरू हालैमा दक्षिण भारतमा आरम्भ गरिएका थिए तर खोजिनिकालिएका तथ्यहरू निश्चित थिएनन्। एउटा इलाकामा जङ्गलहरू रोपेर पानीको परिमाण बढ़ाउन सकिन्छ भन्ने कुरो प्रमाण गर्नको निम्ति लामो अनि लगातार अध्ययनको खाँचो पर्छ। अर्कोपट्टि, प्रत्यक्ष रूपमा विपरीत घटना भइरहेको हामी देख्छौं —घनघोर वृष्टिपात हुने इलाकाहरू नचलाइराखे त्यहाँ जङ्गलहरू उत्पन्न हुन्छन्। शायद जङ्गलले आकाशको पानी संचय गरेर राख्छ भन्ने व्यापक मात्रामा चलेको विश्वासको कारण हो साँच्ची नै जङ्गलको समीपमा सदैव पाइने पानीका मुहानहरू। जङ्गलले पानी बचाउँछ अनि जमीनमुनि जल परिमाणको वृद्धि गर्छ भन्ने कुरो हामीले देख्यौं, जसमा विशेष पहाड़ी ठाउँहरूमा, जङ्गलको छेउमा अनि जङ्गलभित्र नै पनि पानीका मूलहरू पाइन्छन्। ती पानीका मूलहरूले आफ्नो पालोमा नयाँ उद्भिद् जगत्‌लाई फस्टाउँदछ, जङ्गल बाक्लिएर आउँछ अनि बाहिरतिर फैलिन थाल्छ, अतिरिक्त जमीन क्षेत्र ओगट्दै अन्तमा जमीनमुनिको पानीको सतहलाई बढ़ाउँछ।

हामी भारतवासीहरूको निम्ति जङ्गल नै हाम्रो भूमिको प्राकृतिक रक्षावरण हो। एउटा राम्रो अवस्थाको जङ्गल छ भने जमीनको अवस्था पनि पूर्ण तौरले राम्रै रहन्छ; जम्मै प्राकृतिक तत्त्वहरू — पानी, वायु, माटो अनि प्राणी जीवन परस्परमा मिलेर सर्वोच्च परिमाणमा पात पदार्थ, आराको काठ, जीवजन्तु, चरा, कीट-पतंग अनि

सरीसृप जस्ता जीवित वस्तुहरू पैदा गर्छ। माटोलाई रूखबाट झरेको पात र कुहेको वनस्पतिले स्वस्थ र प्रबल राख्छ। रूखमा बिउ लाग्नु, वृद्धि हुनु, छिप्पिनु, पतन र मृत्यु हुनु जस्ता घटनाहरूले रचेको *स्वनवीकरणीय* कालचक्र एउटा अविरल विधि हो, अनि हामीले बेसी बाधा पुऱ्याएनौं भने एउटा जङ्गल अमर रहन सक्छ।

प्राकृतिक उत्पातहरू, जस्तै–आगलागी, बाढ़ अनि भूईँचालोको पनि जङ्गलले दमन गर्न सक्छ। यसको आकृति र रचना बदल्न सक्छ, नयाँ ढंगको वनस्पति र जीवनसंसारले क्षतिग्रस्त तथा ध्वस्त पुरानाहरूको स्थान लिन सक्छ, तर जङ्गल एउटा छुट्टै अस्तित्व भएको वस्तु हो। र यो बाँचिरहने छ – समायोजन र सन्तुलन क्रिया कायम राख्दै, एउटा जीवित रूपले अर्कोको पालन–पोषण गर्दै, प्रत्येक वर्गको भाग्य अरू वर्गकोसित बुनिएर अरूको भाग्यमाथि असर पार्दै। जब कैयौं शताब्दीसम्म चलिरहेको परिवर्तन र समायोजनपछि जङ्गल एउटा सन्तुलित अवस्थामा आइपुग्छ, जहाँ प्रमुख वर्गहरू सुस्थापित भएका छन् अनि जलवायु र माटोको अवस्थाअनुसार अन्यन्य जीवन रूपहरू उचित अनुपातमा मिलेर बसेका छन्, यसलाई शिखर अवस्थामा पुगेको वनस्पति भन्दछन्। यस अवस्थामा यो वनस्पति अनिश्चितकालसम्म नै रहन सक्छ, अनन्तकालसम्म मर्दै, पुनर्जीवित हुँदै। यसको कारण छिटो बढ्ने रूखहरूलाई "कड़ा काठ" भएका रूखहरूले विस्तारै जित्नेछन्, अर्थात् ती रूखहरू जो ढीलो गरी बढ्छन्, धेरै वर्षसम्म बाँच्छन् अनि जसबाट अति उत्तम तथा "कड़ा काठ" पाइन्छन्। अल्पवयस्क जङ्गलको अनुहार बिस्तारै बदलनेछ, अनि जब ती कड़ा काठका रूखहरू आफ्नो पूरा ऊँचाइमा पुग्छन् तिनीहरूको चँदुवाले भूईँमा खस्ने सूर्यप्रकाशको परिमाणलाई कम गराउँछ, अनि पहिलेको निम्न तलाले विविध प्रकारका अझ छाँयाप्रेमी उद्भिद्हरूलाई ठाउँ छोड़िदिन्छ। जङ्गलभित्र सबै प्रकारका जीवनरूपहरू –चरा, पशु, कीट–पतंग अनि वनस्पति अन्तमा एउटा सामञ्जस्यमा आइपुग्छन्। एउटा पुरानो छिप्पिएको जङ्गल प्रकृतिमा देखिने शक्तिहरूको सबैभन्दा उत्पादनशील अभिव्यक्ति हो भन्न सकिन्छ। जङ्गललाई यो अवस्थामा आइपुग्न कति सय वर्ष लाग्न सक्छ; एउटा बुलडजरले केही घण्टा समयभित्र नै यसलाई लुप्त गराउन सक्छ।

अहिलेसम्म संक्षिप्त रूपमा मात्र हामीले जङ्गल विषय कुरा गरिरहेछौं, मानौ सबै जङ्गलहरू धेरथोर एकनाशे छन् अथवा कमसेकम सादृश्य छन्। हामी निश्चय सम्झन्छौ यो कुरा कदापि साँचो होइन। प्रत्येक जङ्गलको आफ्नै स्वभाव हुन्छ जुन यसको अक्षांश, ऊँचाइ, जलवायु, भू–आकृति, माटो अनि पानीका अवस्थाहरूले निर्धारण गर्दछन्।

प्रमुख वर्गका उद्भिद्हरू हरेक मुलुकमा भिन्दै हुन्छन् अनि त्यस्तै रीतिले मुनिल्लो तला, अरू वनस्पति, तिनीहरूको समतोल र रचावट अनि पशुहरूको थरि र संख्या।

यद्यपि हरेक जङ्गल हरेक अर्को जङ्गलसित अमिल्दो भए तापनि अझै पनि सबै भारतीय जङ्गली क्षेत्रहरूलाई केही विस्तृत श्रेणीहरूमा विभक्त गर्न सकिन्छ। जङ्गलशास्त्रीहरूले हाम्रा जङ्गलहरूलाई सोह्र विभिन्न वर्गमा विभाजन गरेका छन्, माटो र पानीको अवस्था अनि रूखहरूको थरि र मिसावटको आधारमा। हामी जस्ता साधारण मानिसहरूलाई यति जान्न पाए हुनेछ कि हरेक स्थानका विभिन्न अवस्थाहरूले आफ्नै प्रकारको रूख र अन्य उद्भिद्हरूको मिश्रण रूचाउनेछन्।

हामीसित मुख्य गरी दुइ प्रकारका खुबै भिन्दा-भिन्दै सदाहरित जङ्गलहरू पाइन्छन्। पहिलो हो -हिमाली क्षेत्रभित्र वृक्षरेखाको ठीकमन्तिर भएको अग्लो उँचाइका ठाउँहरूमा पाइने धूपी वा सियो-पाते जङ्गल, जहाँ ठूला-पाते रूखहरू बाँच्न सक्दैनन् (सियो जस्ता पात भएका धूपी र सल्ला रूखहरू अरू रूखहरूभन्दा ज्यादै परिमाणमा चिसो सहन सक्दछन्)। धूपीका जङ्गलहरू फेरि दक्षिण भारतका निलगिरि र अन्य उच्च पर्वत श्रेणीहरूमा देखापर्छन्। स्वभावत: ती जङ्गलहरू सदैव भिरालो स्थानहरूमा स्थित छन्; अनि ती जङ्गलहरूको ढाँचामा केही नियमितता र समरूपता पाइन्छन्। अर्को वर्गका सदाहरित जङ्गलहरू पूर्ण रूपले भिन्दै छन्। यी हुन् आसाम र दक्षिण भारतीय पहाड़हरूका ज्यादै आद्रता भएका ठाउँहरूमा पाइने वर्षे जङ्गल। यहाँ उद्भिद् जीवनको वितरण क्षेत्र, परिमाण अनि संख्या सुन्दर छ, कारण आद्रता र ताप मिलेर हजारौं प्रकारका उद्भिद् र प्राणी जीवनलाई प्रोत्साहन प्रदान गर्छ।

एउटा प्राय: गजबको धुरी विशाल वृक्षहरूको माथिल्ला भागहरू मिलेर बनिन्छ। यो धुरीको सिधै माथि ''धुवाँकसहरू'' देख्न सकिन्छ— ती बढ्ता ऊँचाइका वृक्षहरू जो अरूलाई नाघेर अघि बढ्छन् अनि जसका शिरहरू अरूको भन्दा धेरै माथि पुगेका हुन्छन्। ती वृक्षहरूमध्ये धेरैजसो यति अग्ला छन् कि तिनीहरूको सीधा हाँगाबिहीन धडलाई थाम्नको निम्ति भूइँमाथि ८ - देखि १० फीट ऊँचाइ भएको जरा प्रणालीको आवश्यकता पर्छ जुन प्रणाली घरको छाना अड्याउने सत्तरी र कैंचीको आकारमा रचिएको छ। सम्पूर्ण जङ्गलको निम्ति पातको घनत्वले एउटा चिरस्थायी छतको काम गर्छ, कारण ती वृक्षहरू पात-झरूवा होइनन्। यसबाहेक सम्भवत: त्यहाँ कड़ा काठका लहरा, बेत, सुनाखरी र झ्याउहरू छन् जसले वनस्पतिको घनत्वलाई बढ़ाउँदछ। स्वभावत: यी जम्मैले सूर्यकिरणलाई भूइँमा खस्नदेखि रोक्छ जसको फलस्वरूप

तल्लो तहमा सीमित मात्रामा झारपात उम्रन्दछन्; एउटा विशाल रूख लड़ेर उप्जेको प्वालबाट जुन स्थानमा सूर्यकिरण खस्छ त्यहाँ असल रूपमा झारपात विकसित भएको पाइन्छ। प्वालबाट सूर्यकिरण भूइँमा छिर्न सके अहिलेसम्म ठूला उद्भिद्हरूले घेरेर राखेका कतिपय ससाना वृक्षहरू, बुट्टाबुटीहरू अनि लहराहरू अब टुसाउन थाल्छन्, जब फेरि एकपल्ट धेरै वर्षपश्चात् सबैभन्दा बलवान निश्चय नै विजयी बन्नेछन् अनि दुर्बलहरूचाहिँ संघर्ष गर्दै रहनेछन् वा मर्नेछन्। एउटा लड़ेको रूखले जङ्गललाई योगदान दिइरहन्छ, कारण सड़िरहेको मूढ़ो कीट-पतंग र च्याउजातीय उद्भिद्को घर हो। सबै जङ्गलहरूमा भएझैं यहाँ पनि "सर्वोच्च" अवस्थामा पुगे तापनि त्यहाँ हलचल, परिवर्तन, वृद्धि र मृत्यु सदासर्वदा चलिरहेको हुन्छ।

त्यहाँ कुनै विशिष्ट ऋतुहरू नभएकोले अनि वर्षैभरि प्रत्येक प्रकारको खाने कुरा, फलादि तथा पुष्परस प्राप्य हुनाले उष्णमण्डलको सदाहरित जङ्गलमा अत्यधिक परिमाणमा जीवजन्तुहरू पाइन्छन्। यथेष्ट खानेकुरा रूखहरूको माथिल्ला हाँगाहरूमा पाइने हुनाले त्यहाँ रूखमा चड्ने अनि उड्ने थुप्रै जन्तुहरू, चराहरू अनि कीरा-फटेङ्गाहरू हुन्छन् जो वृक्ष चँदुवाहरूको शिरमा बस्छन्।

त्यसैले ताप र वर्षैभरिको आद्रताको संयोगले ती उष्णमण्डलीका वर्षाते जङ्गलहरूले अति विपुल, अति विविध अनि अति मिश्रित जीवन-संरचना पैदा गर्दछन्। नाना प्रकारका प्राकृतिक वासस्थानहरूमध्ये हाम्रा भारतीय जङ्गलहरूले बनेको वासस्थान संसारको सबैभन्दा धनाढय ठहरिन्थ्यो।

भारतको चारैतिर पाइने जङ्गल हो ठूलोपाते रूखहरूले रचेको झरूवा जङ्गल-जहाँ जम्मै पातहरू झरेकोले वर्षको केही समयको निम्ति रूखहरू नाङ्गो रहन्छन्। अतीतको कुनै कालावधिमा ती जङ्गलहरूले हाम्रो जमीनको अधिकांश क्षेत्र ढाकेको हुनुपर्छ। यस प्रकारको जङ्गल ती रूखहरू र वनस्पतिले रचेको हुन्छ जो लामो समयसम्म आकाशको पानीबिना बाँच्न सक्छ। हाम्रो देशका धेरजसो इलाकाहरू प्राय: ८ महीनासम्म सुखा रहन्छन्। यो तातो अनि सुखा हावापानीमा रत्तिएका वृक्षहरू वर्षाते जङ्गलका वृक्षहरूभन्दा एकदमै भिन्नै छन्। सबैतिर पाइने यस क्षेत्रका वृक्षहरू हुन् – हर्रा र बर्रा, सखुवा, सयगुण, सिमल, सतिसाल, महुवा, अमला र बाँसहरू। प्रत्येक जङ्गलमा एक-दुइ थरिका वृक्षहरू प्रमुख हुन सक्छन्, अनि अन्य थरिहरूले सकेसम्म आफ्नो ठाउँ ओगटेर बस्नु पर्नेछ।

शायद सबैभन्दा रहरलाग्दो जङ्गल पातझरूवा खालको जङ्गल हो। यो खूबै प्रशंसित साल–जङ्गल हो जहाँ सोझो र हाँगाविहीन वृक्षहरूको ऊँचाई १०० फीटसम्म पुग्छ। साल जङ्गलहरू उत्तर भारतभरि पाइन्थ्यो, हिमालको फेददेखि नरमदासम्मै। अरूमाथि प्रभुत्व जमाउने व्यक्तित्व सालमा भएकोले अन्य उद्भिद् थरिहरूलाई यसले स्वागत गर्दैन। ठूला पातहरूले सजिएको साल एउटा सुन्दर वृक्ष हो, अनि बाघलगायत धेरै प्रकारका जीव–जन्तुहरूको लागि साल–जङ्गल एउटा उत्तम घर तथा वासस्थान ठहरिन्छ। हिमाली क्षेत्रको ठीकमन्तिर भएको विस्तृत भूमिपेटीले साल–जङ्गलहरूको निम्ति घरको स्थान लिन्थ्यो। उपनिवेषकहरूका घरबारका निम्ति ती जङ्गलहरू फाँड़िएका थिए। भाग्यवस कन्हा राष्ट्रिय उद्यानको सिर्जना भएकोले साल–जङ्गलको एउटा राम्रो अंश बचाइएको थियो।

सयगुण वृक्ष प्रमुख भएको पातझरूवा जङ्गल अर्को एउटा सुन्दर जङ्गलको उदाहरण हो। हामीसित भएको सयगुण शायद सबैभन्दा बहुमूल्य काठ्दायक वृक्ष हो अनि वन विभागले धेरैवटा सयगुणका यस्ता जङ्गलहरू विशेष रूपमा लगाइसकेको छ केही सानो र हलका परिमाणको सयगुण वृक्ष सालजतिको चित्ताकर्षक हुँदैन। बर्मामा भएका ती सयगुण जङ्गलहरू सर्वश्रेष्ठ ठानिन्छन्। तथापि हाम्रो देशको वारपार नै सयगुण जङ्गलहरू पाइन्छन् पश्चिमी कुनाको गिर जङ्गलदेखि दक्षिणको केराला राज्यसम्मै। सयगुणबाट के फाइदा छ भने रूख काटेपछि रूखको ठूटोबाट फेरि नयाँ रूख उम्रन्छ। यसले गर्दा अरूको तुलनामा सयगुणको जङ्गल केही मात्रामा पहिलेकै अवस्थामा आउन सक्छ। रूपछ्टाको अर्को अन्तमा पाइन्छ कम्ती ऊँचाइका झार–जङ्गल वा काँड़े झाड़ीहरू र बैर, बाबुल जस्ता ससाना रूखहरू अनि त्यस्तै अन्य उद्भिद्हरू यस्ता पोथ्रे जङ्गलहरूमा आश्चर्यजनक संख्यामा वन्य जीवजन्तुहरूले आश्रय लिएका हुन्छन्, अनि नि: सन्देह ती जन्तुहरूमा माटोलाई राम्रो अवस्थामा राख्ने गुण पाइन्छ।

एउटा उत्तम रंगरूप भएको जङ्गल प्रकृतिविदि्हरूको विचारअनुसार आनुवांशिक भण्डार पनि हो —यस भण्डारले हजारौं उद्भिद्वर्गलाई जीवित राख्ने काम गर्छ जो भविष्यमा अमूल्य ठहरिन पनि सक्छ। एउटा सीमाविन्दुदेखिबाहिर हामीले हाम्रा जङ्गलहरूलाई पातलो पार्‍यौं तथा ध्वंस गर्‍यौं भने कुनै सृजना हुँदै गरेको वस्तुबाट आफैलाई वञ्चित राख्नेछौं जुन वस्तु भविष्यमा अत्यावश्यक ठहर्न सक्छ। यो वस्तु एउटा औषधिमूलक उद्भिद् हुन सक्छ, एउटा भोजनयोग्य रकम तथा यस्तो वस्तु जसबाट उपयोगी कुरो पाउन सकिन्छ।

अहिलेसम्म रूखहरू भएका जम्मै क्षेत्रहरूलाई जङ्गलहरू भन्ने एउटै उपाधि दिइएको छ। धेरै प्रकारका जङ्गलहरू छन् भन्ने कुरो पनि हामीले बुझेका छौं; तर त्यसबाहेक जङ्गलहरूले गर्नपर्ने कामहरू दुइ विस्तृत श्रेणीमा विभक्त गर्न सकिन्छ भन्ने कुराको टिपोट पनि हामीले गरेका छौं। भिरालो पहाड़ी इलाकामा भएका रक्षात्मक जङ्गलहरूले माटोको रक्षा गर्नैपर्दछ अनि त्यसलाई उचित स्थानमा राख्नैपर्दछ; अनि उत्पादनकारी जङ्गलले असल परिमाणमा काठपात अनि जङ्गली उपज जस्तै बाँस, बेत र घर छाउने खरको उत्पादन गर्नैपर्दछ। ती दुइ कार्य-श्रेणीहरूलाई मिसाउन कोशिश गर्नु वा कुनै एउटा जङ्गललाई दुवै कामहरू गर्न लाउनु *अव्यावहारिक* ठहरिन्छ — नत्र भए दुइटै कार्यहरू असफल हुन सक्छन्।

आदर्शस्वरूप अहिलेका जङ्गलहरूसित एउटा तेस्रो खालको जङ्गलको आवश्यकता पर्छ— त्यो हो सामाजिक जङ्गल। हामीलाई चाहिने काठपातको बढ्दो परिमाणको कारणले साथै द्रुतगतिको जनसंख्या वृद्धिले गराएको वृक्ष-ध्वंसको कारणले स्थानीय आवश्यकताहरूको पूर्ति गर्न धेरैससाना जङ्गलहरू लगाउने अनि त्यसको हेरचाह गर्ने अनिवार्यता पैदा भएको छ। तर अर्को परिच्छेदमा हामी देख्नेछौं कि अभाग्यवस जङ्गलप्रति हाम्रो मनोभावना कटनिहारको भन्दा लूटार र ध्वंसकको छ, अनि समस्याको विशालताको तुलनामा सुहाउँदो जङ्गल लगाउने प्रयत्नहरू भएको छैन।

# जङ्गलहरू

# II

## *तिनीहरूको कस्तो अवस्था भयो?*

यो अध्यायको पहिलो परिच्छेदमा भारतको धेरजसो जमीनको प्राकृतिक आवरण जङ्गल हो भनेर हामीले बुझ्यौं। मेरो विचारमा यो परिच्छेद आरम्भ गर्दा त्यही सत्य कुरोलाई हामीले दोहोर्‍याउन पर्नेछ, तर ''हो'' को सट्टामा ''हुनुपर्छ'' भन्ने शब्दहरू लाउन पर्नेछ। जति टाढ़ोसम्म बितेका समयलाई हेर्दछौं हाम्रो देश उत्तिकै घनघोर जङ्गलले ढाकेको पाइन्थ्यो। जब जनसंख्या विस्तार-विस्तार बढ्न थाल्यो अनि कृषि उद्योग फैलिन थाल्यो, जङ्गलको क्षेत्रफल विस्तारपूर्वक घट्न थाल्यो। १८५० सालतिरै अंग्रेज सरकारले जङ्गलहरूको क्षेत्रफल र स्तरमा ह्रास आएको कुरो बुझिसकेको थियो, अनि बहुमूल्य वन्य उपजको ''लगातार उत्पादन'' सम्भव पार्नु हो भने जङ्गलको सुरक्षा र व्यवस्था यस्तो प्रकारले गर्नुपर्छ जसमा मूल धनलाई नबिगारी केवल सूद मात्र हामीले लिन सकौं। यस समस्यालाई कार्य रूपमा ल्याउनका लागि उनीहरूले भारतीय वन सेवा विभाग स्थापना गरे।

हाम्रा कति धेरै दैनिक आवश्यकताहरू अन्तमा जङ्गलका काठपातबाट पुरा गरिन्छ सो कुरो प्रायै: हामी भुल्दैछौं। विद्यालयमा पढ़ाइने पुस्तकहरू समयमा उपलब्ध हुँदैनन्; टिपोट-खाताहरूको दाम तीन गुणा बढ़िसकेको छ; ३ वर्षअघिको ६ वटा चौकीको दाम अहिले एउटा चौकीको दाम भएको छ; पत्रिकाहरूको शुल्क दोबर भएको छ; थोरै मानिसले आफ्नो घर किन्न वा बनाउन सक्छन्। ती जम्मै कुराहरूको कारण सरल छ: हालैमा भएको महँगीको प्रवृत्तिले काठपातको चुड़ान्त अभाव गराएको छ। महँगीको समाधान क्रियामा जति नै अर्थनैतिक कानून लागू गराए पनि ती कानूनहरूले प्रशस्त काठपात उपलब्ध हुन नसकेको वास्तविक स्थितिलाई दमन गर्न सक्दैन। दोस्रो विश्व महायुद्धपछि हाम्रो जनसंख्या दोबर भएको छ। १९९१ सालमा हाम्रो जनसंख्या ८५० मिलियनभन्दा पनि ज्यादा भएको छ अनि यो फेरि तेजसित बढ़िरहेछ। अनि त्यसै

अवधिमा वृक्षहरूको संख्या भने तीन गुणा कम भएको हुनुपर्छ। जङ्गलको प्रसंगमा हाम्रो बदलिँदो कार्यकौशलले उत्पन्न गराएको क्षतिको मोल हाम्रा अर्थशास्त्रीहरूले जाँचबुझ गरेका छैनन्। हाम्रो निष्क्रियताले गराएको हानीको देयादेय फलक हेरे हाम्रा राष्ट्रिय योजनाकारहरू भयभीत हुनेछन् अनि वनविकास कार्यक्रमलाई उच्चतम प्राथमिकता दिनेछन्।

१९५३ सालमा हाम्रो सरकारले एउटा राष्ट्रिय वन नीति तयारी गऱ्यो जसको मुख्य निर्देशन थियो देशको ३३ प्रतिशत भूमि जङ्गलले ढाकेको हुनुपर्छ भन्ने। जमीनको उक्त अंश बाहिरी तौरले मात्र नभएर वास्तवमा खूबै युक्तिसंगत र यथोचित ठहरिएको थियो, जुन अंश देशको स्वास्थ्यको निम्ति जङ्गलले ढाकेको हुनुपर्छ। तर वास्तविक कुरो हामी के पाउँछौं भने पचास वर्षभन्दा कम समयमा जङ्गलको क्षेत्रफल पूर्ण जमीनको ११ प्रतिशतमा घटिसकेको छ। यो सानो वृक्ष क्षेत्रभित्र पनि धेरजसो जङ्गल पातलिसकेको छ— यति क्रूर रूपमा कुल्चि-मिल्चि र अनाधिकार चोरी भएकोले त्यहाँ जङ्गलको नाम मात्र पाइन्छ।

के भयो ? किन होशियारपूर्वक प्रस्तुत गरिएको नीति हुँदाहुँदै पनि भारतको तीन अंशमा एक अंश जङ्गल पनि सरकारले सम्भाल्न सक्तैन ? यस स्थितिको मुख्य गरी दुइ कारणहरू छन्- प्रथम कारण हो आर्थिक अनि दोस्रो हो राजनैतिक। जङ्गलहरूलाई सुरक्षित राख्ने प्रतिज्ञा पालनको निम्ति सरकारमा अदम्य संकल्पको अभाव छ।

हाम्रा मानिसहरू महान् दरिद्रतामा बस्छन् अनि जङ्गलहरू एउटा खुल्ला धन-भण्डार हो। मानिसहरू सोच्छन् कि दाउरा काट्नु, गाईवस्तु चराउनु, उनीहरूले विचारेका सामग्री जङ्गलबाट बटुल्नु उनीहरूको अधिकार हो। निकै विशाल अनि ध्वंसात्मक परिमाणमा काठ-ठेकदार र काठ-तस्करहरूद्वारा वनविभागले निश्चित गरेको भन्दा धेरै बेसी वृक्ष संख्या ह्रास गरिन्छ। अपराधजनक कार्यमा दक्षता भएका मानिसहरूको निम्ति जङ्गल लुट्ने काम सबैभन्दा सहज र फाइदाजनक ठहरिन्छ — जरिमानाचाहिँ यति नरम छ कि त्यसद्वारा कसैलाई रोक्न वा नियन्त्रण गर्नु सकिँदैन। १९८५ सालमा एउटा ठूलो सेतीसाल वृक्षको दाम ३ लाख रूपियाँभन्दा बढ्ता थियो; पक्राउ पर्नुदेखि भाग्नु सजिलो छ, तर पक्राउ परेको खण्डमा दण्ड प्राय: तुच्छ परिमाणको हुन्छ। विभिन्न पर्यावरण समितिहरूले बारम्बार जोरसँग भन्दै आएका छन् कि वास्तवमा हाम्रो देशमा भएको काठ र जङ्गलको मोल सम्पूर्ण तौरले त्यसको असली मूल्यसित सम्बन्धित

छैन–अर्थात् भनौं त्यसको पुन: स्थापन खर्चसित। सार्वजनिक ठाउँमा पूर्ण रूपले बढ़ेको एउटा वृक्ष सदैव बन्धनमुक्त भनी ठानिन्छ –हावामा उड़िरहेको एउटा बीज भूइँमा खस्दा त्यो वृक्ष त्यहाँ आफै उम्रदछ। त्यसलाई उमार्नको निम्ति कुनै खास नगद खर्च गर्नुपरेन।

तथापि स्थितिहरू यति साह्रै जटिल भइसकेका छन् कि त्यस वृक्षको पुन: स्थापन खर्च यदि यो सम्भव भएमा नगद रूपियाँ, कठोर परिश्रम अनि समयको प्रसंगमा अतिशय विशाल हुनेछ। सार्वजनिक ठाउँहरूमा वृक्ष रोप्ने, त्यसलाई सुरक्षित राख्ने र सम्भाल्ने कार्यको मोल भारत देशमा अत्यधिक भएको छ। ''वृक्ष–चोरी'' – लाई एउटा महान् अपराधको रूपमा लिनुपर्छ अनि त्यहीं सुहाउँदो दण्ड दिइनुपर्छ।

कुनै पनि देशमा वृक्ष र काठपात चोर्ने कुरो राष्ट्रको अस्वस्थ आर्थिक जीवनको चिह्नारी हो। उत्तर अमेरिका र यूरोपका धनाढ्य देशहरूमा जङ्गल क्षेत्रहरू स्थिर र सुरक्षित छन्, किनकि जङ्गली उपज चोर्नपर्ने आवश्यकता कसैलाई छैन। अर्कोपट्टि अफ्रिका, एशिया र दक्षिण अमेरिकाका देशहरू आफ्नै जङ्गलहरूको सुरक्षा गर्न असमर्थ छन्, कारण अघि भनेझैं जङ्गलबाट प्राप्त भएको उपजमाथि नै स्थानीय निवासीहरूको बचावट निर्भर गर्दछ, यद्यपि यो एउटा अल्पकालिक नीति ठहरिन्छ। जुन ठाउँमा जङ्गल पातलो भइरहेछ त्यसमा रोकटोक छैन, यसको कारण यो हुन्छ कि सरकार असंख्य दीर्घकालिक समस्याहरू जस्तै बेकारी, जनसंख्या वृद्धि, खेतीपातीमा निश्चलताको समाधान गर्न असमर्थ रहेको छ अनि अर्को कारण हो दैनिक आवश्यकताहरू पटक्कै अप्राप्य हुनु। जङ्गल विलुप्तिका सबैभन्दा मुख्य कारणहरू हुन् दाउरा काट्नाले र गाईवस्तु चराउनाले अनि थेरथोर चोरी–डकैतीले। जहाँ आर्थिक अवस्था बलियो छ अनि यसले जनताका आवश्यकताहरूको पूर्ति गर्न मद्दत गर्छ त्यहाँ जङ्गलहरू स्थिर छन्।

हाम्रा सबै उद्योगहरू कुनै न कुनै प्रकारका प्राकृतिक सम्पद्‌माथि आधारित छन् अनि त्यसमध्ये कतिपय उद्योगहरू जङ्गलमा पाइने सम्पद्‌हरूमाथि आधारित छन्। हाम्रो कागज बनाउने मूल सामग्री, रेयन अनि प्लाइवुड उद्योगहरू, उदाहरणको निम्ति, पूर्ण रूपले जङ्गली उपजमाथि पराश्रित छन्। हाम्रो देशमा बाँसबाट कागज बनाइन्छ अनि हाम्रा विशाल कागज–उद्योगहरूले जङ्गलले उत्पादन गर्न सक्नेभन्दा बेसी बाँस चलाउँछन्। कर्नाटका राज्यमा प्रत्येक वर्ष १,६०,००० टन बाँस काट्ने अधिकार कागज कारखानालाई सरकारले दिएको छ, यद्यपि, १,३०,००० टन मात्र पुनर्उत्पादन

गर्ने जङ्गलको क्षमता छ। अर्थात् वर्षेनि हामीले केवल १,३०,००० टन बाँस चलाएको भए हाम्रा बाँसघारीहरू राम्रै अवस्थामा रहने थियो अनि अनिश्चितकालसम्म हामीले कागज बनाउन सक्ने थियौं। तर हामीले चलाउनुपर्ने परिमाणभन्दा ३०,००० टन बेसी बाँस काट्नाको कारणले जङ्गलका जम्मै बाँसहरू चाँडै नै उन्मूलन भइसक्ने छ अनि शायद कागज बनाउने काम बन्द गर्नुपर्नेछ। बाँस सम्बन्धमा अर्को एउटा खूबै अनियमित कुरो पाइन्छ। कागज कारखानालाई एक टनको १ रूपियाँ मात्र लाइसेन्स शुल्क लाग्छ भने अर्कोपट्टि यसको खास मूल्य स्वभावले नै धेरै गुणा बेसी छ। सत्य कुरो भन्नु हो भने डोको इत्यादि बुन्ने स्थानीय ग्रामीणवासीहरूले १ टन बाँसको शुल्क १००० रूपियाँ तिर्दा रहेछन्!

कागज बनाउने र बाँसघारी नरहेको कुराले जुन संकटजनक स्थिति पैदा गरेको छ त्यस्तै स्थिति छाला उद्योगमा घटित भइसकेको छ। काँचो छालालाई पाको बनाउँदा एउटा साधारणत: रूपमा पाइने हर्‌रा नामक उद्भिद्को चाम्रो फलको प्रयोग गरिन्छ। तर धेरै बेसी प्रयोग गरिएकोले एक समय प्रशस्त मात्रामा पाइने यो उद्भिद्वर्गको अब दुइचारवटा वृक्षहरू मात्र रहेका छन्, अनि त्यसो हुँदा छाला उद्योग बन्द रहनुपरेको छ। कर्मचारी तथा उपभोक्ताको रूपमा छाला उद्योगमाथि भरपर्ने मानिसहरूको अवस्था के भयो होला सो सहजै कल्पना गर्न सकिन्छ।

घटिरहेका जङ्गलहरूको राजनैतिक कारणहरू बुझ्न सजिलै छ। देशका चारैतिर जङ्गलहरू फैलिएका छन्। नि:सन्देह कोही प्रान्तहरूमा जङ्गलको क्षेत्रफल अगाध विशाल छ भने बाँकी प्रान्तहरूमा एकदमै कम पाइन्छ। त्यसकारण जब केन्द्र सरकारले पूर्णभूमिको ३३ प्रतिशत अंश जङ्गलको रूपमा सुरक्षित राख्ने निर्णय लियो, केही प्रान्तहरूले ठूला- ठूला औद्योगिक परियोजनाहरूको निम्ति जमीन पाउन सकेनन्। हालमा अरण्यशास्त्र प्रान्तीय विषय भएको छ, अनि यद्यपि केन्द्र सरकारले कुनै प्रकारको संरक्षण नीति घोषित गरे भने पनि सो नीतिको कार्यान्वयन्को भार आफ्नो जग्गामा प्रान्त सरकारलाई दिन्छ। यो एकदमै स्पष्ट छ कि धेरैवटा प्रान्तहरूले युगौंयुगअघिदेखि उत्तम घना जङ्गलबाट पाइरहेका ठोस फाइदाहरूको सट्टामा उद्योगहरू बसाल्ने, खानीबाट धातु निकाल्ने, ढुंगाको खानी खोल्ने अनि जल-विद्युत योजनाहरू चालू गर्ने कामहरू मनपराउँछन्। यस्ता विकासात्मक कार्यकलापबाट पाइने फाइदाहरू विशेष गरी स्थानीय निवासीहरूले पाउने रोजगार र नगदको प्रसंगमा यथार्थ र आकर्षणकारी छ, अनि स्वभावत: जङ्गल संरक्षण कार्यले भन्दा धेरै गुणा बेसी उक्त फाइदाहरूले मतदाताहरूलाई

प्रभावित पार्न सक्छ, यद्यपि जङ्गल संरक्षणबाट उपलब्ध हुने लाभहरू बुद्धिमानी र दूरदर्शीहरूले मात्र बुझ्न सक्छन्।

राजनैतिक कारणहरूले गर्दा उत्तर भारतका सर्वोत्तम साल वृक्षका जङ्गल क्षेत्रहरू रौरकेला, दुर्गापुर र भिलाई नामक औद्योगिक शहरहरूको स्थापनार्थ बलिदान गर्न परेको थियो। अल्पकालिक लाभहरूको निम्ति यो एउटा आदर्शमय निर्णय थियो। शायद यस प्रकारको तर्क-वितर्क चलेको हुनुपर्दछ: औद्योगिक दृष्टिकोणले बिहार एउटा पछौटे प्रान्त रहेको छ, यसकारण यहाँ उन्नति ल्याउनका लागि कुनै प्रकारको विशाल उद्योगहरू चालु गर्नुपर्दछ। डरलाग्दो जीवजन्तुहरूले भरिपूर्ण ती टाढ़ा-टाढ़ासम्म फैलिएका विस्तृत जङ्गलहरूलाई काटेर कल-कारखानामा परिणत गरिदिए स्थानीय जनताले मनपर्दो आरामदायक नौकरी पाउनेछन्। यो भइसकेर समयान्तरमा पछि थाहा लाग्यो कि (क) जङ्गली उपज र खेतीपातीबाट मात्र आफ्नो जीवन-यापन गर्न ती स्थानीय जनता सक्षम् छन्, अनि विशाल उद्योगहरूमा काम गर्न उनीहरू उपयुक्त छैनन्; (ख) जङ्गलहरू विलुप्त भएपछि स्थानीय जलवायुमा हेरफेर आयो अनि त्यहाँ असहनीय गर्मी हुन थाल्यो, अनि (ग) वृक्षावरणको अनुपस्थितिमा बिहार पालैसँग भल-बाड़ी र खड़ेरीको शिकार भयो।

ती औद्योगिक स्थापनहरूको घड़ेरी छान्नुमा एउटा ठूलो भूल भएको छ भन्ने कुरोमाथि विश्वास नगर्नु गाह्रोपर्दछ। मुफ्तमा पाएको वस्तुको कदर हुँदैन भन्ने तथ्यको प्रमाणस्वरूप ती अत्यन्त शोभायमान विस्तृत जङ्गलहरू औद्योगिक केन्द्रहरू बसाल्नको निम्ति हामीले हिचकिच्याहटबिना फाँड़दछौं। हामी साँच्चीकै परिमाणदर्शी हुँदो भए ती उद्योगहरूको निम्ति अझ बढ़िया अनि सुहाउँदा स्थानहरू पाउन सक्ने थियौं, अनि भल-बाढ़ले वर्षेनि गराउने क्षतिबाट बिहार प्रान्त बाँच्न सक्ने थियो।

मौसमी जङ्गल क्षेत्रहरू भारतमा धेरै कम संख्यामा मात्र पाइन्छन्। साइलेन्ट भ्याल्ली उक्त किसिमको जङ्गलहरूमध्ये एउटा हो, अनि प्रस्तावित जल-विद्युत योजनाले यसलाई असंशोधनीय अनुपातमा नोक्सान पुऱ्याउने सम्भावना छ। जुन भूमध्य-रेखाको क्षेत्रफलभित्र भारतका दक्षिणी भागहरू श्रीलंका, मलेसिया, इत्यादिअन्तर्गत छन्, त्यहाँ मौसिमी जङ्गलहरू पाइन्छन्। यस मुलुकमा भएको बाढ़को विरूद्धमा जनताले उठाएका आर्त्तनाद प्रकृतिले दिएको अमूल्य अनि अपूरणीय उपहारको अल्पकालिन लाभको निम्ति ध्वंस भएको सत्यताको अभिव्यञ्जना थियो।

गत: २५ वर्षको अवधिमा थुप्रै हूल शरणार्थीहरूले घरको खोजीमा भारत प्रवेश गरे। तिब्बत, वर्मा, श्रीलंका, पूर्व अफ्रिका अनि पाकिस्तानका मानिसहरूले विभिन्न



तामिलनाडुका जलाशयहरू गरम र सुखा स्थानलाई चाहिने वर्षा-जल संरक्षणको निम्ति प्रख्यात छन्। ती तलाउहरूले प्रान्तको कृषि उद्योग कार्यलाई बचाई राख्नबाहेक माछा-पालनको मुख्य केन्द्रको स्थान पनि लिएका छन्। उक्त चित्रमा एउटा सानो नौका (स्थानीय उद्भिद् हाँगा-बिंगा तथा वेतबाट निर्माण गरिएको) हेर्नुहोस् जुन उपयोगी छ अनि कम खर्चमा बनाउन सकिन्छ।



एकासिया जस्ता धेरै वृक्ष जातिहरू थोरै माटो भएको चट्टानमाथि उम्रन सक्छन्।



यस्ता बूटाबूटी भएका समतल भूमिहरू पारिस्थितिक दृष्टिकोणबाट औधी महत्त्वपूर्ण ठानिन्छन् कारण ती भूमिहरूले पानीलाई जमीनको तल्लो भागहरूमा पुर्‍याउनु सहायता गर्दछन् साथै अनेकौं ससाना प्राणिजहरू बचाउको निम्ति आवासको ठूलो काम गर्दछन्। अभाग्यवश, अधिकारीवर्गले यस्ता भूमिलाई बेकामे सम्झी ध्वंस गर्ने गर्छन्।



विगत दिनहरूमा खुला तौरले खानीबाट खनिज पदार्थहरू खन्नाले निकै नै राम्रा जमीनहरूको विनाश भएको थियो। धातुमल (slag)-ले ढाकेका ठाउँहरू धेरै टाढ़ाटाढ़ासम्म रूखपातविहीन छन्। भाग्यवश, हिजोआज ती क्षेत्रहरूमा उपयुक्त पौधाहरू लगाइँदैछन्। सालेमको नजिकैमा धातुमलमाथि वृक्ष रोपनको शुरूआत भइरहेको चित्र यहाँ देख्न सकिन्छ।



तामिलनाडुमा भएका सैकड़ौं पौराणिक प्रकारका झीलहरूमध्ये यो एउटा हो जसले समस्त इलाकालाई बचाएर राखेको छ। झीलको किनारमा उम्रेका वृक्षहरूले भूक्षय र सिल्ट जमाउलाई रोक्ने काम गर्दछ।



वृक्षहरूको एउटा समूहले माटोका कणहरूलाई राम्ररी बाँधेर राख्न सक्छ अनि नहरको किनारालाई भत्कनुदेखि जोगाउँछ भन्ने प्रमाणको एउटा दृष्टान्त।



जङ्गलको सहारामा खेतीपाती ( सौजन्य : रन्जीत दानिएल )

समयमा हाम्रो देशमा शरण लिएका छन्, अनि सधैं नै उनीहरूलाई बस्ने स्थान प्रदान गर्न सकेकोमा हामी गर्वित छौं। तर धेरै ठाउँहरूमा उनीहरूलाई आश्रयको निम्ति वन्यभूमि दिइएको छ, कारण वन्यभूमि सबैभन्दा प्रयोगनीय ठहरिन्छ। विशाल जनसंख्याको निवासको निम्ति जङ्गलहरू काटिएका छन्, जुन जनतालाई जीवन निर्वाह गर्न सहायताको आवश्यकता परेको छ। कुन विकल्प ग्रहण गर्नुपर्ने हो सो अत्यन्त गाह्रो विषय छ, कारण शरणार्थीहरू स्वदेश फर्केको समय सरकारले आफ्नै जनताको जिम्मावार लिनुपर्ने कुरो प्रत्यक्ष छ।

शायद एउटा मध्यस्थ उपाय के हुन सक्छ भने उक्त कामको लागि प्राप्त गरिएको वन्यभूमि कि त फल-उद्यान कि वृक्ष खेतीको निम्ति प्रयोग गर्नुपर्दछ। व्यापारिक स्तरमा भएको वृक्ष-खेती साधारणत: फलदायक वृक्षहरूले रचेको फल-उद्यानसित मात्र सीमित रहेको छ। यथार्थमा काठपातको लागि वृक्ष-खेती गर्ने सम्पूर्ण विचार विषय हामी अनभिज्ञ छौं-कारण रूखहरू हामीले केही नगरी आफै उम्रने वस्तु भन्ने कुरामा हाम्रो विश्वास छ, अनि हरेक प्रकारको असमर्थन हुँदाहुँदै पनि ती वृक्षहरूलाई बचाएर राख्ने प्रयत्न हामी गर्छौं। परिस्थितिमा भयानक परिवर्तन आएकोले प्राकृतिक ढंगमा वृक्षहरूले बढ्ने मौका पाउन सक्दैन भन्ने आत्मज्ञान हामीलाई विस्तारै थाहा भइरहेछ, अनि ती वृक्षहरूको सुरक्षा र पालन-पोषण नभएको खण्डमा चाँडै नै हामीले वृक्षहीन पृथ्वीको सम्मुख पर्नुपर्नेछ। वृक्षहरूको संख्या घट्दै जाँदा तिनीहरूको मोल साथै खास मूल्य उत्तरोत्तर हिसाबले बढ्दछ, अनि वृक्ष खेती छोटो समयमा नै अत्यन्त लाभदायक हुनेछ; साथै पहाड़ी इलाकाको निम्ति कृषि उद्योगको तुलनामा यो अझ उत्तम विकल्पी ठहरिन्छ। मालिक स्वयंको निम्ति पनि वृक्ष खेती अत्यन्त आकर्षणकारी प्रस्ताव ठहरिन्छ; एकपल्ट रोपेपछि रूखहरूको लागि कुनै विशेष परिश्रमको आवश्यकता छैन। ऋतुकालिक जलवायुले कुनै ठूलो प्रभाव पार्न सक्दैन, अनि तिनीहरूको मूल्य उत्तरोत्तर बढ्दै गएको हामी देख्न सक्छौं। एउटै असुविस्ता के हो भने किसानले पहिलो प्रहरको आम्दानी प्राप्त गर्नुको निम्ति केही वर्ष पर्खनुपर्ने छ।

अहिलेसम्म जङ्गलको सम्पूर्ण ससाना क्षेत्रहरू ध्वंस भएको विषय चर्चा गर्‍यौं - जति बेला अरू कामहरूको निम्ति ती विस्तृत जङ्गलहरू काटिन्छन्- चाहे खेतीपाती, जल-विद्युत योजना वा शरणार्थी बसोबासोको लागि नै किन नहोस्। तर अधिकांश जङ्गल ज्यादै अप्रत्यक्ष र कुटिल तौरले ध्वंस गरिन्छ। केवल नाम मात्रको जङ्गल रहँदा

यसको स्वभाव खूबै क्षतिग्रस्त भएको हुन्छ र यो मर्नु लागेको वस्तु हो, अनि यसले आफ्नो काम पुरा गर्न सक्दैन।

हामीले बुझेबमोजिम जङ्गलको शक्ति यसको पुनरूत्पन्न हुन सक्ने कार्यक्षमतामाथि अड़ेको छ। त्यहाँ बिउहरूको निरन्तर उत्पादन भइरहन्छ, बलिया बिरूवाहरू रोचक परिस्थिति भएको खण्डमा बाँच्दछन्, बढ्छन् अनि बुड़ो र मृत्यु अवस्थामा पुगेका रूखहरूको स्थान लिँदछन्। यो विधि लगातार चलिरहन्छ अनि यसले के संकेत गर्छ भने कुनै पनि तोकिएको समय त्यहाँ कुनै न कुनै उमेरका वृक्षहरू निश्चय नै पाइन्छन्, भर्खरै उम्रन लागेका बिउहरूदेखि वृद्ध भएका तथा भूईंमा लड़ेर सड्दै गरेका थम्बाहरूसम्म।

वनको स्वास्थ्यलाई बिगार्न खोज्ने एउटा नयाँ तत्त्व हो विदेशबाट पैठारी गरिएका उद्भिद्हरूको अतिक्रमण जुन उद्भिद्हरू यथार्थमा हाम्रो देशका होइनन्। एकपल्ट विजातीय उद्भिद्ले जङ्गललाई समातेपछि त्यसबाट मुक्त हुन प्राय: असम्भव छ।

विजातीय उद्भिद्को परिभाषासहित हाम्रो चर्चा शुरू गरौं। एउटै प्रकारको जलवायु भएको तर धेरै टाढ़ास्थित भौगोलिक क्षेत्रमा विकसित भएको उद्भिद्लाई विजातीय उद्भिद् भनिन्छ। कुनै संयोग तथा माध्यमबस-प्राय: विलकुलै मानिसको- एउटा बिउ तथा उद्भिद् हाम्रो इलाकामा प्रवेश गर्दछ-अर्थात् हाम्रो जङ्गलमा। यहाँ यसका प्राकृतिक दुश्मनहरू पाइँदैनन्-तथा ती पशुहरू, चराहरू अनि कीटपतंगहरू जो विजातीय उद्भिद्लाई खाएर बाँच्छन्। ती प्राकृतिक दुश्मनहरू यसको आफ्नै जन्मभूमिमा छोड़िएकाले हाम्रो समुद्रतटमा यो उद्भिद् राम्ररी फस्टाउँछ, चारैतिर फैलिन्छ, त्यहाँ नाशकारी कीरा र अपाहारी यसको निम्ति छैन तर जसले त्यहीं जङ्गलमा अन्यान्य उद्भिद्वर्गलाई दमन गर्न सक्छ। यहीबीचमा स्थानीय जन्तुहरूको निम्ति यसबाट आहार अनि आश्रय पनि सम्भव छैन, कारण यसको स्वाद अनौठो र नौलो छ। प्राय: सधैं यो विषालु पनि छ तथा कमसेकम स्थानीय जीवजन्तुहरूले यसलाई खाए पनि पचाउन सक्दैनन्। तसर्थ त्यहाँ के हुन्छ भने ती विजातीय उद्भिद्हरू कुनै प्राकृतिक रोकटोक तथा दुश्मनको अनुपस्थितिमा जङ्गलभरि फैलिन्छन् अनि स्थानीय वनस्पतिलाई नतमस्तक पार्छन्। प्राकृतिक वनस्पतिको राशिमा घट्ती आउनु नै वन्य जन्तुहरूले खाने प्राप्य आहारको घट्ती हुनु हो अनि यस सामञ्जस्यलाई बिघटन गरे प्रतिक्रियाको एउटा शृंखला सृजना हुन्छ जहाँनेर उद्भिद् र पशुजगत् दुवैले कष्ट भोग गर्नुपर्नेछ; त्यसो हुँदा जङ्गलका गुणहरू धेरै मात्रामा घटनेछन्।

हाम्रो हेराइको प्रथम चरणमा यस्तो लाग्दछ कि जङ्गलमा केही मात्रामा फैलिसकेको भए तापनि विजातीय उद्भिद्हरूलाई मूलोच्छेदन गर्न त्यति गाह्रो छैन। निश्चय नै तिनीहरूलाई हटाउनु असम्भव नहोला, तर यो काम खूबै खर्चालु र कठिन छ। जहाँ बिउहरू हावाद्वारा छरिन्छन्, उद्भिद्हरू आगोस्वरूप फिजिन्छन्, अनि जब ती उद्भिद्हरू फैलिएको कुरा हामीलाई थाहा हुन्छ अनि यसले अधिकारीवर्गको ध्यान आकर्षण गर्दछ, स्थिति रोकथाम गर्न नसक्ने अवस्थामा पुगिसकेको हुन्छ। उदाहरणको निम्ति, यूपेटोरियम (eupatorium) नामक उद्भिद् दक्षिण अमेरिकाबाट फुत्केर आएका उद्भिद् हुन्। मानिसकै ऊँचाइ भएको यूपेटोरियम पोथ्रो आजभन्दा २० वर्षअघि हाम्रा जङ्गलहरूमा सर्वप्रथम देखापरेको थियो। दुश्मनरहित हुनाले शीघ्र गतिमा यो फिंजिन थाल्यो। प्राकृतिक वनभित्र कुनै खाली ठाउँ भए यो उद्भिद् त्यहाँ पुगिहाल्दछ अनि स्थानीय उद्भिद्हरूलाई घेरा हालेर सशक्त रूपमा आफैलाई त्यहाँ बसाल्दछ। वन विभागले केही योजनाको निम्ति साफसित जङ्गल काटेकोले यूपेटोरियमको फैलावटमा ठूलो सहयोग मिलेको छ। यस्तै प्रकारले देशको विशेष दक्षिण र उत्तर-पूर्व इलाकाहरूका विस्तृत वनक्षेत्र र वन्य-जीवन आश्रय स्थानहरूमा यसले प्रवेश गरेको छ अनि कोही जग्गा पूरै तौरले ओगटेको छ। हाम्रा जङ्गलहरूमा यूपेटोरियमलाई स्वतन्त्र रूपमा फैलिन दिने कुरो खतरनाक कुरो हो, हानिकारक पनि हो, कारण यो उद्भिद् अत्यन्त प्रबल र अविनाशी मात्र नभएर पूर्णतया विदेशी पनि हो। यो उद्भिद्को कुनै पनि भाग वन्य र घरेलु पशुहरू दुवैको निम्ति आहारयोग्य छैन-जब कि यसले ती अन्य आहारयोग्य उद्भिद्हरूलाई दमन गर्दछ जसले घरेलु पशुहरूलाई घाँस र चरण दिन्छ। यूपेटोरियममा अर्को एउटा भयपूर्ण विलक्षण पाइन्छ: खड़ेरी परेको समय यसले सहजै आगो टिप्न सक्छ। हरेक दृष्टिकोणले यूपेटोरियम हाम्रा जङ्गलहरूको निम्ति विनाशकारी छ, अनि यसलाई हटाउनका निम्ति चाँड़ै अभियान शुरू गरेनौं भने हाम्रा यति सुन्दर जङ्गलहरू यूपेटोरियमका मरूभूमिहरू हुनेछन्। प्रत्येक उद्भिद्लाई जरासितै उखेल्न दु:ष्कर भएकोले यो सुझाउ पेश गरिएको छ कि यसलाई रोक्नको निम्ति यसलाई खाने कीरा दक्षिण अमेरिकाबाट पैठारी गर्नुपर्छ।

एउटा भिन्दै प्रकारको विजातीय समस्या खड़ा गर्ने उद्भिद् हो तारपीन। यसको खास घर अस्ट्रेलिया हो। यो अत्यन्त चाँड़ो बढ्ने हुनाले अनि छोटो समयमा काठ उत्पादनको निम्ति प्रयोजनीय ठहरिएकोले विशेष गरी पल्प र कागज बनाउका निम्ति

विस्तृत रूपमा यो उद्भिद्को खेती भारतमा गरियो, विशेष दक्षिण भारतमा। यूपेटोरियम जस्तो तारपीन वृक्ष आफै फैलिन सक्दैन, जहाँ यसलाई रोपिन्छ यो त्यहीं मात्र पाइन्छ यसर्थ समस्या त्यति कठिन छैन। यसको ठूलो कमी हो यसका जराहरूले प्रचुर पानी वरिपरिको जमीनबाट तान्छन्, अनि त्यसो हुँदा तारपीनको घना क्षेत्रले सम्पूर्ण इलाकाको जलस्तर घटाउँछ। यसबाट कुनै स्थानीय चरा तथा पशुले खाने कुरा र आश्रय पाउन सक्दैन, अनि एक-दुइ थरिहरूबाहेक स्थानीय वनस्पति तारपीनको छाँयामा फस्टाउन सक्दैन। अर्को शब्दमा भन्नु हो भने तारपीन स्थानीय उद्भिद् र प्राणी जीवनसित *समाकलन* हुँदैन अनि तारपीनको खेती एउटा रूखो व्यापारिक बगैंचा मात्र हुनेछ। यो कहिले पनि दुर्बोध र गहन जीवन-जाल भएको जङ्गलको अंश बन्नु सक्दैन। हामीले तारपीनलाई वास्तवमा फसलको रूपमा लिनुपर्छ अनि व्यापारिक फाइदाको निम्ति रोप्नुपर्छ। मूल जङ्गलसित तारपीनलाई मिसाएर रोप्नु उचित हुँदैन।

विजातीय उद्भिद्हरूको प्रसंगमा दुइ अरू उद्भिद्हरूको उल्लेख गर्न आवश्यक पर्छ जो ध्वंसकारी छैनन् तर जसले हाम्रो देशलाई विरक्त पार्दछ। एउटा हो सर्वव्यापी वाटर ह्यासिन्थ, जसको डाँठ फुलिएको हुन्छ अनि फूलहरू सुन्दर बैगुनी रंगका हुन्छन्। यो जलमा हुने उद्भिद् हो अनि हाम्रा धेरैवटा तलाउ, कुवा र नहरहरूमा यो फैलिएको छ। यसको खास घर दक्षिण अमेरिका हो अनि सम्भवत: कसैले आफ्नो बगैंचामा लगाउन यहाँ ल्याएका थिए। भारतमा यसको प्राकृतिक दुश्मनहरू नभएकोले भीषण परिमाणमा यसको सन्तान फैलियो अनि अल्प अवधिमा नै हाम्रा हजारौं निश्चल जल धरातलहरू यसले ढाक्यो। यस उद्भिद्ले स्थानीय जल-वनस्पतिलाई निर्वासित गर्नु स्वभाविकै हो; तर यसका परिणामहरू पनि गम्भीर छन्। जसरी तारपीन (eucalyptus) ले अत्यधिक पानी चुसेर भूइँभित्र हुने जल-सम्भरणमा घट्ती ल्याउँछ, वाटर ह्यासिन्थ (water hyacinth) पनि त्यस्तै प्रकारले एउटा जल-लोभी उद्भिद् हो अनि यसले पनि असाध्य परिमाणमा पानी चुस्न सक्छ। वास्तवमा एउटा तलाउमा वाटर ह्यासिन्थले प्रवेश गरेपछि अल्प समयमा नै तलाउको समस्त पानी सुक्नेछ अनि तलाउ एउटा सुखा भूमि बन्दछ। यो एउटा डरलाग्दो कुरो हो कि अचाकली रूपमा पानीको अभाव भएको हाम्रो जस्तो देशमा हाम्रो जीवन बचाउने तलाउहरू यस्ता बेकामको झारपातले सुकाइरहेछ।

अर्को एउटा भयप्रद विजातीय उद्भिद् हो पार्थेनियम, जो समस्त गाउँबस्ती अनि साना-ठूला शहरहरूभरि फैलिएको छ। यो क्षुद्र अनि कोमल झार अरू जङ्गली घाँसहरू

र उद्भिदहरूसँग मिसेको जस्तो भएर रहन्छ जबसम्म यसको मसिना सेतो रंगका फूलहरू निस्कन्दैनन् अनि एक्कासि सुस्पष्ट रूपमा देखापर्न थाल्छन्। साना-ठूला शहरहरूका जम्मै खुला जग्गाहरू घना रूपमा पार्थेनियमले ढाकेको छ अनि यसको अतिक्रमणको अघि स्थानीय उद्भिद्हरू हटिसकेका हुन्छन्। पार्थेनियमका विशेष दुष्कर्महरू के हुन् भने हाम्रा पशुहरूले यसलाई खान सक्दैनन् अनि यसले धेरै मानिसहरूमा धमकीको रोग र श्वास प्रश्वासका समस्याहरू उप्जाउँछ। फेरि अरू विजातीय उद्भिद्हरूझैं यसलाई नियन्त्रण गर्ने एकमात्र उपाय हो प्रत्येकलाई जरासितै उखेलेर हटाउनु। यसलाई खन्ने र जलाउने जिम्मावार लिन सक्ने स्वयंसेवकहरूको दल छ भने मात्र उक्त काम गर्न सम्भव हुन्छ। किनभने वाटर ह्यासिन्थ जस्तै एउटा सिङ्गो पार्थेनियमबाट एउटा उपनिवेश उत्पन्न हुन्छ। ती विजातीय उद्भिद्हरूको भयलाई हल गर्ने शायद एउटै उपाय हो तिनीहरूको "पुर्खौली स्थान"-बाट ती कीराहरूको पैठारी गर्नु जो तिनीहरूका प्राकृतिक दुश्मनहरू हुन्। यस प्रकारको जैविक नियन्त्रण पद्धतिको परिणाम निस्कन प्राय: ढीलो हुन्छ तर अन्तमा प्रायश: यो पद्धति नै यस प्रकारको समस्याको स्थायी उपाय हो।

एउटा चाखलाग्दो कुरो के छ भने भारतीय शहरहरूमध्ये बेङ्गलोरमा धेरै संख्यामा वृक्षहरू पाइए तापनि चरा-चुरूङ्गीको संख्या कदापि प्रचुर छैन। सम्भवत: यसको कारण हो त्यहाँ धेरजसो फुल्ने वृक्षहरू विजातीय छन्-(धेरैजसो दक्षिण अमेरिकाबाट आएका) अनि हाम्रा स्थानीय पक्षीहरूले ती उद्भिद्हरूको फल वा रस रूचाउँदैनन्। फेरि विपरीत अवस्था के दखिन्छ भने बेङ्गलोरमा असाधारण मात्रामा नाशकारी कीराहरू पाइन्छन् भन्ने कुरो त्यहाँको किसान र उद्यान-मालिकवर्गले स्वीकार गरेका छन् जसमा कीटनाशक पर्दाथ लगातार प्रयोग गर्ने आवश्यकता हुन्छ। बेङ्गलोरका वृक्षहरू त्यहीँका रैथाने भएको भए स्थिति भिन्नै हुने थियो। पक्षीहरूको संख्या धेरै बढ्ने थियो अनि त्यसले नाशकारी कीरालाई वशमा राख्ने थियो।

अब हामी जङ्गल पातलिएको र वृक्षहीन हुँदै गएको विषयतर्फ लागौं जसको एउटा अतिरिक्त कारण हो तस्करता। भारतको प्रसंगमा तस्करीको परिभाषा भन्न गाह्रो पर्छ कारण अंग्रेज सरकारले जङ्गललाई सरकारी अधीनमा ल्याएर वन-विभागको स्थापना गर्नुभन्दाअघि सैयौं वर्षसम्म जङ्गल साथै यसभित्र लुकेका सम्पद्हरू कुनै एक व्यक्तिको होइन तर सबैको साझा धन हो भनेर मान्थे। परम्परागत रूपमा हाम्रा शाषकहरू जङ्गलमा शिकार खेल्थे, तर विशेष प्रकारको कानून बनाउने केही

शाषकहरूबाहेक जङ्गलमा ढुकै पसेर स्वेच्छाबमोजिम चीजमाल ओसार्ने व्यक्तिको विरूद्धमा कुनै कानून थिएन। तस्कर भन्ने सुनिँदैन थियो। यो शब्द अंग्रेजी भाषाबाट निस्केको हो अनि यसको आफ्नै देशमा लामो इतिहास छ। इंग्ल्याण्डमा जङ्गलहरू राजा तथा स्थानीय जमीन्दारको अधीनमा थियो अनि कसैले पनि अनुमतिबिना शिकार खेल्न सक्दैन थियो। यसकारण एउटा व्यक्तिले जङ्गलमा गएर एउटा मृगलाई मारेको खण्डमा उसलाई तस्कर भनिन्थ्यो अनि चोरलाईझैं दण्ड दिइन्थ्यो। तर हाम्रा जङ्गलहरूमा तस्करी कार्य पशुहरूसित मात्र सीमित छैन, यसमा रूखहरू पनि सामेल छन्। हाम्रा जङ्गलहरूमा संसारको सर्वोत्तम काठ पाइन्छन् अनि विदेशी ग्राहकीहरू उक्त काठको उच्च दाम दिन तयारी छन्। अनि, दूर्भाग्यवस, वैधताको भेष लगाएर काठ चोर्नु अति सहज छ। जुनबेला वन विभागले एउटा ठेकादारलाई केही रूखहरू बिक्री गर्छ, उसले काट्नपर्नेभन्दा बेसी रूख काट्दैन भन्ने कुराको निश्चित गर्नु असम्भव ठहरिन्छ। यो विशाल धन-भण्डार रक्षा गर्ने जङ्गलका चौकीदार र वनपालहरू खूबै कम संख्यामा हुनको साथ शक्तिहीन छन्। ठेकादार धनी अनि शक्तिशाली छन्। वन चौकीदार प्रलोभनदेखि टाढ़ा रहनु हो भने उसको तलब राम्रो हुनुपर्छ अनि उसमा आत्मविश्वास हुनुपर्छ। रिजर्भ बैंक जतिकै बहुमूल्य वन्य धन-भण्डारको रक्षा गर्ने ठूलो जिम्मावार उसलाई सुम्पिएको छ। यो काम गर्न उसकोमा दृढ़ इच्छा मात्र होइन तर उपाय र सामर्थ्य पनि हुनुपर्दछ।

धेरै वर्षसम्म जङ्गलभित्र के भइरहेको थियो सो विषय भारतमा हामी निसंकोची रह्यौं, अनि तस्करी कार्य त्यति विचारनीय वा मुख्य लाग्दैन थियो। भर्खरै मात्र जब हामीले जङ्गलहरू द्रूत गतिमा लोप भइरहेको चाल पायौं अनि वर्तमान जङ्गलहरू पनि अति पातलो र निस्तेज भइसकेको अनुभव गर्‍यौं, हामी ब्यूँझिरहेछौं।

सीमित परिमाणमा अलि अलि गर्दै दाउरा बटुल्ने धन्धा त्यत्ति हानिकारक ठहरिँदैन स्थानीय गाउँलेहरूमा जङ्गलबाट सुकेको दाउरा ल्याएर त्यसको बिक्री गरी जीविका चलाउने अधिकार थियो। तर, वेधड़क दिनहुँ सैकडौंको संख्यामा दाउराका भारीहरू जङ्गलबाट निस्कासित हुँदा जङ्गल उजाड़ बन्दछ। मृत काठपात पतकर मलको मुख्य श्रोत हो अनि माटोले यसबाट पुष्टिकर वस्तुहरू पाउँछ अनि आफ्नो पालोमा नयाँ वृद्धि सम्भव गराउन सहायता गर्छ। यसबाहेक प्राकृतिक तौरले मरेका काठपातसित दाउरेहरू सन्तुष्ट छैनन् — तिनीहरूले विभिन्न तरिका अपनाएर वृक्ष र हाँगाहरूलाई मृत बनाउँछन्।

रूखहरूको बोक्रा ताछेर तिनीहरूलाई विस्तारपूर्वक मार्छन् अनि केही समयमा नै त्यस मृत काठपातलाई दाउराको रूपमा बटुलिन्छ। जीवित हाँगाविंगालाई काटेर मारिन्छ। जब दाउराको माग बढ्दै जान्छ अनि यसले एउटा उद्दण्ड रूप लिन्छ। कुनै पनि वृक्ष जङ्गलभित्र वा बाहिर दाउरेहरूको हातबाट वञ्चित रहँदैन चाहे त्यो उद्भिद् बूढो र बलियो तथा एउटा सानो बिरूवा नै किन नहोस्। मध्य प्रदेश प्रान्तमा जङ्गलको नयाँ वृद्धिको परिमाणभन्दा ज्यादै परिमाणमा दाउराको निम्ति काठपात काटिएको कुरो पत्ता लागेको छ। नियत रूपमा निष्कर्षण गरिएका काठका लठ्ठाहरूको हिसाब त्यहाँ छैन। अनि मध्य प्रदेशमा अरू कुनै प्रान्तमा भन्दा ज्यादै जङ्गल पाइन्छ। मध्य प्रदेशमा यस्तो अवस्था छ भने हामी कल्पना गर्न सक्छौं अन्यन्य प्रान्तहरूको अवस्था कति खराब होला। खाने कुरा पकाउनका निम्ति जबसम्म तुरन्त रूपमा हामीले अरू किसिमको उर्जा आविष्कार गर्दैनौं अनि प्रयोग गर्दैनौं, हामीले निश्चय नै हाम्रा जङ्गलहरू गुमाउनेछौं।

धेरैजसो जन्तुहरूको दुर्भाग्य के छ भने तिनीहरूको मासु भोजनको निम्ति खूबै स्वादिलो हुन्छ; रहल जन्तुहरूको दुर्भाग्य हो तिनीहरूमा पाइने सुन्दर प्वाँख, छाला, भुत्ला, चमड़ा, सींग वा दाह्रहरू जसको विश्वका शहरहरूमा ठूलो माग छ। के ती जन्तुहरूलाई पक्रेर तथा मारेर तिनीहरूको अंगहरूलाई उच्च दाममा बिक्री गर्ने प्रलोभनलाई मानिसहरूले रोक्न नसक्नु कुनै अचम्भको कुरो हो ?

जब गोहीको चमड़ाबाट बनाएका हातेब्यागहरू बोक्ने फेसन आरम्भ भयो, हाम्रा जङ्गली इलाकाहरूमा भएका गोहीहरू प्राय: जम्मै ध्वंस भए। जब स्त्री जातिले चितुवाको भुत्लाबाट बनेका कोटहरू लाउन थाले, हाम्रो चितुवा-संख्या भक्रान भए। जब सर्प अनि छेपराको छालाबाट बनेको जुत्ता र पेटीहरूको प्रकोप चल्न शुरु भयो, त्यसबेला ती सरीसृपवर्गको संख्या खतरा अवस्थामा पुग्यो। खैरो प्वाँखहरू माछा मार्नको निम्ति सर्वश्रेष्ठ ठानिन्छन्; इग्रेट नामका चराहरू मारिन्थे कारण तिनीहरूको टाउकोका प्वाँखहरूको स्त्री जातिले लाउने टोप श्रृङ्गारिन्थ्यो। हात्तीहरू दाँतका निम्ति मारिन्थे— किनकि यस दाँतको आइभरिको विश्वभरि माग छ अनि यसको मोल उच्च छ। यो प्रत्यक्ष छ कि हाम्रा जङ्गलहरूबाट चोरिएका जम्मै जन्तुहरू विदेशी बजारहरूका निम्ति निर्दिष्ट गरिन्छन्; कारण त्यहाँ उच्च मूल्य पाइन्छ अनि फेसनको अक्कर तथा बाध्यतालाई इन्कार गर्न सकिँदैन। भारत स्वंयमा चाहिँ जन्तुका ती अंगहरूका सबैभन्दा बेसी माग छ जसमा कामवर्धनप्रद अनि औषधीय गुणहरू पाइन्छन्— उदाहरणको लागि, सींगको

निम्ति गैंड़ा मारिन्छ, मासुको निम्ति निलगिरिका बाँदर अनि आँखाको निम्ति लोरी नामक सिकुटे बानरजातीय पशु – यसले आँखाको दृष्टिशक्तिको पुनर्स्थापना गर्छ भन्ने विश्वास छ। यदि हामीले ती वस्तुहरूको ठाँउमा रासायनिक विकल्पहरू पाउन सक्यौं भने लोप भइरहेको कतिपय पशुहरूलाई हामी बचाउन सक्नेछौं।

जहाँसम्म वन्य जीवजन्तुको निर्यातको प्रश्न छ, भाग्यवस यो एउटा यस्तो विषय हो जहाँ राजनैतिक सीमानाभित्र राय सीमित छैन। भारतीय वन्य जीवजन्तु रित्तिन्दै गइरहेको कुराले यूरोप र अमेरिकाका विचारशील मानिसहरू हामी जतिकै विचलित छन्। जीवजन्तुको घात र निर्यातलाई बन्द गर्ने कोशिश हामीले गरिरहेको बेला उनीहरूले हाम्रा संकटसूचीमा भएको पशु र छालाहरूको पैठारी बन्द गरिदिएर हामीलाई उपकार गरेका छन्। एउटा अन्तर्राष्ट्रिय सम्मेलन स्थापना भएको छ जसले व्यापारका निम्ति निषेध गरिएका थुप्रै थरिका चराहरू र जन्तुहरूको सूची तयारी गरेको छ। लुप्त हुन लागेका जन्तुहरू जस्तै बाघ, गोही, घरियाल अनि ग्रेट इन्डियन बस्टार्ड अनुसूची १–मा राखिएका छन्, जसको अर्थ हुन्छ ती वस्तुहरूमाथि कुनै प्रकारको व्यापारिक लेनदेन गर्न सकिँदैन। केही कम परिमाणको संकटजनक स्थितिमा परेका थरिहरूलाई अनुसूची २–मा राखिएका छन् अनि केही नियन्त्रणको साथ तिनीहरूमाथि व्यापार गरिन्छ; अनुसूची ३–का प्राणीहरूमाथि अझ कम नियन्त्रण लगाएको छ। सम्मेलनले पारित गरेका प्रस्तावहरूलाई कार्यान्वयन गर्नको निम्ति जम्मै सहभागी देशहरू मिलेर एउटा सञ्चालन एवं वैज्ञानिक सत्ता नियुक्त गरेको हुनाले हामी आशा गर्छौं कि वन्य प्राणीहरूको तस्करी रोक्ने प्रयास सफल हुनेछ।

जङ्गली उपजहरू अत्यन्त आवश्यक र बहुमूल्य भएकोले मनमा एउटा स्वाभाविक प्रश्न के उठ्छ भने किन फेरि हामीले नयाँ जङ्गलहरू लगाउँदैनौ ? प्राकृतिक जङ्गलहरूमा पुराना रूखहरूको सट्टामा सयगुण रूख रोपिए, कारण धेरै कामहरूमा सयगुणको बढ़ी मात्रामा प्रयोग गरिन्थ्यो - रेल बिछ्यौनाको रूपमा, अरू प्रयोगसरह। हालमा धेरै तारपीनका जङ्गलहरू अल्प समयमा पल्प र कागज बनाउने सामग्रीको निम्ति लगाइएका छन्। तर ती जङ्गलहरूमा खास जङ्गलको भन्दा कृत्रिम जङ्गलका विशेष गुणहरू पाइन्छन्। एउटा जङ्गलको मुख्य बर्कत रहेको हुन्छ यसको अनेकतामा, यसको वनस्पतिको नानाविध रूपाकारमा, पातधरातलहरूमा देखिने बुट्टाहरूमा, उद्भिद्ले भरिएका सहस्रौं "तलाहरू"-मा, अनि अनेकताले रचेको वनस्पतिभित्र बस्ने बहु

प्रकारका स्तनपायी जन्तुहरू, पक्षीहरू, कीटपतंग अनि सरीसृपहरूमा; ती वस्तुहरू जङ्गलसित साथै एकाअर्कामाझ क्रिया-प्रतिक्रिया गरिरहन्छन्।

माटोलाई समातेर राख्ने गुणात्मक कार्यमा पनि एउटा प्राकृतिक जङ्गलसित मान्छेले रोपेका पहाड्को वृक्ष-बाटिका तुलनीय हुँदैनन्। एउटा प्राकृतिक जङ्गलभित्र भूइँमुनिको दृश्य प्राय: उतिकै चाखलाग्दो छ जतिको भूइँमाथिको छ। हरेक वृक्षको आफ्नै प्रकारको जरा-प्रणाली हुन्छ। कोही रूखको जरा लामो अनि धेरै मुनि भासिने हुन्छ; कोहीमा गहिरो नगएर भूइँमाथि फैलिन्छ; कोही जराहरू मोटो अनि कोही पातलो हुन्छ; कोही सोझो अनि लामो छ भने कोही अपरिमित ढंगले हाँगिएर मान्द्रो पर्दछ। ती जम्मै विभिन्न जरा-प्रणालीहरूले एउटा सशक्त टेवारूपी जग बनाएकोले माटोलाई नबग्ने हिसाबले उचित स्थानमा पक्रेर राखको हुन्छ, अनि त्यसबेला पहाड़ी खोलाहरू संग्ला रहन्छन्, माटोका केही ढिस्कानाहरूलाई पनि पानीले हल्लाउन सक्दैन। जहाँ जम्मै वृक्षहरू एउटै थरिका छन्, जरा-प्रणालीहरू पनि एउटै प्रकारका अनि एउटै गहिराइका छन्। रूखहरूलाई अति नजीग-नजीगमा रोप्न सकिँदैन, कारण जराहरूले फिंजिने ठाउँ पाउनेछैन्; यसो हुँदा भूइँमुनि वृहत् खाली ठाउँ पाइन्छ, अनि घनघोर वृष्टिको समय यो अझ गहिरिँदै जान्छ। एउटा सिङ्गो उद्भिद् थरिले रचेको जङ्गल भूइँमाथि दुर्गत र अफल हुन सक्छ भने भूइँमनि खकुलो र निस्तेज बन्न सक्छ। यसै कारणले पारिस्थितिकिविद् र संरक्षणवादीहरूले एक-वर्गे जङ्गल मनपराउँदैनन्।

यहाँ फेरि स्थानीय र विजातीय उद्भिद्वर्गमाझ भएको अन्तर महत्त्वपूर्ण ठहरिन्छ। दृष्टान्तको निम्ति, सयगुण प्राचीनकालदेखि भारतकै निवासी हो। सयगुण रोपस्थलीलाई एक्लै छोड़िदिए यसले चरा र कीराहरूलाई आकर्षण गर्नेछ जसले आफ्नो पालोमा बिउहरू ल्याउनेछन्; अनि यस प्रकारले सयगुणको टालो जङ्गलले थुप्रै अरू "रैथाने" उद्भिद्हरूलाई ल्याउनेछ; अनि केही समयमा नै सयगुणको सानो जङ्गल "प्राकृतिक" जङ्गलमा परिणत हुनेछ। अर्कोपट्टि तारपीन वृक्ष अस्ट्रेलियाबाट आएको हो अनि यसले हाम्रो कुनै रैथाने उद्भिद्लाई आकर्षण गर्न सक्दैन। यसले कहिले पनि जङ्गलको रूप लिन सक्दैन कारण यसको पातबाट बनेको सोतरले अरू उद्भिद्हरूलाई उम्रन दिंदैन। यो खाली तारपीनकै बारी भएर रहिरहने छ।

एक-वर्गे जङ्गलले, अर्थात् एउटा सिङ्गो उद्भिद्वर्गले ढाकेको रोपस्थलीले चाहे जङ्गल, बगैंचा तथा धेरै माइल टाढ़ोसम्म फैलिएको अन्नबालीको रूपमा नै होस, एउटा

समस्या खड़ा गर्दछ। यो सहजै नाशकारी कीटपतंगको शिकार बन्न सक्छ। ठूलो रकममा प्राप्त हुने कुनै एउटा विशेष किसिमको आहारले कुनै एउटा विशेष कीटपतंगको बथानलाई आकर्षण गर्छ, जुन संख्याकै कारणवस नाशकारी बन्दछ।

यी जम्मैबाट हामीले के शिक्षा पाउँछौं भने प्राकृतिक वन नै सर्वश्रेष्ठ वन हो —अर्थात्, जुन वनमा कड़ा खालको रैथाने वृक्षहरूको एउटा असल मिश्रण पाइन्छ। अनेकताभित्र शक्ति, सामञ्जस्य र सम्पन्नता पाइन्छ साथै सबै जीवनरूप वर्गबीच लगातार क्रिया-प्रतिक्रिया।

" जङ्गल" शब्दले हाम्रो मनमा घनघोर रूखहरूले ढाकेको विशाल क्षेत्रहरूको चित्र उप्जाउँछ —जुन क्षेत्र सैयौं वर्षहरूको अविधमा प्राकृतिक ढंगले विकास भएको थियो। हामी पाउँछौं कि यस्ता जङ्गलहरू हाम्रा आवश्यकताका लागि कदापि मनग्य छैनन् अनि अब तिनीहरूलाई सुदृढ़ बनाउने र फैलाउने दुवै कामहरू गर्नपर्नेछ। साथै, हामीले यो पनि बुझ्नपरेको छ कि प्राचीनकालदेखि चल्दै आएको जङ्गल क्षेत्रहरूले त्यही रूपमा जस्तै आशापूर्ण गणनाको आधारमा पनि हाम्रा दिनहुँ बढ़िरहने काठपात र दाउराको खाँचो पूरा गर्न सक्दैन। हामीले विपुल परिमाणमा काठपात उत्पादन गर्ने काम जोरसित गर्नपर्छ। सबै सरकारी वा गैरसरकारी जमीनका टुक्राहरूमा रूखहरू रोपेर काठपात निकाल्ने काम गर्नुपर्छ। हरेक गाउँ र शहरको आफ्नै रोपस्थली हुनुपर्दछ, जसको लगाउने र पालन-पोषण गर्ने काम त्यहाँका मानिस सम्प्रदाय स्वयंले गर्नेछन्। सहकारी ढंगमा यसरी चलाइएको जङ्गलले स्थानीय जनताको काठपातको जम्मै खाँचो पूर्ति गर्नेछ।

नि: सन्देह यस्तो व्यवस्थाहरूको लागि केही मात्रामा सहयोगिता, नियम पालन र संगठनको आवश्यकता पर्दछ जुन कुरो प्राप्त हुन यहाँ त्यति सजिलो छैन। हामीलाई थाहा भएअनुसार गुजरात प्रान्तले प्रायोगिक संस्थानहरूको एउटा परम्परा निर्माण गरेको छ अनि ठूलो परिमाणमा रूख रोप्न अनि सामाजिक वन विकास कार्य गर्नमा सफल भएको छ। गुजरातका मानिसहरू व्यावहारिक एवं व्यापारिक गुणहरूको निम्ति प्रसिद्ध छन्। उनीहरूले बुझे कि स्थानीय मानिसहरूले साक्षात रूपमा फाइदा पाउञ्जेलसम्म मात्र ती वृक्षहरू सुरक्षित रहनेछन्। एउटा बहुकोणीय व्यवस्था त्यहाँ गरियो जसद्वारा बालक-बालिकालाई रूखको मूल्य विषय पाठ पढ़ाइन्छ, स्वेच्छुक कार्यकर्तालाई शहरका सार्वजनिक ठाउँहरूमा रूख रोप्न आह्वान गरिन्छ, अनि स्थानीय मानसिहरूले पाउनपर्ने फाइदाको निश्चित गरिन्छ।

जहाँ सामाजिक वन विकासको प्रश्न उठ्छ, हामी सबैले गुजरात प्रान्तबाट एउटा शिक्षा लिने चेष्टा गर्नुपर्छ। हरेकससाना खुला जमीनहरूमा रूख रोप्नपर्दछ जसले हामीलाई दिनेछन् फल, दाउरा, काठपात अनि छाँया, अनि सबैभन्दा मुख्य कुरो हो रोपेको हरेक रूखलाई सुरक्षाको साथ पूर्ण रूपले फस्टाउने मौका दिनुपर्छ। यसो हेर्दा यो युक्ति सरल भए तापनि यसलाई कार्य रूपमा ल्याउन सके एकमात्र यस्तै युक्तिले हाम्रो देशलाई समृद्धिशाली बनाउनेछ।

१९८४ सालमा सरकारी अकंअनुसार पूर्ण जमीनको १९ प्रतिशत जङ्गलले ढाकेको थियो। हामीलाई शंका छ कि यो अंक पनि अझै बढ्ता भयो भनेर; धेरै भूमिहरू औपचारिक हिसाबले जङ्गलले ढाकेको अनुमानित गरिए तापनि त्यहाँ वास्तवमा रूखहरू पाइँदैनन् अनि ती भूमिहरू नाङ्गा छन्। यो कुनै अनौठो कुरो होइन कि कतिपय ठाउँहरूमा वृक्षहरू नभए तापनि "आरक्षित वन" भनेर नामपटहरू टाँगिएका छन्। कुमाउ र गड़वाल हिमाली पहाड़हरूका मुनिल्ला पाखाहरू नाङ्गा छन् जसको फलस्वरूप नदी-तटहरूमा माटो र बालुवा जम्दा बाढ़ सृष्टि हुन्छ। उत्तर प्रदेश र बिहारका विशाल इलाकाहरू बाढ़ग्रस्त भएको कुराले एउटा वार्षिक घटनाको रूप लिएको छ। लखनऊ, पटना र दिल्ली जस्ता शहरहरू पनि प्रायश: बाढ़ग्रस्त हुन्छन्, अन्य अनेकौं ससाना शहर र गाउँबस्तीहरूको ता कुरै नगरे पनि हुन्छ। हजारौं एकरको अन्नबाली विध्वस्त हुन्छ जब कि प्रत्यक्ष अनि अप्रत्यक्ष रूपमा हुने अन्य नोक्सानहरूको अनुमानसम्म पनि गर्न सकिँदैन। यी जम्मै दुर्घटनाहरूलाई रोक्न सकिन्थ्यो यदि पहाड़ी जङ्गलहरूको सुरक्षा र देखरेख उचित प्रकारले भएको भए। विमारलाई चाँड़ै जाती पार्ने उपचार त्यहाँ छैन, बाढ़ले सालिने आतंक मच्चाउने नै छ जबसम्म भिरालो पहाड़ी भूमिहरू रूखहरूले ढाकेका हुँदैनन्। ''बाँध-रोकथाम''-को निम्ति तोकिएको करोड़ौं रूपियाँ फलदायक तब हुनेछ जब पहाड़ी भूमिहरूमा फेरि रूखहरू रोपिन्छन्। तसर्थ धन सर्वप्रथम रूख रोप्ने योजनाको निम्ति खर्च गर्नुपर्नेछ। भाग्यवस, हिमाली भूमिको माटो मलिलो एवं गहन छ अनि नयाँ रोपनीहरूको बाँच्ने आशा त्यहाँ छ। पश्चिमी घाटमा स्थिति ज्यादै नराम्रो छ, त्यहाँ पाइने पातलो र इंट रंगको माटोलाई सैयौं वर्षअघिदेखि रूखका जराहरूले मात्र थाम्दै ल्याएका छन्। एकपल्ट रूखहरू काटेर नाङ्गो पारिदिए पश्चिमी घाटको भिरालो जमीनमा फेरि रूख उमार्न सकिँदैन कारण त्यो रूखो अनि पातलो माटो प्राय: तुरन्तै बगिसकेको हुन्छ। सम्पूर्ण देशभरि पहाड़का ती ''रक्षात्मक''

जङ्गलहरू लुप्त भइसके तथा भइरहेछन्। हामीलाई याद छ कि एउटा जङ्गलले आफ्नो चालिस प्रतिशत शक्ति गुमाए त्यसले काम गर्न छोड्छ अनि भविष्यमा माटोको रक्षा गर्न सक्दैन।

हाम्रो जङ्गल क्षेत्रफलको आयतन र गुणमा ह्रास ल्याउनु नै जानी–बुझी हाम्रो देशलाई अनि अन्तमा हाम्रो पृथ्वीलाई दुर्बल पार्नु हो। हामीले आफैलाई उपकारभोगीको रूपमा मात्र होइन तर जङ्गलले हामीलाई दिएको धन गुठियारको रूपमा पनि सम्झनुपर्छ।

# नदीहरू

## I

## *तिनीहरूका थुप्रै उपयोगिताहरू*

कुनै नदीलाई अति उत्तम रूपले बुझ्नु हो भने एउटा सानो हावाजहाजमा चढ़ेर यसको बाटोलाई पछ्याउनुपर्छ। भूगोल पाठ्य-पुस्तकअन्तर्गत भएका यथार्थ कुराहरू एकाएक गर्दै आँखाअघि झल्कनेछन् अनि त्यसले तीन प्रकारको रूप लिनेछन्। तपाईंले पर्वत श्रेणीको चेपबाट बग्दै गरेका खोल्साहरू देख्न सक्नुहुन्छ-पग्लेको हिउँ तथा वर्षात् नै श्रोत किन नहोस्। तपाईंले ससाना खोलाहरू घाम लागेको बेला उपत्यका इलाकामा टल्केको देख्न सक्नुहुन्छ, ती जम्मै मिलेर ठूलो खोलो बन्दछ; तपाईंले ती ठूला खोलाहरू उपत्यकाको केही तल्लो क्षेत्रमा भेट भएर एउटा नदीको रूप लिएको देख्न सक्नुहुन्छ। अनि तपाईंले निरन्तर बगिरहने नदीलाई पछ्याउन सक्नुहुन्छ, जुन नदी कोही बेला गोलाकार हुँदै आफैमा सम्मिलित हुँदछ, कोही समय घुमाउरो बाटो अपनाउँदछ, कोही बेला फराकिलो हुँदै एउटा निश्चल पानीको दहमा विलिन हुँदछ जहाँ जमीनले एउटा भाँड़ोको आकार लिन्छ, अनि कोही समय जमीन ज्यादै भिरालिएको खण्डमा तेजसित बगिरहेको हुन्छ। तर यो नदी चौँड़ो गरी बगोस् वा ढीलो गरी, घुमाउरो बाटो भएर हिँड़ोस् वा सोझो बाटो, यसको हृदयमा एउटै लक्ष्य रहेको हुन्छ-अन्तमा समुद्रमा पुग्ने। तसर्थ यसको हरेक कदमले यसलाई तल्लो सतहमा लैजानु नै पर्दछ चाहे त्यो एक इञ्चको लागि नै किन नहोस्। जहाँ जमीन समतल छ अनि सतहमा अल्प अन्तर मात्र छ, नदी फराकिलो, छिपछिपे अनि सुस्त हुँदै बहन्छ; जहाँ जमीन असमतल छ, यो नागबेली हुँदै सहजसित बग्छ, जहिले पनि जमीनको त्यो भागको खोजीमा जो मुन्तिरस्थित छ, अनि जसले नदीलाई त्यतिकै परिमाणमा समुद्रको नजीगमा पुऱ्याउँदछ। जहाँ नदीले आफैलाई पहाड़हरूले घेरा लाएका प्यालाझैं जमीनभित्र थुनिएको पाउँछ, त्यहाँ नदीबाट पोखरीको सृष्टि हुन्छ। अनि यदि पोखरीको ऊँचाइ अग्लो छ भने पानीले कुनै एउटा प्वालबाट बाहिर जाने द्वार खोज्दछ जब त्यहाँ एउटा झरनाको सृष्टि हुन्छ अनि फेरि समुद्रको खोजीमा नदी बगिरहेको हुन्छ।

यदि हामी हावाजहाजमा हुँदै हामीले जमीनमाथि बग्ने सबै नदीहरूलाई हेरे हामीलाई कस्तो अनुभव हुने थियो होला भने प्रथमत: ती नदीहरू पुरानो ढाँचाका बाटाहरू जस्ता देखिन्थे जो सजिलो प्रकारका इलाकाहरू हुँदै बग्थे। अनि यथार्थमा हामीले गल्ती कुरा गरेका छैनौं। कारण नदीहरू प्राचीनकालका मुख्य बाटोघाटो थिए, विशेष गरी जहाँ बाटो हुनपर्ने आवश्यकताको निम्ति भनेजसो मानिसको चेष्टा हुँदैन थियो। आखिरि शताब्दीको शूरबीर अन्वेषकले अति निस्पट्ट अफ्रिका महादेश आविष्कार गर्ने काममा आफ्नो अधिकांश सफर डुङ्गाद्वारा गरेका थिए। डुङ्गामा हिँड्ने एक्लो मानिसको निम्ति साथै चीजमाल र मानिसको आवगमनको निम्ति धेरजसो अपहाड़ी देशहरूमा नदीहरूले नै बाटोघाटोको प्राय: मूल यातायातको काम गर्थे। नदीको यातायात नै ठूला-ठूला आयतन भएको चीजमाल बोक्न सबैभन्दा सहज थियो। च्याप्टो पिंध भएका नाउहरूले गहुँका भारीहरू सस्तो मोलमा अनि सहजसित यद्यपि ढीलो गरी बोक्न सक्छन्। नदीलाई धेरै पैसा खर्च गरेर बनाउन अनि स्याहार-सम्भार गर्नुपर्दैन, जस्तो बाटोलाई पर्दछ। यो मुफतमा पाइएको वस्तु थियो अनि यो सदैव त्यहाँ प्राप्य थियो।

भारतीय गंगामैदान क्षेत्रका उत्तरमा बग्ने हिमतृप्त नदीहरूका धेरै अंशहरू सदैव मालमत्ता र मान्छेको यातायातका निम्ति प्रयोग गरिएका छन्। सुस्त अनि फराकिलो भएर बर्षैभरि बगिरहने पानीहरू ससाना वाफजहाज र ठूला नाउहरूका निम्ति उपयुक्त छन्। नदीमा चल्न सक्ने नाउहरू नै चियापत्ती, सुनपाट, खाद्यन्नहरू, मैन, सिमेन्ट र मल जस्ता मालमत्ता बोक्ने हाम्रा परम्परागत यातायात हुन्। ब्रह्मपुत्र परिवहनको दृष्टिकोणले एउटा आदर्श नदी हो। समतल भूमिमाथि बगेकोले यो फराकिलो अनि सुस्त छ, यो वृहत् परिमाणका चीजमाल जस्तै चियापत्ती, सुनपाट, खाद्यान्न र सिमेन्ट उत्पादन हुने क्षेत्रहरू भएर बग्दछ। अनि हिमाली पर्वतका हिउँमाथि यसको अस्तित्व निर्धारित रहेकोले यसमा कहिले पनि पानीको कमी हुँदैन।

भारतीय प्रायद्वीपका नदीहरू प्राय: वृर्षातृप्त हुनाले सुखौरो महीनाहरूमा सुख्न सक्छन्। नर्मदाबाहेक ती नदीहरूमा नाउहरू हिँड्न सक्दैनन्।

टाढ़ा दक्षिणमा, केरालामा नहरहरूको उचित उपयोग गरिएको पाउँछौं। पंक्ति-पंक्तिका नहरहरूद्वारा दूरस्थ स्थानहरूमा ससाना नाउहरूको सहायताले यात्रा गर्न सम्भव हुन्छ। यस्तो यात्रा सस्तो मात्र नभएर शान्तिपूर्ण, आरामदायक, रमणीय र निरापद पनि छन् -आजको युगमा जब अरू प्रकारका धेरजसो यात्राहरूमा उक्त गुणहरू पाइँदैनन्। नदीहरूले दिएका अर्को उपहार के हो भने काठका विशाल लट्ठाहरू नदीमा फ्याँकिदिए

सो पानीमाथि तहरिँदै कुनै टाढ़ास्थित तर उचित स्थानमा पुग्छन् जहाँ तिनीहरूलाई बटुल्न सकिन्छ। यो पद्धति संसारका ती भागहरूमा अझै पनि प्रचलित छ जहाँ सबै अवस्थाहरू सुविधाजनक छन्। यही प्रकारले काश्मिरी पहाड़हरूमा काटेका काठपात तल पञ्जाबका शहरहरूमा ल्याइन्छन्। लामो अवधिसम्म पानीमा डुबेर बस्नपर्ने स्थिति काठपातकै स्वास्थ्यको निम्ति सहायताजनक ठहरिन्छ; अर्कोपट्टि कृत्रिम यातायात खूबै खर्चेलु हुनाले यसलाई त्याग्न सकिन्छ कारण यसअन्तर्गत पार्वतीय बाटो निर्माणले पर्यावरणलाई पनि क्षतिग्रस्त पार्दछ।

मोटर गाड़ीको आगमनसित वेगसित कामकुरो गर्ने आधुनिक विचारधाराको कारणले हाम्रो जल–यातायात प्रणालीलाई दोस्रो स्थानमा झारिएको छ। तथापि पेट्रोलको अभावले उब्जाएका नयाँ स्थितिहरूको सन्दर्भमा हामीले अरू धेरै देशहरूसरह यो अनुभव गरिरहेछौं कि जल–यातायातलाई अवहेलना गर्नु एउटा भूल कुरो हुन गएको छ तर खुशीको खबर केही सानो धनराशी खर्च गरेर भए तापनि उक्त यातायातको पुनर्स्थापना गर्ने योजनाहरू जारी छ। यो अनुमान गरिएको छ कि हाम्रा नदीहरूको पूर्ण लम्तीको प्राय: एक–पाँचौ भागमा नाउ–यात्रा सम्भव छ। यस अन्तर्निहित शक्तिको पूर्ण उपभोग गर्ने अनिवार्यता हामी अनुभव गर्दैछौं। एउटा सुव्यवस्थित एवं सुसञ्चालित जल–यातायात प्रणालीले बाटोघाटो, बाटो निर्माण, बाटो मरम्मत, पेट्रोल र डिजेल तेलहरूमाथि परेको बोझलाई धेरै मात्रामा हलुका पार्न सक्छ। डुङ्गा र ठूला नाउहरू हावा र पानीको शक्तिले चल्न सक्छन्; अनि यदि हाम्रो लक्ष्यचाहिँ भगवानले दिएका सम्पद्हरूको सर्वोत्तम उपयोग गर्नु हो भने यो प्रत्यक्ष छ कि हाम्रो जल–यातायातको व्यवस्था र पालन–पोषण हुनुपर्दछ जसमा यसले उचित मात्रामा यातायातको भार ग्रहण गर्न सक्छ।

नदीको किनारा खेतीपातीको निम्ति सम्भवत: सबैभन्दा मलिलो जमीन हो। एउटा नदी, हामीलाई याद छ, घाँटीहरू र मोड़हरू भएर बग्छ। पहाड़हरूबाट यसले निकै नै शिखर माटो बटुल्छ अनि यो बग्ने समतल भूभागहरूमा यसको वेग सुस्त गतिको हुँदा त्यहाँ सो माटो थुपारिन्छ। कुनै ऋतुकालमा पानीको सतह उँचा हुँदा यो पानी नदी किनारातिर पोखिन्छ। त्यस समय माथिबाट बगेर आएको माटो नदीको पिंधमा नजमेर किनारा वरिपरिको जमीनमा थुप्रिन्दछ। एउटा ज्वलन्त उदाहरण हो–नाइल नदीको मुहानभूमि जसको सम्पूर्ण मलिलोपन नाइल नदीले बगाएर ल्याएको माटोको कारणले हो। गंगा नदीको तीरमा भएको मलिलो माटो पनि हिमाली मुलुकहरूबाट नै बगेर आएको हो।

छिमेकीस्वरूप नदीको समीपमा बस्ने किसान भाग्यमानी हुन्। वर्षात्को इच्छामाथि उसले निर्भर नगरे पनि हुन्छ, अनि एउटाको साटो दुइ बाली उसले लगाउन सक्छ; यद्यपि विशाल क्षेत्र सिंच्नु हो भने उसले ठूला-साना नहरहरूको निर्माण गर्नुपर्छ। धेरजसो सरकारी सिंचाइ योजनाहरू वास्तवमा किसानहरू रचित उपकरणकै विशाल र विस्तृत रूप मात्र हो। सरकारले नदीजललाई शुष्क क्षेत्रहरूमा लैजानुको निम्ति लामो चौड़ादार कुलाहरू बनाउँछन्। हजारौं एकर जमीन यस प्रकारले सिंच्नु सकिन्छ अनि यसरी एउटा सुखौरौ, अर्ध-मरूस्थल इलाका एउटा सुन्दर कृषिप्रधान देशमा बद्लन सक्छ। जल प्रयोग गरेवापत् केही शुल्क किसानहरूबाट लिए नहर निर्माणमा लागेको खर्च फिर्ता हुनेछ। सठीक ढंगमा उपयोग गरे एउटा नदीले यसका किनाराहरू र आसपासको क्षेत्र मात्र होइन तर वरिपरिका विशाल क्षेत्रहरूमा पनि हरियाली र सम्पन्नता ल्याउन सक्छ। विभक्त हुनुभन्दाअघि पञ्जाब प्रान्तको समुन्नति (''पञ्ज'' -को अर्थ पाँच अनि ''आब''- को जल) यसको नदी प्रणालीमाथि आधारभूत थियो।

हामीले सहजै बुझ्न सक्छौं कि विशाल परिमाणको गतिशील पानी एउटा प्रचण्ड शक्तिको प्रतिरूप हो। यदि ससाना झरनाहरूले साना घट्टहरू परिचालन गर्ने अल्प परिमाणको उर्जा उत्पादन गर्न सक्छ भने ठूला झरनाहरूले निश्चय नै सम्पूर्ण जिल्लालाई पुग्ने ठूलो परिमाणको उर्जा उत्पादन गर्न सक्नेछ। पानी खस्ने फेदमा एउटा चक्का बसाल्नु सकिन्छ जो लगातार घुमिरहँदा उर्जा पैदा गर्छ। छहरा जति विशाल छ उतिकै विशाल चक्का यसले घुमाउन सक्छ अनि उत्तिकै अनुपातमा उर्जा वा बिजुली उत्पादन यसले गराउन सक्छ। प्रसिद्ध झरनाहरू जस्तै जोग फल्स र शिवसमुद्रमले स्थानीय इलाकाहरूलाई उर्जा प्राप्त गराउँछ। तर सम्पूर्ण देशलाई उर्जा प्राप्त गराउन सक्ने प्रशस्त प्राकृतिक झरनाहरू नभएको खण्डमा कृत्रिम झरनाहरू स्थापना गर्नु आवश्यक छ।

तपाईंले एउटा नदीमाथि बाँध लगाउनुहोस् अनि पानीलाई जम्न दिनुहोस्, त्यसपछि बाँधको डीलबाट पानी खसालेर तल फेदमा तपाईंले राखेको चक्कालाई घुमाउन सकिन्छ। यो पानीलाई डोऱ्याएर तलतिरका जमीनहरूको सिंचाइ पनि गर्न सकिन्छ। धेरैजसो बाँधहरू बहुप्रयोजनीय छन्। तिनीहरूले विद्युतसित पानीको प्रबन्ध पनि एकैसाथमा गराइदिन्छन्। सरल शब्दमा भन्नु हो भने यस्तै कार्यको निम्ति बाँधहरू बनाइन्छन्। यस्ता जल-विद्युत एवं सिंचाइ बाँधहरू हुन सक्ने सर्वोत्तम ठाउँहरू हुन् पहाड़ी मुलुकका उपत्यकाहरू जहाँ एउटा नदी उच्च अनि विषम इलाका भएर बग्दछ। यहाँ नदीको फाँद साङ्गुरिएको हुनाले बाँध बसाल्ने काम खूबै सहज हुन्छ; तीन पक्षहरूबाट पहाड़ी

भित्ताहरूले यसको फाँदलाई छेकथुन गर्दा यो जल गहिराइपूर्ण एउटा पार्वतीय तलावमा परिणत हुन्छ; यदि बाँधको भित्ता अग्लो छ भने त्यही अनुपातमा माथिबाट जोड़ले पानीको मुस्लो खस्नेछ। दुर्भाग्यवस, खास गरी तिनै स्थानहरूमा सम्भवत: सर्वोत्तम जङ्गलहरू, सबैभन्दा पुराना अनि सुन्दर वृक्षहरू अनि विशाल संख्यामा जीवजन्तु पाइन्छन्।

तथापि, जहाँ बाँध निर्माण-स्थल होशियारसहित छानिएको छ अनि जहाँ यो परियोजना सावधानसहित नियत गरिएको छ, विभिन्न पक्षहरूलाई ध्यानमा राखेर हेर्दा एउटा असल बाँधले धेरै फाइदाहरू दिन सक्छ। एउटा असल बहुहिताय: बाँधको उदाहरण हो केरालाको पेरियार बाँध जो देशको सबैभन्दा पुराना बाँधहरूमध्ये एउटा हो। यहाँ एउटा जङ्गलभूमि पानीभित्र डुबे तापनि वरिपरिका जम्मै क्षेत्रहरूलाई मिलाएर एउटा वन्य-जीव शरणस्थान घोषणा गरिएकोले यसको क्षतिपूर्ति भएको छ। अर्ना, हात्ती, मृग साथै बाघहरू वरिपरिका पहाड़हरूमा घूमफिर गर्छन् अनि प्रायै ती जन्तुहरूलाई कृतिम तलावको तटतिर पनि देखिन्छन्। तलाव स्वयं पर्यटकहरूको निम्ति एउटा आकर्षण बिन्दु भएको छ जो वन्य जन्तुहरूलाई हेर्न पाउने राम्रो मौका लिँदै ससाना नाउहरूमा तलावको पानीमा घुम्छन्। शरणस्थानको रूपमा उक्त क्षेत्र सुरक्षित रहेकोले प्राकृतिक वनस्पति बाँच्न सकेको छ अनि त्यसले गर्दा थोरै माटो बाँधमा जम्दछ। प्राय: एक सय वर्षसम्मको उपयोगी कार्यमा सेवारत रहेर तलावले अझै पनि आफ्नो कर्तव्य राम्रै गरिरहेछ।

कुनै योजनाअन्तर्गत बाँध निर्माण गर्नपरे यसको अर्थ यो हुन्छ कि आसपासका विशाल क्षेत्र प्रभावित हुनेछन्। भनेजस्तो उचित स्थानमा भएको बाँधले, जहाँ अघि - बाट नै प्रशस्त उर्जा र सिंचाइ उत्पादन गर्ने मूल काम भइराखेको छ, पर्यावरणलाई नबिगारी एउटा क्षेत्रलाई उन्नत बनाउनमा ठूलो भूमिका खेल्न सक्छ। तर बाँधको सफलता यसको कारीगड़ीको कुदरतमाथि होइन तर स्थानीय जनताको दीर्घकालीन हितमाथि अड़िएको छ साथै मुख्य गरी यसले देहात क्षेत्रमा कुनै क्षति चिह्नहरू निश्चय नै छोड्ने छैन भन्ने विश्वासमाथि पनि छ।

दृष्टान्तस्वरूप, जहाँ पानी सिंचाइ र उर्जा दुवैको निम्ति प्रयोग गरिन्छ, भर्खरै मात्र प्राप्त भएको नयाँ पानीको सहायताले एउटाको ठाउँमा दुइ-तीन बाली लगाउन सकिन्छ भन्ने कुरो स्थानीय किसानहरूले बुझ्न मुख्य ठहरिन्छ, साथै भरपर्दो जल प्राप्त हुन सके तिनीहरूले अझै बेसी मल खेतीमा लाउन सक्नेछन् अनि अधिकतर फसल पाउन सक्नेछन्। किसानवर्गलाई मानसिक प्रकारले मात्र तयारी नराखेर व्यावहारिक ढाँचामा

पनि अझ बेसी बिउ र मलहरू उनीहरूलाई प्राप्त हुनका निम्ति सघाउनु पर्नेछ। ती जम्मैको निम्ति निश्चय नै उनीहरूलाई कर्जाको खाँचो पर्नेछ अनि नहरहरू बनिनु-भन्दा अगाड़ि कर्जा व्यवस्थाहरू भइसक्नु राम्रो हुनेछ। नहरहरू खन्नुभन्दाअघि तिनीहरूको हेरचाह विषय तर्जुमा भइसकेको हुनुपर्छ। ती नाङ्गा हिले किनाराहरू माटोलाई सुरक्षित राख्नको निम्ति रूखहरूले ढाकेको हुनुपर्छ। कसले उचित उद्भिद् थरि छान्ने साथै रोप्ने र त्यसको निर्वाह गर्ने? सिंयालदायकबाहेक फलदायक वृक्षहरू रोपेर जिल्ला क्षेत्रको खाद्य परिपूर्ति बढाउने मौका यहाँ छ। एउटा असल विधि हुनेछ रूखहरूको उपजको लिलाम गर्नु जसमा खरीदकर्ताले रूख र फलको रखवारी गर्नमा चासो राख्नेछन्। अनि युवावस्थामा छँदा ती वृक्षहरूलाई हुर्काउनुको साथ निश्चय नै छाड़ा पशुहरू र दाउरा काट्ने वासिन्दाहरूदेखि जोगाउनुपर्दछ।

यो मुख्य छ कि पानी माटोमा रसिनु र खेर जानुदेखि रोक्नलाई नहरहरू उपयुक्त ढंगमा मिलाएर राख्नुपर्दछ। जताभावी बसालेका नहरहरूले विशाल क्षेत्रहरूलाई जलाम्य पारेर ठूलो क्षति पुऱ्याएको छ।

एउटा असल बाँधले एउटा मुलुकको उपज बढ़ौती अनि वास्तवमा सम्पूर्ण जीवनस्तर सपार्ने क्रियामा एउटा उत्प्रेरकको काम गर्दछ। अर्कोपट्टि, एउटा अविचारित र कुकल्पित बाँधले बरबादी गराउनेछ, कारण यसले समस्त जङ्गललाई ध्वंस गर्न सक्छ, असंख्य जीवजन्तुको नाश गर्न सक्छ अनि जलामय स्थिति सृष्टि गरेर माटोको गुणलाई संहार गर्न सक्छ।

यदि उचित वर्गको माछा छानेर त्यसको पालन-पोषणको व्यवस्था मिलाउन सके सिंचाइका नहरहरू माछा-पालनका आदर्श स्थानहरू हुन सक्छन्। त्यसबेला नहरहरूले खेतबारीलाई चाहिने पानी मात्र प्राप्त नगराएर खूबै पौष्टिक प्रोटिन खाद्य जुटाउने काम पनि गर्न सक्नेछन्। नदीमा भन्दा नहरमा माछा पक्रनु सजिलो छ। कोही नहरहरूमा माछाको शारीरिक गतिविधिमा हस्तक्षेप नपुगोस् भन्ने दृष्टिकोणले माछे लिस्नुहरूको प्रबन्ध गरिएको हुन्छ। नदीको माछा सदैव एउटा गजबको खाद्य श्रोत भएको छ अनि एउटा असल स्वस्थ पानीको पसारले बड़ेमान राशिमा माछा उत्पादन गर्न सकिनेछ। प्रत्येक माछाको वर्गले केही वस्तुस्थितिहरूको सम्मिलनले उप्जाएको विशेष अवस्थालाई रूचाउँछ — कोही माछा शीघ्र वेगसित बग्ने खोलाभित्र बस्छन् भने कोही निश्चल तथा सुस्त वेगको पानीभित्र, अनि कोही गहिरो नदीहरूमा हुन्छन् भने कोही छिपछिपे पानीमा, कोही ठण्डा जलवायुमा मात्र पाइन्छन् भने कोही न्याना स्थानहरूमा। यस प्रकारले धेरै किसिमको बद्लँदो स्थानाकार र जलवायु भएर बग्ने नदीमा सैयौं

थरिका माछाहरू पाइन्छन्। जसरी समुद्रमा प्रशस्त मात्रामा माछा पाइन्छ, त्यतिकै तौरमा नदीहरूमा पनि माछा पाइने सम्भावना छ। माछालाई स्याहार्नु पर्दैन तर एउटै खतरा कुरा हो चाहेको भन्दा बढ्ता परिमाणमा माछा मार्ने चलन। जतिञ्जेल प्राचीनकालदेखि चलेको पद्धतिद्वारा माछा मारिँथ्यो -चाहे जाल इस्तमाल गर्ने नौकाहरूका झुण्ड तथा डोरी र अङ्कुशे लिने माझीहरू नै किन नहोस्, त्यतिञ्जेल माछाको मूल वंशलाई ध्वंस पार्ने कुनै डर थिएन। खतराहरू अन्य श्रोतहरूबाट उत्पन्न भए, जुन कुरोको बहस अर्को परिच्छेदमा गरिनेछ।

एउटा सफा नदीले प्लवनजीव र जल-उद्भिद्हरूको वृद्धि गराउँछ जो ससाना माछाहरूका आहार र पोषण हुन्। एउटा प्रचलित भ्रान्ति के छ भने गोही, घरियाल अनि चराहरू जस्ता अपहारकहरूले माछाको संख्या घटाउँछन्। यो सत्यता विरूद्धको कुरो हो। गोहीहरूले वास्तवमा विशेष ठूलो खालका अपहारक माछाहरूलाई खान्छन् जसले आफ्नो पालोमा हामीले मनपराएका माछाहरू पनि खान्छन्। तसर्थ, गोहीहरूको उपस्थितिले हाम्रा नदीहरूमा हामीले चाहेका माछा बढ्ता मात्रामा प्राप्त गराउन सक्ने कुरोको निश्चित गर्दछ। यो पनि साँचो हो, जम्मै प्रकारका आहार श्रृखलाभित्र भएझैं लुरे र रोगीहरू नै सर्वप्रथम शत्रुका आहार बन्दछन्। त्यसकारण यो युक्तिसंगत कुरा ठानिन्छ कि शत्रुहरूको उपस्थितिले केवल बलियो र स्वस्थ माछाहरू हाम्रो निम्ति राखिने कुरोको निश्चित गर्दछ। माछा र जल-उद्भिद्हरूले विविध प्रकारका चरा-चुरूङ्गीलाई पनि आकर्षित गर्दछ। कोही चराहरू जस्तै दुइ-चुच्चे समुद्री चरो र किङ फिसरले उड़ानमा नै माछा पक्रन्छन्, अन्य चराहरू, जस्तै बकुल्लो, सटिल्ट, स्नाइप अनि लामखुट्टेजन्तुहरू सुस्त गतिमा बगिरहेको नदीको हिले किनारातिर आहार खोजी खान्छन्।

यो प्राकृतिक जीवनचक्र जुनै पनि पानी पसारको एउटा रूपक बन्दछ; तलाव वा नहरजस्तो कृत्रिम जलाशयले पनि एकांकी रहनपरेमा आफ्नै "जीवनचक्र" प्रारम्भ गर्नेछ, थालनीमा हिलोमा घस्रने वस्तुहरूलाई लिएर। अल्प अवधिमा नै ससाना अपहारकहरूको प्रवेश त्यहाँ हुनेछ अनि एउटा खाद्य-संसारको शृंखला त्यहाँ शुरू भएको पाइनेछ। सबै जलाशयहरू, निश्चल तथा बहने, प्रचुर परिमाणमा उत्पादनशील हुन्छन्, कारण जहाँ पानी छ त्यहाँ जीवन छ। तपाईंले धेरैचोटि साङ्गुरो नहरपानीमा मानिसहरूले माछा मार्ने काम गरिरहेको देख्नुहुन्छ। तिनीहरूले ससाना हिले खाड़लजत्रो तलावमा वा कुलोजस्तो खोलोमा माछा मार्छन्। अनि तिनीहरूले सदैव परिश्रमको फल पाइरहेका हुन्छन्। पानी र ऐन्द्रिक पदार्थको सम्मिलनले कुनै किसिमको जीवित

वस्तु उत्पन्न गराउँछ भन्ने कुरोलाई सदैव मानिलिन सकिन्छ। एउटा विशेष शर्त हो-पानीमा केही मात्रामा अक्सिजन हुनुपर्दछ कारण सबै जीवित प्राणीहरूलाई अक्सिजनको आवश्यकता पर्छ। अर्थात्, पानीको पवित्रतालाई रासायनिक पदार्थहरूले दूषित गराएको हुनुहुँदैन।

जुन ठाउँमा एउटा नदी समुद्रसित जोड़िन्छ अनि जहाँ यसको मीठो पानी अधिकतम ज्वार चलेको बेला समुद्रको नुनिलो पानीसित मिसिन्छ, त्यहाँ एउटा दलदल परेको धापको सृजना हुन सक्छ जसबाट थुप्रै हिले खोलाहरू चारैतिर बग्छन्। यो मुहानभूमि प्राय: सदैव बेकामे जमीनको टुक्रा ठहरिन्छ–कारण ती हिले समतल भूमिहरूमा हामीले के पो गर्न सक्थ्यौं र? तर यथार्थमा ती नदीमुख भूमिहरू खूबै उपयोगीसिद्ध भएका छन्, कारण धेरै थरिका माछाहरूका पुनर्उत्पादन स्थान त्यही भूमिहरू हुन्। नदीमुख भूमिको छिपछिपे निश्चल पानीमा माछाहरू अण्डा काड्नका लागि आउँछन् तर त्यहाँ कुनै माछा पनि समुद्र पस्नअघि बढ्न सक्दैनन्। साँच्ची नै, यदि हामीले ती ''बेकामे'' हिले खातहरूलाई उपयोगी बनाउने कोशिश गरेको भए हामीले ती माछाहरू, झिंगे माछा र सिपी जातिका प्राणीलाई ध्वंस गरिसकेका हुनेथियौं –जुन वस्तुहरूले हाम्रा भोजनप्रति प्रशंसनीय योगदान गरेका छन्।

अहिलेसम्म हामीले नदीहरू विषय यही दृष्टिकोणले चर्चा गऱ्यौ जसलाई उपयोग गर्न सकिन्छ अनि जसले हाम्रा भौतिक समृद्धिलाई अझ बढाउन सक्छन्। अनि शायद त्यस पक्षलाई होशियारसित विचार गर्नपर्ने छ। नदीहरूको अर्को पक्ष हो तिनीहरूले एउटा तिरतिरे धारादेखि एक माइल चौंड़ा भएको नदी नै किन नहोस् जुनै रूपमा पनि अनि जुनै ठाउँमा बगे तापनि हामीलाई आनन्द र आमोद-प्रमोद दिलाउँछन्। पानीमा खुट्टा डुबाएर खेल्नु, पौड़ी खेल्नु अनि कागजका नौकाहरू पानीमाथि तैरनु साथै माछा मार्नु, नाउ ख्याउनु हामी मनपराउँछौं। बगिरहेको जल मनोरञ्जन, आमोद-प्रमोद र हर्षका अशेष श्रोत हुन्। यसले आफ्नो अति असक्रिय अवस्थामा पनि सुन्दर परिवेशबाट बगेको पानीको दृष्टिले हामीलाई ठूलो आनन्द दिन्छ अनि मनलाई खुशी र जोशिलो बनाउँछ।

थुप्रै नदीहरू भएको देश साँच्ची नै आशिक पाएका देश हुन्। नि:सन्देह प्राचीनकालका अत्यन्त विकसित सभ्यताहरूमा ठूला-ठूला नदीहरू, जस्तै सिन्धु, नाइल अनि टाइग्रिस-इउफ्रेटस् उपत्यकामा जन्मेका अनि हुर्केका थिए। कारण यहाँ मानिसहरूले खूबै सुव्यवस्थित र सुचारित जीवन बिताउन सक्थे जुन कुरो पानीको अभावले पिसिएर एक ठाउँदेखि अर्को ठाउँ बसाइँ सर्ने मानिसहरूमा पाइँदैन थियो।

तिनीहरूले जमीनमा काम गरेर यसबाट उपजहरू निकाल्न सक्थे जसले जीवनलाई सुखी बनाउँथ्यो। अनि एकपल्ट जीवनका खाँचोहरूको प्राप्ति निश्चित भएपछि ती कलाहरूको विकास गर्न समय र शक्ति त्यहाँ उपलब्ध भयो जसलाई सामुहिक रूपमा सभ्यताको उपमाले सम्बोधन गरे उचित ठहर्नेछ।

सबैभन्दा पुरानो अनि सफलता प्राप्त गरेका शहरहरू विशाल नदीहरूका किनाराहरूमा रहेको कुरा कुनै संयोग होइन- तपाईंले लण्डन, पेरिस, रोम, फ्लोरेन्स, काइरो र हाम्रो आफ्नै दिल्लीको सम्झना गर्नु सक्नुहुन्छ। हाम्रो जीवन अस्तित्व बचाउने ती शहरहरूबाट बग्ने पानीका बुंदहरू हजारौं प्रत्यक्ष अनि अप्रत्यक्ष रूपमा उक्त शहरहरूकै सम्मुन्नतिका श्रोत हुन् अनि उहिलेदेखि हुँदै आएका छन्। तिनीहरूको अनवरत समृद्धिको निम्ति सम्पूर्ण जललाई सफा र स्वस्थकर राख्नु अनिवार्य छ।

# नदीहरू

## II

## *के तिनीहरूको दुरूपयोग भएको छ?*

पहिलो परिच्छेदमा हामीले मुख्य कार्यहरूको फाँटवारी बनायौं जो नदीहरूलाई गर्न लगाउन सकिन्छ-खेतीपातीको निम्ति पानी, हाम्रो निम्ति माछा साथै सस्तो यातायात र बिजुली, अनि सबैभन्दा मुख्य कुरो, एउटा चिरस्थायी जल आपूर्ति गरिदिने, जुन कारणले ती नदीहरूका किनाराहरू शहरबजार बसाल्नको निम्ति आदर्श स्थान बने।

अब हामी देख्नेछौं ती नदीहरूमध्ये कतिवटाले मात्र साँच्ची नै काम गर्दा रहेछन्, कहाँनेर सफलता र असफलताहरू धेरै छन्, कहाँनेर हामीले प्राप्त गरेको परिणामलाई अझै सुधार्न सकिन्छ, अनि कहाँनेर हाम्रा युक्तिहरूलाई बद्लाउनपर्ने रहेछ।

प्रारम्भमा, मानिलिउँ खेतीपातीलाई सुहाउनेयोग्य जमीनभित्र नदीको एक भाग पानी बगिरहेछ। अब किसानले नदी िपंधबाट कसरी आफ्नो जमीनमा पानी तान्नु सक्छ? सम्भवत: पानी तान्नुको निम्ति उसले एउटा उत्तोलक यन्त्रको प्रयोग गर्नुपर्ने छ अनि त्यसपछि कुलोहरू खन्नुपर्ने छ जसद्वारा उसले चाहेको ठाउँमा पानी पुग्न सक्छ। ती कुलोहरू साङ्गुरो अनि कच्चा नै हुनेछन् अनि हिले बगरमा पानी छिचल्किँदा त्यसको अधिकांश भाग गायब हुनेछ। यहाँ एउटा स्पष्ट कुरो के देखिन्छ भने घरेलु किसिमको यो सिंचाइ व्यवस्थाले नदी-किनारास्थित जमीन्हरूलाई मात्र फायदा हुनेछ। टाढ़ामा रहेका जमीनहरूले एकमात्र नदीको पानीबाट फाइदा लिन सक्नेछन् यदि सरकारले युक्तिसंगत नहरहरू बनाइदियो भने।

जब सरकारले कृषकीय भूमिमा नदीजलले सिंचाइ गर्ने फैसला गर्छ, सधैंको चलनानुसार शुरूमा एउटा सानो (वा ठूलो) बाँध बनाइन्छ जसमा त्यही अनुपातमा जल सञ्चय गरिन्छ। त्यसपछि विभिन्न उपयुक्त दिशाहरूमा नहरहरू खनिन्छ। नजीक क्षेत्रका किसानहरूले भने आफ्नो खेतबारीमा पानी तान्ने काम आफैले गर्नपर्ने छ जसको निम्ति सरकारले खनेको नहर र आफ्नो जमीनबीच नहर खन्ने व्यवस्था गरिन्छ। नयाँ सिंचाइ

योजनाले लाखौं हेक्टर जमीन खेतीको निम्ति प्रयोग गरिने कुरा समाचार-पत्रले जनाएको अर्थ यही हो। कागजमा यस किसिमको योजना अति आदर्श देखापरे तापनि भारतमा व्यावहारिक तौरले यसका दुइवटा असुविधाहरू प्रत्यक्ष छन्।

पहिलो असुविधा हो -किसानहरू आफ्नो पक्षको अन्तिम भाग नहर खनेर खेतबारीमा पानी लाउन अनिच्छुक छन्-कारण तुलनात्मक दृष्टिले थोरै खर्च लागे तापनि सो रकम निकाल्न उनीहरू असमर्थ छन्; तथा गर्नपर्ने कष्ट र खर्चको अनुपातमा फायदाचाहिँ नहुने कुरोमा उनीहरूको विश्वास छ। त्यस्ता परिस्थितिहरूमा धेरै टाढ़ासम्म पानीको नहर गए तापनि कोही बेला त्यहाँ कुनै उपभोक्ताहरू हुँदैनन्, फलस्वरूप नदीको पानी खेर फालिन्छ। यथार्थमा खेर फाल्नुभन्दा पनि खराब कुरो त्यहाँ के देखिन्छ भने पानी वाफ भएर हावामा विलीन हुनु अनि जमीनमा सोसिनु। सुस्त वेगमा बग्ने पानीका ती नहरहरू सरल र सिधा तौरले हिलोमाटो रचित गर्तहरू हुन्; पानीको अधिकाँश खण्ड नहरमुनि जमीनमा सोसिन्छ अनि त्यहीं नापत्ता हुन्छ। यस विधिलाई निस्पतन (seepage) भनिन्छ; अनि कालान्तरमा नहरको दुवैपट्टिको जमीन जलाम्य हुनेछ, पानीले विस्तारै नुनको थेग्रो थुपार्नेछ र व्यावहारिक दृष्टिकोणले कृषि उद्योगको निम्ति जमीन बेकामको हुनेछ। ती नहरहरूलाई बाहिरबाट सिमेन्ट वा कुनै जलजित पदार्थले पोतेको भए निष्पतन क्रियाको रोकथाम हुने थियो, तर यसो गर्न अत्यन्त खर्चालु हुने हुनाले सम्भवत: यो योजना मुनासीब हुन सक्तैन। थाहा लागेअनुसार पान्चेत बाँधको ६ प्रतिशत पानी मात्र प्रयोग गरिन्छ, अन्य बाँधहरूको उपभोगको कुरा पनि त्यति सन्तोषजनक छैन।

तसर्थ, हालको स्थिति के छ भने प्रत्येक साल सिञ्चित कृषकीय भूमिका विशाल क्षेत्रहरू जलमग्न र नुनिलो हुँदा कृषिको निम्ति अयोग्य भइरहेछन्; अनि हामीले गुमाएको जमीनको सट्टामा उपलब्ध गरिएका नयाँ भूमि क्षेत्रहरूमा पानी ल्याउनु हो भने नयाँ सिंचाई योजनाहरूको उपाय गर्नुपर्ने छ। यो थाहा भएको छ कि नहर-सिंचाइद्वारा बिग्रेको जमीनको क्षेत्रफल र हरेक साल सिंचाइभित्र ल्याइएका नयाँ जमीनको क्षेत्रफल प्राय: एउटै परिमाणको छ। यसबाट यो स्पष्ट हुन्छ कि यस किसिमको सिंचाइ व्यवस्थालाई साँच्चीको दीर्घकालीन सफलताको प्रतिरूप हो भन्न गाह्रो पर्छ। तसर्थ, विशेषज्ञ र संरक्षणवादीहरूले यस्तो सिंचाइ योजनाहरूको प्रतिवादमा आवाज उठाउनु कुनै आश्चर्यको कुरो हुनेछैन। उनीहरूको विचारमा पाताले जल तथा यसबाट उप्जेका

विभिन्न किसिमका कूपहरूले नै अति उच्चत्तर ढंगमा सिंचाइको समाधान गर्न सक्ने छन्।

यद्यपि, धेरै ठाउँहरूमा बाँध निर्माणको एउटै मुख्य लक्ष्य सिंचाइ होइन। बाँधको मूल उद्देश्य उर्जा तथा बिजुली उत्पादन गर्नु हो। एउटा विशाल अग्लो बाँधको पछिल्तिर सञ्चय भएको पानी पोखिँदा बिजुली उत्पन्न हुन्छ अनि यो विद्युत उत्पादन गर्नु नै प्राय: सदैव ''बहुप्रयोजनीय'' बाँधहरूको मूल उद्देश्य रहेको हुन्छ।

पार्वतीय क्षेत्र र नदीहरूको प्रयोग गर्ने अनि उर्जा उत्पादन सम्भव गराउनको निम्ति वृहत् स्तरमा ती तत्त्वहरूलाई अदल-बदल पार्दै सञ्चालन गर्ने तथा यथाशब्दमा भनौं भने हाम्रो स्वार्थको निम्ति प्रकृतिलाई काममा लगाउने हाम्रो प्रारम्भिक विचार साहसी एवं चतुर थियो, यस कुरोलाई स्वीकारी लिँदै हाम्रो बहस अब शुरू गरौं। हाम्रा आवश्यकताहरूको बढ्दो परिमाणसित शिल्पशास्त्र ज्ञान अघि बढ्दै जाँदा हाम्रो सञ्चालन सामर्थ्यसित बाँधको परिमाण पनि विशाल हुँदै जाँदा अनि जफ्त गरिएको जलराशी अझ वृहत् र गहिरो हुँदै जाँदा उर्जा उत्पादनको परिमाण झन चित्ताकर्षी बन्दै गयो। प्राप्य फायदामा मानिसको विश्वास दृड़ हुँदै जाँदा उसले उद्दण्डातापूर्वक प्रकृतिको रूपलाई बद्लाउन थाल्यो। प्रकृतिले पनि आफ्नो पालोमा असक्रिय - असहयोग र पूर्वसूचक तरिकाअपनाउदै मानिसप्रति साटो फेर्न शुरू गऱ्यो। सरल रूपमा उप्जेका समस्याहरूको वर्णन यस प्रकार छन्: (१) निश्चय नै दुइ पहाड़हरूबीचको उपत्यकाबाट बग्ने नदीमाथि बाँधहरू लगाइएको हुनुपर्ने थियो। (२) बाँध क्षेत्रबाट बाँधको कारणले विस्थापित जनसंख्याको पुनर्वास गर्नुपर्ने थियो। (३) बाँधको योजना जति विशाल छ उतिकै परिमाणमा श्रमिक संख्या र सरसामान बाँध बनाउनको निम्ति लाग्नेछ। (४) प्रथमत: बाँध क्षेत्रमा श्रमिक दल र सरसामान लैजाने बाटाहरू खन्नाले निश्चय नै जङ्गल ध्वंस हुने थियो जुन हामीले अघिल्लो अध्यायमा पढ्यौं। (५) बाँध क्षेत्रमा एउटा विशाल श्रमिक दल डेरा लगाएर बस्दा तिनीहरूले घर बनाउने काठपात र दाउराको निम्ति रूख काटी वरिपरिका पहाड़ी इलाकालाई नाङ्गो बनाइदिए। बाँध तयारी गर्न जति लामो समय लाग्यो उति नै ठूलो क्षति त्यहाँ भयो -अथवा बाँधको आयतन र भूक्षय एकअर्कामा सम्पूरक थियो । (६) हरेक वर्षात्‌मा आरक्षित पहाड़ी भेगको माटो पानीले नयाँ तलावमा बगाउँथ्यो। (७) तलावको पिंधमा माटो र बालुवा जम्मा हुन थाल्यो अनि अल्प समयभित्र तलावको आयतनमा घट्ती हुँदा यसले आफ्नो काम गर्न सकेन।

हाम्रा धेरैजसो बाँधहरूको जीवन आयु यस्तै प्रकारले कम भएको हो। लामो समयसम्म चलेको कार्यकलापका अन्तमा खास गरी एउटा सुन्दर पार्वतीय क्षेत्रको ध्वंस भएको हामी पाउँछौं, अनि फेरि हामीले अपेक्षित उर्जा उत्पादन गर्न सकेनौं। हामीले यति नै पायौं कि एउटा बाँधले जति पनि बिजुली शक्ति हामीलाई दिनपर्ने थियो, यसले त्यसको केवल आधांश उत्पादन गर्दछ।

माथिका कुराहरूबाट यो स्पष्ट हुन्छ कि वास्तवमा ती बाँधहरू स्वयं त्यति दोषी छैनन् जतिको दोषी आकस्मिक रूपमा घटेका घटनाहरू छन् अनि जसको हिसाब किताब हामीले गरेका छैनौं – ती विशाल श्रमिक दल अनि उनीहरूबाट बेधड़कपूर्ण भएका रूखहरूको ध्वंस, बाटोघाटोको निर्माण अनि फलस्वरूप जङ्गलको चोरी। अर्को एउटा स्पष्ट अनुभव गरिएको कुरो हो वृक्षहरू र वृक्ष–आवरणको महत्त्व विषय। यो भद्र ''जङ्गली'' वृक्ष आफैआफ उत्पन्न हुन्छ कुनै प्रेरणारहित अनि त्यसले हाम्रो माटोलाई प्राण, स्वास्थ्य अनि स्थिरता दिन्छ। त्यो बहु–करोड़ रूपियाँको योजना शक्तिशाली आधुनिक शिल्पशास्त्रको ज्ञानको आढ़ लिएर पनि असफल हुँदछ कारण बाँधमाथिका ''जङ्गली'' रूखहरू काटिएका छन्।

एउटा युक्तिसंगत कुरो के हो भने श्रमिक दलको व्यवस्था उत्तम रूपमा गर्न सके अनि शायद श्रमिकहरूलाई कर्मस्थलदेखि टाढ़ा राख्न सके वरिपरिका पहाड़ र जङ्गलको क्षति धेरै कम हुने थियो। व्यावहारिक क्षेत्रमा यस्ता आशान्वित योजनाहरूले काम गर्दैनन्। श्रमिकवर्गलाई कहाँ बसाउनुपर्ने हो ? टाढ़ाबाट धाउनपरेमा जङ्गलकै एउटा क्षेत्रभित्र वासस्थान हुनपर्ने छ। अनि जतिञ्जेलसम्म मानवीय मजदूर दल त्यहाँ रहनेछन् तिनीहरूलाई पकाइखाने इन्धनको खाँचो पर्नेछ जसको निम्ति तिनीहरूले नजीकैका रूखहरू काटनेछन्। के सम्पूर्ण श्रमिक दललाई स्टोव (stove) र मट्टीतेल बाँड्ने व्यवस्था मिलाउनु सम्भव होला ? हामीले याद राख्नुपर्ने कुरा के हो भने कहिलेकाहीं अल्प परिमाणमा भन्दा धेरै मानिसहरूले लगातार रूपमा रूख काट्नाले नै जङ्गलहरू नाश भइरहेछन्।

यो एकदमै साँचो हो प्रकृति दानशील छ, पुनः प्राप्ति र पुनर्लाभको महान् शक्ति यसमा निहित छ। यसले दिएको उदारतामा मात्र हामी बाँच्न सके प्रकृतिको दानले हामीलाई सदैव पुग्नेछ। प्रलम्बित उत्पादनको अर्थ यही हुन्छ - त्यति मात्र लिने जुन प्रकृतिले हामीलाई दिन सक्छ तर यसको मौलाउने सामर्थ्यलाई असर पार्न हुँदैन। कम्ती काठपातको श्रोतमाथि निर्भर गर्ने विशाल जनसमुदायले वास्तवमा ब्याजबाहेक मूल धनराशि पनि खाइरहेको हुन्छ; अनि अल्प समयमा नै जनता र जङ्गल दुवै दिवालिया हुनेछन्।

परिचित शहरी भाषामा अनुवाद गर्नु हो भने यो स्थिति सुनको अण्डा पार्ने हाँसको लोककथाकै समान छ। हाँसको मालिक लोभी विचारमा फस्यो, उसले विचार्‍यो त्यस हाँस मार्नाले त्यसको पेटमा भएको जम्मै सुनका अण्डाहरू उसले पाउनेछ। तर एकपल्ट हाँस मरेपछि स्वभावत: ती बहुमूल्य सुनका अण्डाहरू त्यसले पार्न छोड्यो।

कोही बेला यस्तो स्थिति पनि उप्जन्छ कि औधी मात्रामा बिजुली उत्पादन गरिसकेपछि चारैतिर व्याकुल हुञ्जेल उपभोक्ताहरूको खोजी शुरू हुन्छ जसबाट योजनामा लागेको खर्च उठ्न सक्छ। उद्योग-धन्धाहरूलाई सम्बन्धित इलाकाहरूमा बोलाइन्छ अनि सस्तो दरमा बिजुली-शक्ति आपूर्तिको कबोल दिइन्छ। आखिरी फल के हुन्छ भने एउटा विशाल प्राकृतिक क्षेत्रको "बलपूर्वक" विकास गरिन्छ। "विकास"-को अर्थ भएको छ मूल्यवान जङ्गलहरूलाई उद्योगहरू बसाउनका निम्ति अझ नाङ्गो पार्नु, जुन उद्योगहरूले जङ्गल क्षेत्र ध्वंस गरी उत्पन्न गरेको उर्जा किन्नेछन्। बारम्बार हामीले मनन गर्नुपर्ने कुरा के छ भने जङ्गलहरू जनसंख्या वृद्धिको कारणले एकपल्ट ध्वंस भएपछि फेरि उम्रने मौका त्यहाँ हुँदैन।

अहिलेसम्म एउटा बाँध बनाउँदा "औपचारिक" रूपमा पानीमुनि डुबेका जङ्गल र उपत्यकाहरू विषय हामीले कुनै चर्चा गरेका छैनौं। यो धेरै वर्गमाइलको क्षेत्रफल हुन सक्छ अनि बारम्बार सबैभन्दा धनाढ्य उपत्यकाहरू पानीमुनि डुबेका पाउँछौं। मानव वासस्थानहरूलाई सारेर डुब्नदेखि जोगाउन सकिन्छ; तर जीवजन्तु तथा रूखहरूलाई बचाउने न कुनै उपाय छ न त कुनै प्रयत्न।

यस्ता योजनाहरूमा पाइएको एउटा आम उत्पात हो चापको प्रभावले बाँधको भित्ता भत्किन शुरू हुनु। १९७९ सालमा मोरभि बाँध पड्किँदा हजारौं मानिसहरूको मृत्यु भएको घटना हाम्रो स्मरणमा अझ पनि आलो नै छ। यस घटनासम्बन्धी यथार्थ कुराहरू हुन्: १९७४ सालमा बाँध बनाउने काम समाप्त भएको थियो। १९७९ सालको अगस्त महीनामा पानीको शिर इलाकामा प्रचुर वृष्टिपात भएको थियो, अनि पानीको चापले गर्दा बाँधको भित्ता भत्कियो। पोखिएको पानी जोड्सित मोरभि शहरतिर बग्यो अनि एउटा ठूलो भाग जनसंख्यालाई मार्‍यो। उचित संख्या कसैलाई याद नभए तापनि ५ हजारदेखि २० हजार मानिसहरू मरेको अनुमान छ। १९७९ साल एउटा भल-बाढ़ीको वर्ष थियो; अनि मोरभिको दशा धेरथोर मात्रामा सम्पूर्ण देशमा दोहोरियो। थुप्रै दृष्टान्तहरू छन् जहाँ वरिपरिका इलाकाहरूका सिंचाइको निम्ति धेरै पैसा खर्च गरेर बनाएका बाँधहरू पड्किँदा किनाराहरू पनि पड्के, फलत: बाँधले ती इलाकाहरूमा लाभको सट्टा हानी पुर्‍यायो। प्रत्येक उत्पात भएको समयपछि नियन्त्रणका निम्ति प्रस्तावहरू

तयारी गरियो। यो साँचो हो कि असाधारण तौलका उत्पातहरू भएको समय साधारण ढंगका नियन्त्रणबद्ध कदमहरू प्रभावहीन ठहरिन्छन्। तर यदि परिस्थितिहरू त्यति भयानक उत्पात गराउने प्रकारका छैनन् भने बाढ़को सर्वोत्तम उपचार हो शिर इलाका र नदी उपत्यकामा पूर्ण रूपले रूखहरू रोपेर ढाक्नु। यस प्रकारको रक्षण ''मान्छेले बनाएको''-भन्दा धेरै बेसी भरपर्दो हुन्छ।

कागजमा बहुप्रयोजनीय बाँध आकर्षक देखापरे तापनि विशेषज्ञहरूको विचारशील निष्कर्षअनुसार यसका मर्काहरू भयपूर्ण हुन सक्छन्। कदाम, पान्चेत, नानकसागर, चिखोले, दन्तिवादा अनि अरान बाँधहरू पुरै तौरले असफल छन्।

भिर बाँधमा बनाएको दश महीनापछि फाटोहरू निस्के, जब कि प्रयोगमा आएको धेरै वर्षपछि भन्दर्दरा बाँध जोड़ले चुहुनु थाल्यो। एउटा कुरो, धेरै वर्षपछि चुहुने पुरानो बाँध काम नगर्ने नयाँ बाँधभन्दा अझ ध्वंसात्मक ठहरिन्छ। कारण एकपल्ट किसानहरू नहर-सिंचाइमाथि पुरै भर परिसकेपछि यसको आकस्मिक बन्दले वृहत् स्तरमा बिगार र हाहाकार गराउँछ।

शायद, यहाँ अन्य विभिन्न सिलसिलाहरूझैं मूल कुरो हुनेछ ''स्तर''-को। एउटा अल्प परिमाणको तर सम्हाल्न सकिने योजना जसमा उच्चत्तर शिल्पविज्ञानको रंगी-चंगी पाइँदैन तर जहाँ असफलताको अर्थ पूर्णतया नाश हो भनेर किटान गर्न सकिँदैन -शायद यस्तै स्थितितिर हाम्रो लक्ष्य ढल्केको हुनुपर्दछ। जब स्कुमेचरले "सानो वस्तु सुन्दर हुन्छ" भन्ने वाक्शैली बनाए, यसले हामीलाई झसङ्ग पाऱ्यो, कारण ठूला विचार र योजना गर्नुमा हामीले गर्व मानिरहेथ्यौं। तर निश्चय नै काम नलाग्ने ठूलो चीजभन्दा काम लाग्ने सानो चीज नै उत्तम हुनेछ। सानो स्तरको योजनाले काम नगरेमा केही मानिसहरूलाई मात्र असर पार्छ भने अर्कोपट्टि ठूलो योजनाको असफलताले सम्पूर्ण देशलाई असम्बद्ध बनाउन सक्छ।

बाँधहरूको असफलता मात्र बाढ़को कारण होइन, सदैव धेरै मात्रामा चाल पाइएको कारण हो शीघ्र गतिमा नदीको सतह बढ़ेकोले अनि किनारालाई जलमग्न पारेकोले। दुवै समस्याहरू उप्जाउने मूल तत्त्व खास गरी एउटै छ — नदीको पिंधमा माटो-बालुवा जम्मा हुनु — जुन रोगको सर्वोत्तम उपचार हो वृक्षहरू।

यो आवश्यक छैन कि खेतीपातीमा चलाउने पानी एकदमै संग्लो अनि सफा हुनुपर्छ। केही मात्रामा अस्वास्थ्यकारक मैलाहरू मिसिए तापनि त्यसले कुनै नोक्सानी गर्नेछैन— सुकेका पातहरू, उद्भिद् जातीय पदार्थहरू, जीवजन्तु र चराका विस्टाहरू। ती वस्तुहरूले माटोलाई मलिलो अनि उन्नत बनाउनको साथ मलको काम गर्छन्। ती कार्बोनिक

पदार्थहरू अन्तमा जमीनमा फर्किनुपर्ने कुरा स्वाभाविक र उचित ठहर्दछ। अकार्बोनिक पदार्थहरूले नदीलाई दूषित गराउँदा त्यस नदीको जल खेतीपातीको निम्ति अयोग्य हुन्छ। ती पर्दाथहरू नदीतटको समीपमा भएका रासायनिक कारखानाहरूबाट छोड़िएका हुन्, तथा जमीनमा मल र कीटनाशकको रूपमा लगाइएका ती पदार्थहरू समयान्तरमा बगेर नदीमा पुग्छन्।

स्वभावत: सबैभन्दा खराब अपराधीहरू हुन् कल-कारखानाहरू जुनबाट नचाहिने पदार्थहरू जानीबुझी नदीमा फ्याँकिन्छन्। यसको प्रभाव नदीमाथि कस्तो पर्ला ? सबैभन्दा प्रत्यक्ष परिवर्तन पानीको रंगमा देखिन्छ — विशेष रासायनिक पर्दाथको उपस्थितिमाथि निर्भर गर्दै यो अँध्यारो-रातो वा अँध्यारो-नीलो रंगको हुन सक्छ। साधारणत: पानीमाथि कस्तो प्रभाव पर्दछ भने पानीले आफ्नो अक्सिजन गुमाउँदछ, अनि त्यसो हुँदा कुनै जीवित वस्तु, उद्भिद् वा प्राणी त्यहाँ रहन सक्दैन। माछा, उद्भिद्, प्लवनजीव तथा हरेक सजीव वस्तुलाई पानीमा पसेका ती सशक्त रासायनिक पर्दाथहरूले नाश गर्छन्। नदीमा भएको सम्पूर्ण मूल्यवान जीवनचक्रको हत्या त्यहाँ गरिन्छ अनि त्यहाँ देखिने एउटै कुरो हो एउटा बाक्लो अँध्यारो रंगको तरल पदार्थ जुन बाटामा भेटेका जम्मै जीवित वस्तुहरूको हत्या गर्दै सुस्तसित अघि बहन्छ। स्वच्छ अनि चम्किलो नर्तकीरूपी नदीको हालत यस्तै प्रकारको छ, जसभित्र नानाविध जीवित वस्तुहरूको विकासको एउटा बहुमूल्य श्रोतशक्ति अन्तर्निहित छ।

यो अद्‌भुत कुरो हो कि एउटा एक्लो औद्योगिक संगठनले नदीको एउटा पसारलाई मार्ने अधिकार पाउनु। नदी राष्ट्रको सम्पति हो। यी कतिपय प्रान्तहरू हुँदै बग्न सक्छ अनि ती जमीनहरूमा उर्बरता ल्याउँदछ जुनबाट यो बग्दछ। धेरैजसो विशाल नदीहरू सैकड़ौं माइल लामा हुन्छन् अनि यसको प्रत्येक अंश जीवन र समृद्धिका श्रोत हुन्। यो सहजै देख्न सकिन्छ कसरी एउटा एकांक संगठनले अशिष्टतापूर्वक एउटा नदीलाई दूषित पार्दछ अनि यसको जीवन थाम्ने गुणहरूको ध्वंस गर्दछ चाहे नदीको कुनै पनि अंश त्यो किन नहोस्। १९७४ सालको जल प्रदूषण ऐन विधानको एउटा अंश हो जसले नदीहरूको स्वार्थ पूर्ण रूपमा भएको प्रदूषणलाई रोक्दछ। यदि यो राम्ररी लागू हुन सके उक्त समस्याको समाधान हुने थियो।

केही कम रूपमा प्रदूषण त्यस समय हुँदछ जब नदीको आसपासमा रासायनिक मल र कीटनाशक पर्दाथहरू स्थूल मात्रामा प्रयोग गरिन्छन्। किसानहरूले असल फसलको निम्ति गाढ़ा रूपमा रासायनिक मलहरूमाथि निर्भर गर्न शुरू गरेका छन्; अर्कोपट्टि उनीहरूले घरिघरि कीटनाशकबाट फसललाई बचाउन रासायनिक

पदार्थहरूको प्रयोग गरिरहन्छन्। यदि उनीहरूको जमीन नदी समीप भए निश्चय नै वर्षात्को झरीले ती पदार्थहरूलाई नदीतिर बगाएर पदार्थको अनुपातबमोजिम नदीलाई दूषित पार्दथ्यो। कोही समय प्रदूषणले माछा र वनस्पतिलाई आघात पार्दछ भने अरू बेला केवल पानीलाई अशुद्ध तथा पिउने नालायकको बनाउँदछ। असल कृषि उद्योगको दृष्टिकोणले पनि रासायनिक चीजहरूमाथि अत्यधिक भरोसा राख्नु अवाञ्छनीय ठहरिन्छ तर जहाँ खेतबारी जलराशिको नजीकमा छ – नदी, खोलो तथा झील जुनै पनि, क्षतिको साङ्लो धेरै प्रकारको जीवित वस्तु र उत्पादकत्वलाई असर पार्ने गरी धेरै टाढ़ासम्म पुगेका हुन्छन्।

तिनीहरू मात्र नदीहरू प्रदूषित गराउने विधिहरू होइनन्, तिनीहरू केवल पूर्णतया नयाँ विधिहरू हुन्। एउटा पुरानो खालको फोहोर हो नौकाहरूबाट फ्याँकिएको तेल। हामीलाई याद छ नदीहरू हाम्रो परम्परागत मूल बाटाघाटा हुन्, अनि उदाहरणको निम्ति बह्मपुत्र नदीका केही भागहरूमा यात्रीहरूको ओहोर-दोहोर असाध्यै ठूलो संख्यामा हुन्छ। पानीको धरातलमा मैलो फिंजाउने यसको आफ्नै तरिका छ; तर कमसेकम यहाँ के देखिन्छ भने एक-दुइवटा औद्योगिक संगठनहरूले मात्र होइन तर सबै समुदायले नदीको उपयोग गरिरहेछन्। पर्यावरणलाई र मानिस बसोबासो गरेको ठाउँलाई दूषित पार्ने मैलो एउटै चीज होइन– नदीलाई दूषित पार्ने पदार्थ न त धूलो वा हिलो हो, न माकुराको जाल नै हो।

कार्बोनिक पदार्थले नदी र पोखरीलाई दूषित गर्दैन भन्ने कुरोको ख्याल राख्दै म के देख्छु भने हामीले यस कथनको केही मात्रामा सीमावद्ध गर्नपर्ने छ। जहाँ वैदेशिक कार्बोनिक पदार्थ औधी ज्यादा छ, श्रीनगरको दल पोखरीमा झैं, जहाँ असंख्य घरेलु नौकाहरूले पोखरीमा मैलो फ्यौंक्छन्, नचाहिने पदार्थको अति विशाल परिमाण नै एउटा प्रदूषक बन्दछ। नचाहिने वस्तुको एउटा मुनासीब रकमलाई प्राकृतिक विधिहरूद्वारा वियोजन गराउन सकिन्छ तर साह्रै ठूलो रकमलाई अटाउने ठाउँ त्यहाँ छैन– पोखरी जल धमिलो बन्दछ, रूखपात रोगी हुन्छ, अनि माछा मर्न थाल्छ, कारण मैलो वस्तुहरूले अक्सिजन सोसिसकेको हुन्छ र जलवासिन्दाहरूको निम्ति त्यहाँ कुनै अक्सिजन रहँदैन।

हामी सबैले जानेकै कुरो हो कि कुनै पनि वस्तु एकपल्ट ज्यादै नष्ट भएको छ भने -लाउने लुगाहरू, मोटर गाड़ी तथा फूलबारी- यसलाई फेरि उचित अवस्थामा ल्याउनु खूबै गाह्रो पर्दछ। एउटा लुगाको टुक्रालाई एकदमै गन्दा पारिदिए यसलाई फेरि सफा बनाउन असम्भव हुन्छ। अर्कोपट्टि, यदि यसको निर्वाह राम्ररी हुन सके यो धेरै लामो समयसम्म स्वस्थ रहन सक्छ। सबै पर्यावरणहरूमा यही सत्यता पाइन्छ। असल स्वास्थ्य

भएको पानीको एउटा खण्डले – अर्थात् प्रदूषित नभएको साथै बेसी प्रयोग नगरिएको अंशले – हामीले चाहेका जम्मै कामहरू गर्न सक्छ। यसबाट सधैंको लागि सफा पानी, माछा अनि यातायातका सुविधाहरू पाइन्छन्। एकपल्ट विशेष सीमादेखिबाहिर यो प्रदूषित भएपछि यसलाई फेरि सामान्य रूपमा फिर्ता ल्याउन गाह्रो पर्न जान्छ।

एउटा नदीलाई स्वस्थ र उपयोगी राख्नको निम्ति होशियारसहित हेरचाह गरिरहन पर्दैन। केचाहिँ अनिवार्य छ भने यसको दूरूपयोग गर्नदेखि टाढ़ा रहनुपर्छ, त्यसो हुन सके निश्चय नै यसले आफ्नो हेरचाह आफै गर्न सक्दछ। पानी जति छिटो बग्छ उति नै सफा यो रहँदछ। जहाँ पानीका झरनाहरू छन्, ससाना आकारकै भए पनि, पानी अक्सिजनले भरिन्छ अनि त्यसबेला पानी शुद्ध बन्दछ। थुप्रै झरनाहरू छन् भने हरेक दुइ-चार माइलको दूरत्वमा ''परिस्कृत'' हुने मौका नदीजलले प्राप्त गर्न सक्नेछ।

यस मुहूर्त्तमा हाम्रा धेरैजसो नदीहरू दुइ किसिमका प्रदुषकहरूबाट आतङ्कित भएका छन्, आधुनिक प्रदूषक-रासायनिक पदार्थहरू, अनि पुरानो प्रदूषक – मान्छेबाट उप्जेका मैलो र नचाहिने सामग्रीहरू। नदीका पानीहरूलाई रासायनिक पदार्थदेखि बचाउन हामीले दुइ-चारवटा कानूनहरू सूत्रित गरेका छौं जसको कार्यान्वय उग्र रूपमा हुनपर्ने छ यदि पानीलाई हामीले बचाउनु हो भने। मान्छेबाट भएको फोहोर-मैलोले गराएको प्रदूषण रोक्न अझ गाह्रो पर्दछ, कारण मानव जनसंख्या लगातार बढ़िरहेछ अनि हाम्रो साफ-सुग्घरको ज्ञानले नयाँ खाँचो र परिस्थितिहरूसँग मेल खाएको छैन।

एउटा उत्कृष्ट उदाहरण यहाँ दिन सकिन्छ अनि त्यो हो जुन ढाँचाले हाम्रो गंगा नदीको किनारमा रहेको शहरहरूको फोहर-मैलाले उक्त नदीको पानी प्रदूशित भइरहेछ। याद रहोस् यस नदीलाई सफा गर्नुको निम्ति हामीले अरू देशहरूको सहायता लिनुपर्ने छ। भविष्यमा प्रदुषन रोक्ने कार्यमा यस सहायताले पाठको काम गर्नेछ। यस समय नदीहरूको मूल्य विषय यही भन्न सकिन्छ कि तिनीहरू प्राय: सदैव हाम्रो निम्ति उपकारी कुराहरू बोक्ने दूतहरू हुन् – तिनीहरूको बाटोका आसपासमा बस्ने सबैलाई समृद्धि र प्राचुर्यको उपहार ती नदीहरूले टक्र्याउँदछन्। नदीको क्रम र गतिलाई हस्तक्षेप गर्‍यौं भने, पहाड़ी भेगका वनस्पतिको संहार गर्‍यौं भने नदीको पिंध माटो र बालुवाले भरिन्छ अनि पानीमाथि बाँधको सृष्टि हुन्छ साथै नदीका जीवनसमर्थक गुणहरू पानी प्रदूषित हुँदा नाश हुन्छन्; त्यसबेला नदीको व्यवहार अप्रत्याशित बन्दछ साथै यसले बाढ़ र अरू प्राकृतिक संकटहरू पैदा गर्दछ जुन कुरोले हाम्रो देशमा एउटा नियमित रूप धारण गरेको छ।

## पोखरीहरू

अहिलेसम्म हामीले पानी विषय बातचीत गर्‍यौं जुन सदैव बगी नै रहन्छ। ती निश्चल जलाशयहरू, विशाल पोखरीहरू, ससाना कुण्डहरू, सुखा शैलमय देशको मध्य भागमा भएका ती ससाना दहहरू तथा आपस्तमा जेलिन्दै रहेका ती भिजेका अनि सुखा क्षेत्रहरू विषय केही भन्न सकिएला जसमा यो विशेष ठाउँ एउटा ठोस भूमि वा पूर्ण रूपको पोखरी नभएर भिजेको ल्वटिङ पेपरझैं देखापर्छ। ती जम्मै प्रकारका जलाशयहरूलाई सामुहिक रूपमा ''सिमसार भूमि'' भन्दछन्।

केही वर्षअघिसम्म सिमसार र धापहरूलाई बेकामे भूमि भनेर ठानिन्थ्यो कारण खेतीपाती, वन-विकास तथा घर बनाउनका निम्ति ती जमीनहरूको प्रयोग गर्न सकिँदैन थियो। तसर्थ यो विचार गरियो कि सिमसारको ''विकास'' गर्नु नै यसको यथोचित इलाज गर्नु हो, अर्थात् यसको पानी सुकाएर सुखा जमीनमा परिणत गर्नु-खेतीपाती वा घर बनाउनका लागि। सबै धापहरू अस्वास्थ्यकर ठानिन्थ्यो अनि यो साँचो हो ती धापहरू लामखुट्टेका प्राकृतिक प्रजनन स्थान हुन्। हामीलाई अब थाहा भएको छ कि ती धापहरू अति उपयोगी जल-सञ्चय भूमिहरू हुन्। गरम महीनामा धापको वरिपरिका जमीनहरू सुखौरो हुँदा धापको पानी भूइँमुनि सोसिन्छ अनि यसले पातालका खोलाहरू साथै नजीकको कुवा भर्दछ। धापको विकास भएको खण्डमा यो सम्भव छ कि आसपासका इनारहरू सबै सुक्नेछन्। अनि प्राप्य जलको महत्त्व हामीले जानेका हुनाले यो स्पष्टसित भन्न सकिन्छ कि अन्तमा धापहरूलाई अरू उद्देश्यको लागि प्रयोग गरेर छिटो फायदा लिने प्रयत्न गर्नुभन्दा तिनीहरूलाई आफ्नै प्राकृतिक अवस्थामा राख्नु नै बेस हुनेछ।

ताल र पोखरीहरू निःसन्देह यति उपयोगी जल-सञ्चय स्थानहरू हुन् कि तिनीहरूलाई सुकाएर कुनै उद्देश्यको निम्ति प्रयोग गरे त्यति आपत्तिजनक नठहरिएला। यहाँ जानी-जानीकन पानी सुकाएर एउटा संकटजनक स्थिति पैदा गर्ने कुरो होइन तर पानीको मात्रा घट्दै-घट्दै पूरै पनि सुक्न सक्छ - लापरवाही तथा खराब व्यवस्थाद्वारा, माटो र बालुवाको जमावटद्वारा, प्रदूषण तथा अनुचित ढंगको वनस्पति वृद्धिद्वारा।

उक्त घटना कसरी घटित हुन्छ त्यसको संक्षिप्तमा अवलोकन गरिहेरौं। दुवै शब्दहरू ''तलाउ'' र ''पोखरी'' चलाउनको सट्टा हामीले एउटै शब्द ''पोखरी'' चलाउनेछौं जसले साना र ठूला परिमाणका दुवै जलाशयहरू बुझाउँदछ।

हामी जान्दछौं, पोखरी सदैव फेदमा स्थित छ जहाँ चारैतिरबाट भिरालिएको जमीनले एउटा अञ्जुली जस्तो रचोट बनाएको हुन्छ। यहाँ प्रत्येक वर्षात्पछि भिरालो जग्गाहरूबाट

आएको पानी जम्मा हुँदा पोखरी बन्दछ। पोखरीको पिंध चट्टानको छ भने, जुन डेक्कानका जम्मै कुण्डहरूमा पाइन्छ, जमीनमा शीघ्रसाथ पानी सोसिँदैन अनि वर्षैभरि कुण्ड पानीले टम्म रहन्छ। तर यदि कुण्डको वरिपरिको भिरालो भूमिमा घाँसपात छैन भने तथा यदि अन्नबाली लगाउनको निम्ति खनजोत गरिएको छ भने माटोको निकै हिस्सा झरीले कुण्डतिर बगाउँछ, अनि नदीहरूमा जस्तै कुण्ड माटो र बालुवाले भरपूर हुनेछ अनि यसको सामर्थ्य घटनेछ। मानिस बसेको आसपासको प्राय: सबै प्राकृतिक कुण्डहरूमा यही कुरो पाइन्छ, कारण मानिसहरूलाई कुण्डकै किनारामा खेतीपाती लाउनदेखि टाढ़ो राख्न गाह्रो प्रमाणित भएको छ। अनि यसरी नदीको पिंधमा बालुवा जम्ने काम अझ शीघ्र गतिमा हुँदछ। अन्नबाली लगाउनको निम्ति पोखरीको किनारा खनजोत गर्ने कार्य अघोर स्वार्थीपन हो। यसबाट एउटा एक्लो व्यक्तिले मात्र फायदा र नाफा प्राप्त गर्छ भने पोखरीमा माटो र बालुवा जम्नाले सम्पूर्ण इलाकाले दु:ख पाउनेछन्। अर्कोतिर, ती पोखरीहरूमा लेखोटअनुसार गत: चालिस वर्षभित्र पानी अटाउने सामर्थ्य आधांशमा आइपुगेको छ।

हामीले बारम्बार याद राख्नुपर्ने एउटा मुख्य सत्यता के हो भने सफा पानी र माटो इत्यादिले मैलिएको पानीमाझ भयङ्कर अन्तर पाइन्छ। सफा पानी नै सबै जीवित वस्तुको आधार हो, यो जुनसुकै काममा पनि चलाउन सकिन्छ, अनि यसको उपस्थिति एउटा असल पर्यावरणको चिह्न हो। एउटा साफ-सुग्घर तलाउ नजीकमा छ भने स्थानीय जनतालाई धेरै प्रकारको सुविस्ता मिल्नेछ अनि यसले उर्वरता र उत्तम वनस्पतिको वृद्धिमा प्रोत्साहन पुऱ्याउँछ। तर पानी मैलो वा दूषित पार्ने काम संसारको सबैभन्दा सजिलो काम हो। वरिपरिको जमीनमा खेतीपाती छ भने रासायनिक मल, कीटनाशक पदार्थहरू र माटो - यी जम्मै बगेर कुण्डमा थुप्रिन्छ। धोबीहरूले पानीमा डुबेर लुगा धुन्छन्, भैंसीहरू कुण्डको किनाराको हिलोमा लड़िबड़ी खेल्छन् - यी जम्मैको प्रभाव पानीमाथि पर्नेछ। साझा सम्पति कुण्डलाई दूषित नपार्नको निम्ति समग्र वरिपरिका जनताले निक्कै नै आत्मसंयम र आत्मानुशाषनको पालन गर्नुपर्ने छ। प्रत्येक व्यक्तिलाई स्वेच्छानुसार पोखरीको प्रयोग गर्ने प्रबल इच्छा हुन्छ तर उसले छिमेकीहरूप्रति गरेको अपकारमाथि उ चिन्तित छैन।

पानी र सूर्यप्रकाशको सम्मिलनले अल्प समयमा नै पानीमाथि कुनै आकार लिएको नयाँ जीवन उत्पन्न गराउँछ, प्रारम्भमा लेउ जाति उद्भिद् देखापर्दछ। चाँड़ै फैलिने जल-उद्भिद् र अन्यन्य उद्भिद्हरू अब संगठित भएर रहन्छन्, त्यहाँ सबै प्रकारका कीरा, भ्यागुता अनि माछाहरू छन्; विभिन्न आकृति लिएका ती जम्मै जीवित वस्तुहरू



यहाँ जङ्गल काटिएको छ जसको फलस्वरूप माटो सहजसित बग्दछ।



उटिमा नयाँ घरहरू। जताभावीको रूपाकार लिएका ती घरहरूले पहाड़को सौन्दर्य र गरिमालाई विनाश गरिरहेछन्।



एउटा घना जङ्गल भएको भूखण्ड।



भिरालो जमीनमा भएका सबै वृक्षहरूलाई काटिदिए यसले तीव्र गतिमा भूक्षय गराउँछ।



असंख्य मात्रामा जङ्गलमा चर्ने गाई - वस्तुको खुरले [illegible] जस्तो चाम्रो बनाएकोले यो जमीनमा कुनै [illegible] बीजा जमन [illegible]।



बाटो छेउका वृक्षहरूलाई अंगभंग पार्दै मार्ने [illegible] देशभरि पाइन्छ।



नदीका दुवै किनाराहरू घना जङ्गलले ढाकेको हुँदा नदीमा सिल्ट जम्दैन।



दक्षिण भारतको एउटा ठूलो अनि सम्पन्न गाउँको "फराकिलो सड़क"।



हिमालयमा उच्च भागको रामगंगा नदी कर्बेट पार्क हुँदै बगिरहेको।



पश्चिमी घाटमा (कर्नाटका) आर्द्रतायुक्त उष्ण कटिबन्धीय जङ्गलको एक झलक।



कलककादू प्राणी आश्रयस्थान – दक्षिण भारतका ह्रास हुँदै गइरहेका उष्ण–कटिबन्धीय वर्षा वनहरूको एउटा उदाहरण।



पश्चिमी घाटमा सुरक्षित वनको एउटा भित्रीय भाग। मनमोहक झाडीको एक दृश्य।



पूर्वीय घाटको एउटा खोलो – जुन द्रुत गतिमा पानी बग्छ उत्तिकै शुद्ध यो बनिनु सक्छ।



महाराष्ट्रको सुखा खेतीपाती। सबै ठाउँहरूमा हुने धानको खेती वर्षाकालको जुन महीनादेखि अक्टोबरसम्म गरिन्छ।

बाँच्नका निम्ति एकअर्कामाथि निर्भर गर्छन् अनि एकअर्कालाई समर्थन गर्छन्। प्रत्येक थरीले अरूलाई आफ्नो अधीनमा राख्छ अनि पालोमा अरूले फेरि यसलाई त्यसै गर्छन् - त्यहाँ एउटा मिलजुल समुदाय पाइन्छ; अर्को शब्दमा कुण्डको जीवनमा सन्तुलन छ। कोही बेला नयाँ थरीको जीवित वस्तु विदेशबाट पैठारी गरिन्छ जसको स्थानीय इलाकामा प्राकृतिक शत्रुहरू छैनन्। अरू कुनै उपायद्वारा यसलाई नियन्त्रण गर्नु असमर्थ रहनुपर्दा यसको संख्या यति शीघ्र दरमा बढ्दछ कि यसले अन्तमा अरूलाई जितेर कुण्डलाई आफ्नो बनाउँछ।

भारतमा यस्तै प्रकारले वाटर ह्यासिन्थ नामक जल उद्भिद्‌ले धेरै कुण्डहरू खाइसकेको छ। हाम्रा धेरैवटा चिसेनी भूमिहरूमा वाटर ह्यासिन्थ फैलिसकेको छ, यसले प्राय: घरिघरि समस्त जलस्थान ढाक्छ। तर तपाईंलाई याद रहोस् कि यो उद्भिद्‌को सबैभन्दा नराम्रो अवगुण अरू उद्भिद्‌हरूलाई लगार्नेभन्दा पनि पोखरीको जम्मै पानी चुसेर सुखौरो पारिदिनु हो। यसको निष्कासन दर यति शीघ्र छ कि एकपल्ट यो पोखरीमा पसेपछि एउटै उद्भिद्‌ले पनि पोखरीको जीवन खोक्रो पार्ने प्रकिया शुरू गराउन सक्छ। केही वर्षभित्रमा पोखरी एउटा सुखौरो भूमिमा परिणत हुनेछ। यस्तो डरलाग्दो उद्भिद्‌को नियन्त्रण तथा उन्मूलन गर्ने कार्यप्रति कुनै प्रयत्न भएको छैन भन्ने कुरोमा विश्वास गर्नु गाह्रो पर्छ। यदि एउटा पोखरी मैलो भयो भने यसलाई फेरि सफा अवस्थामा ल्याउने आशा त्यहाँ रहेको हुन्छ - यदाकदा। तर एकपल्ट यो सुकिसकेपछि हामीलाई त्यो सहजै प्राप्त हुने जलाशय सधैंको निम्ति गुमाउनेछौं; अनि यसको प्रभाव स्थानीय इलाकाहरूमाथि हामीले कल्पना गरेकोभन्दा धेरै बेसी मात्रामा संकटजनक हुन सक्ने छ।

# सागरहरू

## I

## *वैभवयुक्त महासागर*

सागरहरू संसारका खास जल-भण्डार हुन्। पृथ्वीमा सदैव चलाइने पानीको प्रत्येक थोपा सागरबाटै आउँछ अनि फेरि अन्तमा सागरमा नै फर्किन्छ।

कुनै विशिष्ट वा निर्दिष्ट समयमा सागरजल नूनिलो थिएन, यसको स्वाद आज हामीले पिउने कलको पानीको झैं थियो। करोड़ौं वर्षसम्म बालुवा र हिलोसित नून बोक्ने नदीहरू सागरमा बहँदा समुद्रको पानी नूनिलो भएको हो। नि: सन्देह अहिले पनि सागर नूनिलो अझ नूनिलो भइरहेछ, शायद अघिभन्दा तीव्र परिमाणमा। किनभने उहिलेको तुलनामा अहिले अझ बड्ता मैलाहरू सागरमा बहन्छन्।

सागरको पानी वाफ भएर आकाशमा उठ्दा नूनका पदार्थहरू पछाड़ि छोड़िन्छन्, तसर्थ सागर असीमित परिमाणमा नूनिलो हुन्छ। वाफ त्यसपछि बादल हुन्छ जो पर्वत जस्तो ठोस वस्तु अथवा चीसो वायुको केही भागसित ठक्कर खाँदा वर्षामा परिणत हुन्छ। वर्षाजल आखिरमा नदीमा सम्मिलित हुन्छ अनि सागरतिर फर्किन्छ। यथार्थमा एउटै पानी करोड़ौं वर्षसम्म बादल, वर्षा, नदी र सागरको चक्रमा घुमिरहन्छन्।

हाम्रो संसारमा पानीको परिमाण तसर्थ प्राय: आजपर्यन्त त्यही छ जुन १०,००० (दश हजार) वर्षअघि थियो। यो परिमाण न बड्न सक्छ न घट्न नै। केवल रूप र स्थान बद्लन्छ–कहिले समुद्रको एउटा अंश, कहिले हावामा उड्ने वाफ, कहिले उँधो खस्ने वर्षाका थोपाहरू जो जमीनमा शोषिएर पातालभित्रको खोलासँग मिल्छ, कि त जमीनमाथि बहँदै नदीसँग मिल्नेछ। जुनै स्थितिमा पनि यो जसरी पनि सागरमा झर्नेछ। जल-चक्रको विषयसम्बन्धी कुरा गर्नु हो भने पानीको गति गोलाकार, दोहोरिरहने अनि अनन्त किसिमको पाइन्छ।

समुद्रमाथि बादल लाग्दा समुद्रदेखि टाढ़ाका स्थानहरूले भन्दा नजीकका ठउँहरूले आर्द्र जलवायु पाउने सम्भावना छ। एउटा किनाराले अन्तस्थ स्थानहरूले भन्दा बड्ता

वर्षात् पाउन सक्छ, अनि यसको जलवायु पनि साह्रै उग्र नहुने सम्भावना हुन्छ, कारण नजीकमा भएको पानीको एउटा विशाल परिमाणले तापलाई स्थिर राख्ने काम गर्छ। तर ती जम्मै कुराहरूबाहेक राष्ट्रहरूले किन सदैव एउटा असल किनारा क्षेत्र तथा सागरमा प्रवेश गर्ने बाटो चाहन्छन् त्यसको ऐतिहासिक कारण व्यापार-वाणिज्य गर्ने उद्देश्यले हो।

प्रचुर परिमाणमा पानी जहाजमाथि व्यपार-वाणिज्य निर्भर गर्दछ। एउटा देशमा असल बन्दरगाहहरू छन् भने त्यस देशका जहाजहरू पृथ्वीको जुनै ठाउँमा पनि पुग्न सक्छन्, अतः बिक्री गर्नपर्ने सामानहरू बोकेर प्रस्थान गरिन्छ भने आफूलाई चाहिने सामानहरू किनेर वापास आउन पनि सकिन्छ। यो साँचो हो एशिया महादेशको मध्य भागमा लामा-लामा व्यापारका बाटाहरू बनाइएका छन् अनि विभिन्न देशका सीमानाहरू हुँदै सैकड़ौं माइल टाढ़ासम्म जन्तुहरू र मालताल ओसारिन्थ्यो। तर पानी जहाजको तुलनामा यो एउटा बोझिलो, कठिन अनि महङ्गो ढंगको परिवहन थियो जसको उपभोग कुनै विकल्पको अनुपस्थितिमा गर्न पर्दथ्यो।

समुद्र किनारको सबैभन्दा ठूलो फाइदा हो बन्दरगाह अनि जहाजहरू बनाउन सकिने सम्भाव्यता अनि शान्तिपूर्वक व्यापार-धन्दा तरिका अप्नाएर होस् वा लड़ाईँ जितेर वा लुटपीट गरेर नै किन नहोस् आम्दानीको उपाय रच्नु। ती दुइमाझ भएको रेखा प्रायः अस्पष्ट रहेता पनि मुख्य कुरो जुन छ सो हामी बुझ्न सक्छौं।

जहाज-बन्दरगाहहरूको परिपेक्ष्यमा एउटा असल तट-रेखा भन्नाले एउटा राम्रो बीच रिसोंटको विपरीत बुझिन्छ। बीचको त्यो मंद ढाल जमीन यहाँ बेकामे बन्दछ, एउटा असल बन्दरगाहलाई गहिरो पानी भएको खाड़ी चाहिन्छ जो खुल्ला समुद्र र सागरको रूक्ष व्यवहारबाट रक्षित छ। मुम्बई, कलकत्ता र मद्रासले गरेको उन्नतिको कारण त्यहाँ उत्तम दर्जाका बन्दरगाहहरू भएकोले हो, जुन बन्दरगाहहरूले मालताल उतार्ने अनि विभिन्न दिशातर्फ लाद्ने काम गर्दछन् अनि यसरी बन्दरगाहहरू व्यापार-वाणिज्यका केन्द्र स्थानहरू बनेका छन्।

मालतालको चलानले शहरहरूको अनि शहरहरूको तर्फबाट सम्पूर्ण राष्ट्रहरूको भविष्यको रूपरंगको आभाष दिँदछ। मध्य युगमा चामल र तिनताकका विलासमय सामग्रीहरूको धेरैजसो व्यापार हुन्थ्यो, सूचीमा पहिलो स्थान मसालाहरूको थियो। आजको युगमा हामीलाई चाहिने तेल र अन्नपानी जहाजले ल्याइदिन्छ, तसर्थ वायु यातायातमा वृद्धि भए तापनि जहाजी यातायात सधैँझैं अहिले पनि उत्तिकै अनिवार्य ठहरिन्छ।

हाम्रा ठूला बन्दरगाहहरूबाहेक जुन संसारको नाउ वाहन मानचित्रमा देख्न सकिन्छ, समुद्र तटको माथि–तल छरिएकाससाना बन्दरगाहहरूको अनुक्रमले अझै पनि निक्कै नै स्थानिक व्यापार गरिरहेछन्। यस सम्बन्धमा पूर्वीय तटभन्दा पश्चिमी तट सुविधाजनक छ कारण यसको किनारा क्षेत्र सजिलो प्रकारको छ साथै कच, मन्दभी, गोवा, दमन, करबार र कोचिन जस्ता साना बन्दरगाहहरूको लहर त्यहाँ मजबुत छ। धेरै प्रकारका घरेलु डुँगाहरू क्षुद्र तर उपकारी सामाग्री बोकेर उँभो र उँधो हिँडिबस्छन्। यो भन्न सकिन्छ कि कोही समय ती डुँगाहरूले ऐनविरूद्ध सामग्रीहरू पनि बोक्छन्; कारण साना बन्दरगाहहरू तस्कर व्यापारको निम्ति खूबै उपयुक्त छन्। पुरानो ढाँचाको काठको नाउ यद्यपि यसलाई अझ आधुनिक वाफ र तेलले चल्ने जहाजले उछिने तापनि तस्करी रंगभूमिको अहिले पनि विपुल हिस्सा रहेकै छ।

त्यहाँ एउटा अन्तर्राष्ट्रिय नियम छ जसको आदेशअनुसार हरेक देशले समुद्र तटदेखि १२ माइल (२० व०कि०) टाढ़ासम्म आफ्नो आधिपत्य जमाउन सक्छ। यही नियमको अनुसरण गर्दै हाम्रा किनारादेखि १२ माइलभित्रका जम्मै माछाहरू न्यायपूर्ण हिसाबले हाम्रै हुन्; त्योभन्दा बाहिर गयौं भने अरू देशहरूबाट आएका माछा मार्ने नाउहरूसित होड़ लाउँदै गरेको हामीले हामी आफैलाई पाउनेछौं। माछा एउटा अति मूल्यवान पोषिलो अनि यथेष्ट मात्रामा पाइने खाद्य हो अनि भाग्यमानी देश त्यो हो जसको तटक्षेत्र लामो छ अनि जसको माध्यमद्वारा प्रशस्त परिमाणमा माछा बटुल्न सकिन्छ। जाली भएको विकसित प्रकारको डुंगा र नाउ जालहारीको दल र बहुमूल्य सरसामान लिएर तपाईं समुद्रको धेरै टाढ़ासम्म माछा मार्न जानु सक्नुहुन्छ, अनि तपाईंले एउटा धागो र बल्छीसित हिले खाड़ल तथा खाड़ीबाट माछा निकाल्न सक्नुहुन्छ। त्यसमाझ त्यहाँ सैकड़ौ किसिमका माछाहरू मार्ने उपायहरू छन्— विभिन्न रचावट र परिमाणको। अनि त्यहाँ सैकड़ौं प्रकारका माछाहरू छन्, एउटा बसगाड़ीजत्रो ह्वेलदेखि लिएर एउटा दशपैशे मुद्रा परिमाणको झिंगेमाछासम्म।

भनिन्थ्यो कि समुद्रमा माछाको संख्या नसिद्धिने परिमाणको छ। अनि खाद्यका अरू जम्मै श्रोतहरू विफल भए पनि मानव जनसंख्या समुद्री–खाद्यको सहायताले बाँच्न सक्नेछन्। यो एउटा अत्युक्ति थियो जुन हामीले अघिबाटै बुझेका हौं, तर वास्तविकता के हो भने किनाराको सागरजल खानेकुराको ढिकुटी हो। यस मुहूर्तमा समुद्रलाई हामीले खानेकुरा प्राप्तिको दृष्टिकोणले सोचिरहेछौं अनि पानीको छालमुनि रहेका अचम्भको संसारको सौन्दर्य विषय र वैज्ञानिक पक्षहरूको उपेक्षा गरिरहेछौं।

जब विस्तृत खुल्ला समुद्र ठूला माछाहरूको घर हो भने ती छाल चल्ने समतल, जल धरातल माछा हुर्कने प्रजनन केन्द्र हुन्। ती सबै दलदल धाप क्षेत्रहरू जहाँ अधिकतम ज्वार चल्दछ तथा जहाँ आखिरमा नदी समुद्री पानीमा मिसिन्छ, ती ठाउँहरूमा माछा आएर अण्डा काड्छन्। ती ठाउँहरूको क्षेत्रफल प्राय: ठूलो छ, वृक्षहरू त्यहाँ उम्रन्दैनन् कारण नूनिलो पानीले तिनीहरूलाई लुथ्रुकै भिजाएर राखेको हुन्छ तथा निरन्तर बाड़ग्रस्त रहन्छन्। ढीला, मलिन बालुवाले सहजै ठाउँ छोड्ने हुनाले विस्तृत लामा जराहरू भएको म्याङग्रूभ नामक उद्भिद्हरू मात्र त्यहाँ अड़िएर बस्न सक्छन्। समुद्री माछाको श्रोत हुनबाहेक हामीले खाने धेरजसो नून पनि यही भूमिमा बनिन्छ। म्याङग्रूभका ती झाड़ीहरू अति दूर्बल र असुग्घर देखापरे तापनि आँधीबेह्री चलेको समय यसको वर्गलाई तोड़ेर आफ्नो उपकारिताको प्रमाण दिन्छन्। समुद्रका अनि किनारा क्षेत्रलाई जस्ताको तस्तै राख्दछ। समुद्रको विस्तीर्णता साथै यसको नियमित गतिको अनिवार्यता र शक्तिको अनि तूफानको समय यसले देखाएको सामर्थ्य वा प्रताप र उग्रताको विचार गर्‍यौं भने समुद्री छाल र मानव वासस्थानबीच हुनपर्ने मध्यवर्ती इलाकाको खाँचो हामी बुझ्न सक्छौं। समुद्रका खेल्ने क्षेत्रहरू त्यहाँ हुनुपर्दछ जुन क्षेत्रहरूले आँधीबेह्रीको समय आन्तरिक ठाउँहरू ध्वंस हुनुदेखि रक्षा गर्छन् म्याङग्रूभहरूलाई हटाइदियौं भने एउटा दैत्यले ल्याउने संकट र नोक्सानको भागीदार हामी हुनेछौं।

जसरी जमीनमाथिको घाँसबाट शारीरिक मासु बनिन्छ, त्यसरी नै समुद्रमा पाइने समस्त लेउ जातीय उद्भिद् माछा समुदाय हुन्। प्राविधिज्ञतातिर बेसी नलम्की मानिलिँऊ लेउ भन्नाले ती समस्त मसिना तहरिने जीवनका रूपहरू, समुद्री किनारका छिपछिपे पानीमा हुने ती लेउ जस्ता हरियो अभिवृद्धिहरू अनि चिसेनी र सुखा सीमान्त स्थानहरूमा उम्रने ती लामा लचिलो अनि चिसो देखिने वनस्पति बुझिन्छ। लेउ एउटा मुख्य खाद्य भण्डार हो जसले ह्वेल माछालगायत सबै प्रकारका माछालाई पाल्दछ।

हामी मानिस जातिले पनि लेउबाट फाइदा उठाउनका निम्ति धेरैवटा उपायहरू जानेका छौं। समुद्री उद्भिद्बाट उद्धरण गरिएको "अल्गिन' नामक पदार्थका धेरै व्यापारिक उपयोगहरू छन्। बुनेको सामानलाई बाक्लो पार्ने अनि टाँस्ने काममा यो प्रयोग गरिन्छ। कागज, रंग, औषधि, कीटनाशक पदार्थहरू, शृंगार सामाग्री साथै आइसक्रीम बनाउनमा पनि यो प्रयोग गरिन्छ। आयोडिन र थुप्रै अरू रासायनिक पदार्थहरू समुद्री उद्भिद्हरू र घाँसहरूबाट तयार गरिन्छ ; अनि हजारौं प्रकारका अन्यस्थ जल-उद्भिदहरूमाझ धेरै अरू प्रयोजनीय पदार्थहरूले आविस्कारको घड़ी पर्खिरहेका छन् भन्नुमा कुनै सन्देह छैन। जसरी जंगलहरू स्थलीय-वनस्पतिको आनुवांशिक

विकाशको मूलभूत श्रोत हुन् अनि अपरिमित किसिमका उद्भिद् संसारलाई जिउँदो राख्ने काम गर्छन्, त्यसै गरी सबै समुद्री उद्भिद् संसारको पनि सुरक्षा गर्नुपर्छ। एक दिन यसले मान्छेको निम्ति प्रयोजनीय वस्तु सरासर उत्पन्न गर्नेछ भन्ने स्वार्थी आशा लिँदै—अरू कसैको निम्ति नभए पनि।

तटवर्ती पदार्थको व्यापारिक स्वार्थ साधन गर्ने कुराको सिलसिलामा हामीले हाम्रो सूचीमा समुद्री तेल, सिंपी अनि मोतीहरू हाल्नुपर्छ। अनि हामीले नरिवललाई भुल्नु हुँदैन।

हिजो-आज नरिवलको खेती समुद्रदेखि धेरै टाढ़ा आन्तरिक जमीनमा लगाइन्छ अनि यो विशेश गरी उष्णमण्डलको समुद्रतलमा हुन्छ भन्ने कुरोलाई हामीले प्राय: भुल्न लागिरहेछौं। प्राय: जम्मै गरम तटक्षेत्रहरूमा यो आफ्नो उपनिवेश बसाउन सक्षम भएको छ, कारण यसको फल तथा बिउ समुद्रको छालले चारैतिर फ्याँक्दा रोचक किनारा क्षेत्रमा पुगे त्यसले त्यहाँ जरा गाड्दछ। अन्य बिउहरू हावा तथा पशु वा चराको माध्यमबाट वितरण हुन्छ भने नरिवलको वितरण सागरको पानीद्वारा हुन्छ। एउटा गजबको कुरा के छ भने सम्पूर्ण भूमध्य-रेखा र उष्णमण्डली क्षेत्रहरूमा नरिवलले बनेको झूम्के-किनारा (palm-fringed shores)एकमात्र एक्लो सुखा नरिवलबाट सम्भव भएको हो; जसका बिउहरू समुद्री पानीको छाल र ज्वारमा तानातान हुँदै सैकड़ौं माइल टाढ़ा गएर कुनै बलौटे किनारमा फेरि एउटा नयाँ जीवनचक्र शुरू गर्दछन्। यथार्थमा नरिवल एउटा विश्वव्यापी वनस्पति हो अनि उष्णप्रदेशीय अक्षांशहरूको वरिपरि यो संसारैभरि पाइन्छ।

हाम्रो भोजनलाई स्वादिष्ट बनाउनबाहेक हामीलाई घर-छाउने छप्पर, डोरी, कुचो, जटा अनि मूढ़ोहरूलगायत म्याङग्रोभ वृक्षले झैं नरिवलले पनि हाम्रा किनाराहरूलाई हावा-बतास र पानीले गराउने ध्वंसबाट दक्षतापूर्वक रक्षा गर्दछ। नरिवल वृक्षका पातहरू हावाको प्रबल वेगलाई रोक्ने प्रकारले रूपाकंण भएका छन् अनि एकापट्टि हावा-बतासको शक्तिशाली वेगलाई पातहरूले रोक्दछन् भने अर्कोपट्टि आँधीबेह्री चलेको बेला यसको जराहरूले बलौटे माटोलाई च्याप्प समातेर समुद्रतिर बग्न रोक्दछन्।

वर्तमान उर्जा श्रोतहरूको ठाउँमा थुप्रै प्रतिरूपहरू छन् जसमध्ये ज्वारभाटा एउटा वैकल्पिक शक्तिको रूपमा बारम्बार प्रस्तावित भएको छ; अनि जसमाथि खोजपत्र गर्नुपर्ने छ।ज्वारभाटाका गतिहरू नियिमित र शक्तिशाली छन् अनि त्यसबाट उर्जा उत्पादन गर्न सकिन्छ भन्ने कुरो युक्तिसंगत ठहरिन्छ। अझसम्म ज्वारभाटाको सबैभन्दा मुख्य काम जहाजलाई समुद्रतर्फ धकेल्नु मात्र हो भन्ने विचारमा हामी मग्न छौं। भारतीय

किनाराहरूका केही भागहरूमा खूबै शक्तिशाली ज्वारभाटा पाइन्छ । हाम्रा वैज्ञानिकहरूका अलौकिक स्रष्टाहरूको तुलनामा ज्वारभाटाको गतिलाई कब्जामा ल्याएर हाम्रो उद्देश्यको निम्ति प्रयोग गर्ने कुरो सापेक्षिक तौरले सरल ठहरिन्छ।

म जान्दिनँ कि समुद्र र समुद्रीतट विषय चर्चा भइरहेको बेला टापूहरू विषय केही भन्नु उचित होला। समुद्री पींधको धरातल सुखा भूमि जत्तिकै असन्तुलित छ अनि टापूहरू यसैका अंशहरू हुन् जो पानीको सतहदेखि माथि उठेका मात्र हुन्।

टापूमा बस्ने मानसिहरूले धेरै फाइदाहरू पाउन सक्छन्; ती ठाउँका मानिसहरू शत्रुदेखि सुरक्षित हुन्छन्, चारैतिर राजनैतिक सीमाले घेरेका राष्ट्रहरूभन्दा धेरै गुणा बढ्ता आफ्नो भाग्य निर्माण गर्ने अवस्थामा छन्। टापू-गढहरूको (किल्लाहरू) सदैव विशेष रूपमा कदर गरिन्छ। मुम्बइदेखि केही टाढ़ास्थित दुइ-चारवटा शिलामय टापूहरूको दुर्गमता विषय एउटा सुन्दर इतिहास पाइन्छ। तिनीहरूका ''मालिकहरू'' -ले मूलभूमि र उनीहरूका टापूहरूको माझबाट हिँड्ने जहाजहरूमाथि आक्रमण गरी आफ्नो जीविका चलाउँथे। जलवायु ज्यादै नातिशीतोष्ण र आद्रपूर्ण छ; कारण समुद्रले जलवायुलाई स्थिर राख्नको साथ अतिशय ठण्डा र गरम हुनदेखि पनि रोक्दछ।

प्राकृतिक इतिहास अध्ययन गर्ने छात्रहरूको निम्ति टापूहरू एउटा विशेष आकर्षणको विषय हुन जान्छ, किनभने यहाँ प्राकृतिक जीवन विधिहरू एउटा सीमित ठाउँभित्र अटाइएका छन् अनि जम्मै पारस्परिक क्रिया-प्रतिक्रिया यो सीमित परिधिभित्र घटित हुदँछ। हाम्रा नजीकका टापूहरू जस्तै अन्दमान समुदाय, लकाडिभ अनि निकोबरले प्रकृतिज्ञानी अनि मानवशास्त्रीहरूलाई अरू ठाउँमा नपाइने मौका अर्पण गर्दछन्। बाहिरको कुनै प्रभाव नभइकन थुप्रै किसिमका जीवनाकारहरू ती टापूहरूमा क्रम-विकसित भएका छन् जो मूलभूमिको भन्दा भिन्दै छन्। यसले प्रकृतिशास्त्रीहरूलाई प्राकृतिक जीवनको विभिन्न प्रकार मात्र होइन तर तिनीहरूको क्रम-विकासलाई असर पार्ने परिस्थितिहरूको अध्ययन गर्ने मौका पनि दिँदछ। परिवेशशास्त्री र प्रकृतिशास्त्रीहरू अन्दमान टापूहरूलाई आधुनिकरण र विकास गर्ने विचारमाथि क्षुब्ध भएको कुरो स्वाभाविकै हो।

यी टापूहरू गजमौरा शहरहरूदेखि भाग्न चाहने व्यक्तिहरूको निम्ति आदर्श विश्राम भूमि हुन सक्छन्। तथापि धेरै संख्याको अन्तर्प्रवेशले प्राकृतिक जीवनको कोमल सन्तुलनलाई नष्ट गर्न सक्दछ। तसर्थ दर्शकवर्गको सफरको प्रबन्ध होशियारसित गर्नुपर्ने छ जसमा केवल ती मानिसहरू आकर्षित हुनेछन् जो प्रकृति वन्य जीवनमा साँच्चीकै चाख लिन्छन्—जो खेल्नुको सट्टामा सिक्नुको निम्ति आउँछन्, अनि जसले शहरी

स्तरदेखि भिन्दै स्तरका समुदायहरूसित कस्तो आचार-व्यवहार गर्नुपर्दछ सो जान्दछन् अनि जसले फेरि छोटो समय प्रकृतिको समीपमा बिताएर पनि आफ्नो मनस्थिति र भावनाहरूलाई धनी र सम्पन्न पार्न सक्छन्।

हरेक प्राकृतिक परिवेश, जस्तै जङ्गलहरू तथा नदीहरूले मानव आत्मालाई उचाल्न अनि सुधार्न सक्छन्। समुद्र अनि यसका किनाराहरू पनि यस कार्यदेखि पृथक छैनन्। जसरी अग्ला पर्वत श्रेणीले धेरै मानिसहरूमाथि एउटा विशेष अनि शक्तिशाली प्रभाव पार्न सक्दछ समुद्रले पनि सोही काम गर्दछ। प्रायश: समुद्रको अयुक्त र अस्पष्ट तानले धेरैजसोको जीवन र भविष्यलाई प्रभाव पार्छ।

हामीमध्ये धेरैजसोले समुद्रलाई मनपराउँछौं, प्रशंसा गर्छौं अनि त्यसबाट आनन्द लिन्छौ, तर यसप्रति हामीले हाम्रो जीवन समर्पित गरेनौं। छालहरू कुर्लेको हेर्नु, बालुवामा खेल्नु , जलज संग्रह गर्नु, पौरी खेल्नु, जहाजद्वारा यात्रा गर्नु अनि माछा मार्नु- यो त देशको जस्तै गरीब-कङ्गालले पनि उपभोग गर्नु सक्दछन्, यदि उनीहरू समुद्रको छेउमा बसेका छन् भने। किनाराको ठूला शहरहरूले पाएको ठूलो फाइदा के छ भने तिनीहरूले पानीमाथिबाट सफा वायु पाउँछन् अनि एउटा सीमाहीन खुल्ला ठाउँको अनुभव गर्न पाउँछन् जुन समुद्रको एउटा लक्षण हो।

# सागरहरू

## II

### *के हामीले तिनीहरूलाई ध्वंस गर्दैछौं?*

यदि भारतलाई तपाईंले त्रिभूजाकार देश ठान्नुहुन्छ भने यसको दुइ भुजासित समुद्रको साँध छ अनि उत्तरको तेस्रो भुजालाई उच्चत्तर पार्वत्य भूमिले घेरेको छ। हाम्रो देशमाथि भएका धेरै सैन्य आक्रमणहरू कुनै पनि समुद्र भएर आएनन्; ती सबै भूमितर्फबाट आए-हिमाली श्रेणीको उत्तर-पश्चिम भागमा भएको फाँक वा गल्छिनाबाट। तसर्थ, भाग्यवस, विदेशीहरूले गरेको वृहत्-स्तर सैनिक विजयदेखि दक्षिणी भाग वञ्चित रह्यो। अर्कोपट्टि धेरै व्यापारी र सौदागरहरू पश्चिमी तटमा उत्रे। अनि अरबी र पोर्तुगिज जस्ता कोही अरू हाम्रा जनसाधारणमा समावेश भए। शुरू-शुरूमा ब्रिटिशहरू पनि व्यापारीको रूपमा सुरतमा उत्रेका थिए, सैनिक विजेताका रूपमा होइनन्। क्रमशः विस्तारै उनीहरूले देशलाई हात पारे यद्धपि उनीहरूको समुद्र काटेर आएको उद्देश्य विजय गर्नु थिएन।

हाम्रो किनारा क्षेत्र शत्रुहरूलाई बाहिर राख्नुको निम्ति उपयोगी छेकाबार भएको छ। साथसाथै यसको लम्बाई अनि पूर्व र पश्चिम दुवै दिशातर्फ फर्केकोले यसले दुवै दिशामा नाउ यात्रा अनि व्यापार—वाणिज्यलाई प्रोत्साहन दिन्छ। अझ मुख्य कुरा के हो भने यसले व्यापारमा धेरै सुविधा पुर्‍याएको छ अनि व्यापार र यातायात कायम रहन सकेको छ।

पानीको वाफले चल्ने जहाजहरू आएपछि अनि ब्रटिश जनसाधारण एवं फौजी जवान र मालताल आसार्ने आवश्यक परेकोले मुम्बई, कलकत्ता र मद्रासका बन्दरगाहरू अन्तर्राष्ट्रिय स्तरमा वृद्धि भए। सोह्र अनि सत्रह सय शताब्दीमा फस्टाएका पश्चिमी तटस्थित सुरत अनि क्याम्बे नामक पुराना बन्दरगाहरू माटो र बालुवा जम्नाले बेकामे भए। तिनीहरूका बन्दरगाहरू बालुवाले भरिए अनि तटवर्ती रेखा यति धेरै टाढ़ा बाहिर गए तथा शहर अझ भित्र पसेकोले एक समय ती शहरहरू यति विशाल बन्दरगाहरू थिए भन्ने कुरो कसैको स्मरणमा पनि छैन।

कलकत्ता र मुम्बईको महत्त्व अनि समृद्धि तिनीहरूमा भएको उत्कृष्ट दर्जाका बन्दरगाहहरूको कारणले हो; तिनीहरूको वृद्धि अवलोकन गरौं अनि हेरौं यसले कसरी ती बन्दरगाहहरूमाथि प्रभाव पार्‍यो। कलकत्ता यस्तो एउटा फाइदा हुने मुलुकमा स्थित छ जहाँ सुनपाट, चामल र चियापत्तीलगायत निकासीका थुप्रै सामग्रीहरू पाइन्थे। ती सबै कलकत्तामा संग्रह गरिन्थ्यो अनि त्यहाँबाट जहाजद्वारा समुद्रबाहिर पठाइन्थ्यो। फराकिलो अनि सुस्त गतिमा बग्ने ब्रह्मपुत्र र गंगा जस्ता दुइ विशाल नदीहरूद्वारा सामानहरू एउटादेखि अर्को ठाउँमा पठाइन्थ्यो। हामीले बुझेअनुसार यस प्रकारको यातायत रेल तथा बाटोभन्दा धेरै सस्तो छ।

अर्कोपट्टि मुम्बईको निकासी गरिने मुख्य व्यापारिक वस्तु कपास थियो। मुम्बईको सुगम क्षेत्रहरूमा कपासको खेती गरिएकोले कपासलाई कलकत्ताभन्दा मुम्बईबाट जहाजद्वारा पठाउन सजिलो थियो। यथार्थमा यसैमाथि मुम्बईको उत्थान र समृद्धि आधारित थियो। देशको माथिल्ला भागहरूबाट मालताल ल्याउनको निम्ति बन्दरगाहको पछाड़िपट्टि हुनुपर्ने पानीको नहरहरूको सुविधा मुम्बईमा थिएन अनि रेलमाथि निर्भर गर्नुपर्थ्यो। जब व्यापार र वाणिज्य सप्रिंदै गयो अनि यसको परिणाम बढ्दै गयो, मुम्बईको अर्को असुविधा अझ तीव्र हुँदै गयो। मूल भूमिसित एउटा साँघुरो पानीको धर्सोले मात्र जोड़ेको एउटा सानो उपद्वीपमा स्थित भएकोले मुम्बईले कतै पनि फैलिने जग्गा पाउन सकेन। अनि मुम्बईमा जुन परिस्थितिहरूले-यसको खूबै मिलेको अवस्थिति अनि उच्च दर्जाको बन्दरगाह यसलाई समृद्धिशाली बनायो, तिनै परिस्थितिहरूले गर्दा यति भयानक परिमाणमा मानिसको घुइँचो र फोहोर-मैला बढ्न थाल्यो कि यो शहर अब प्राय: बस्ने नालायकको भइसकेको छ। कलकत्ता र मुम्बईले वास्तवमा आफ्नो सफलताको मूल्य तिरिसकेको छ। तिनीहरू नगरीय फोहोर-मैलाका निम्ति पाइने विश्व-पुरस्कारका प्रतिद्वन्द्विहरू हुन्।

यहीबीचमा जहाजी सेवाको मागमा कुनै घट्ती आएको छैन। यद्धपि जहाजी-यात्राको ठाउँ वायु-यात्राले लिए तापनि धेरजसो मालताल अहिले पनि समुद्रबाट नै ओसारिंदैछ। ल्याएका सामानहरू उतार्न अनि नयाँ लाद्नको निम्ति पर्खिरहेका जहाजहरूको पसारो मुम्बईको बन्दरगाहमा देख्न सकिन्छ। त्यहाँ चाहिंदो मात्रामा जहाजलाई बाँध्ने ठाउँहरू छैनन् अनि केही टाढ़ामा लङ्गर लाएर तिनीहरूलाई राख्नपर्दछ समय अफाल्दै, धैर्यसित आफ्नो पालोको प्रतीक्षा गर्दै।

यो स्पष्ट रूपमा देख्न सकिन्छ कि मुम्बई शहर एउटा चरम बिन्दुमा पुगिसकेको छ अनि हामीलाई अझै केही बेसी बन्दरगाहरू चाहिएको छ। म्याङ्गालोरलाई विकास गर्न

सकिन्छ तर हाम्रा खाँचोहरू अत्यन्त शीघ्र दरमा बढ्केकोले यो तयारी हुँदा यसको क्षेत्र फेरि अपुग्दो हुन सक्छ। यदि हाम्रो जनसंख्या यति चाँड़ो बढ्छ भने हामीले बनाएको प्राय: जुनै पनि योजना प्रयोजनको निम्ति तयारी भएको समय अपर्याप्त (अपूर्ण) हुन सक्छ, र पनि काकीनाडा, मदभी अनि विसाखापट्नम बन्दरगाहहरू द्रुत गतिमा बढ्रिरहेछन्।

पुराना दिनहरूमा, अर्थात् ५० वर्षअघिसम्म बन्दरगाहहरू सुन्दर र उत्तेजनात्मक स्थानहरू थिए। त्यो गहिरो पानीको माथि हरेक प्रकारका यत्रतत्र छरिएर बसेका डुंगा पाइन्थे; विशाल ऐश-आरामवाला जहाजदेखि तेल बोक्ने जहाज, मालताल बोक्ने नाउहरू, ठूला डुँगाहरू अनि पालको सहाराले चल्ने साधारण नाउहरूसम्म। जहाज अड़िने घाटहरूमा आफ्नै किसिमको उत्तेजना थियो। मालताल उतार्दै र लाद्दै गरेको बड़ेमान क्रेनहरू हल्लिएको दृश्य, क्षुद्र नाउहरूले विशाल जहाजहरूलाई बन्दरगाहदेखि तान्दै गरेको दृश्य, सबै किसिमको आकार र परिमाणका नाउहरू र ठूला जहाजहरू वरिपरि झींगाहरूझैं भन्किरहेको देखिन्थ्यो। अहिलेको घचाघचले मालताल उतार्ने र लाद्ने स्थान यति फोहोर छ कि त्यहाँ जहाज आएको दृश्य रसपान गर्नुमा कुनै आनन्द पाईंदैन। फोहोर पार्ने सबैभन्दा बेसी पदार्थ तेल देखिएको छ। सबै अरू तैरिरहेका पदार्थहरूमध्ये तेलले बन्दरगाहको पानीलाई प्रायश: फोहोर बनाउँछ। यति एउटा तेल बोक्ने जहाज डुब्यो भने तथा यो चुहुने भयो भने समुद्री पानी धेरै माइल टाढ़ासम्म तेलले ढाकेको हुन्छ। यसले गराएको क्षतिको परिमाण ठीकसँग निर्धारित गर्न सकिँदैन। तर यस्तो घटना घटेको बेला यो थाहा पाइएको छ कि धेरै समुद्री चराहरू मर्दछन्। कारण तेलले तिनीहरूका प्वाँखहरू भिजेकोले तिनीहरू उड्न सक्तैनन्। हामी चराहरू विषय जान्दछौं कारण तिनीहरू पानीको सतहमाथि उड़ेको देख्न सकिन्छ। कति माछाहरू मर्दछन्, नदी पौंधको वनस्पति कसरी प्रभावित हुँदछ -यस्ता प्रश्नहरू छन् जसको उचित उत्तर हामीलाई यादै छैन। पानीको धरातलमा फिंजिएको तेलको पर्दाले अक्सिजनलाई पानीभित्र पस्न रोक्दा यो अनुमान गर्न सकिन्छ कि विशाल संख्यामा जीवित वस्तुहरू निस्सासिन्छन्। थोर हेअरदल (Thor Heyerdal)-ले हामीलाई भनेका छन् कि जब उ पेसिफिक महासागरमा एउटा डुँगामा (मूड़ाहरूको नाउ) चड़ेर पार गर्दै थिए त्यहाँ बिरलै कुनै भाग थियो जहाँ उनले तेल फिँजिएका देखेनन्। अकस्मात् यो समस्या संसारभरको खतराको संकेतको कारण भएको छ।

समुद्रलाई फोहोर पारेको कुरा भर्खरै मात्र हामीलाई थाहा भएको हो। सोझा-सोझी तथा परोक्ष रूपमा हामीलाई नचाहिने वस्तुहरूका धेरैजसो भाग अन्तमा समुद्रमा नै

पुग्दछ। अझसम्म मानिस र पशुबाट उब्जेका मैलाहरूचाहिँ सहजै सोसिएको छ–अन्तमा तिनीहरूले वनस्पतिलाई सम्पन्न बनाउँछ– भूमिगत वा समुद्री। नयाँ रासायनिक पदार्थहरू जसको सोसिने सामर्थ्य छैन, वास्तवमा प्रदुषकहरू हुन्। यसबाहेक मानव जातिको संख्या यति भयानक परिमाणमा बढ़ेकोले समुद्रले अबदेखि उसो ज्यादती बेकामको वस्तुलाई सोस्न सक्छ–सक्दैन सो सन्देहपूर्ण छ।

हामीमध्ये धेरजसोलाई समुद्र असीम, अनन्त र अनाशय छ भन्ने धारणा अपनाउने आदत लागेको छ। समुद्र सीमित छ अनि यसको अटाउने शक्ति पनि सीमित छ भन्ने प्रस्तावनामा स्वाभाविक अविश्वास छ। प्रदूषणको मात्रा धेरै उच्चत्तर भइसकेको छ अनि जीवित वस्तुहरूको अवस्था खतरामा पुगेको छ। हामीलाई थाहा भएको छ कि जसरी जमीनमा बस्ने विभिन्न जीवन रूपहरू एकार्कामा सम्बन्धित र निर्भर छन् समुद्रमा पनि एउटा तत्त्वको ध्वंसले पूरै प्रणाली संकटका भोगी हुन सक्छन्। हामीले यो बुझ्नपर्छ कि समुद्रलाई एउटा रछानको रूपमा लगातार सम्झयौ भने यसलाई हामीले मार्नेछौं अथार्त् यसभित्र बस्ने जम्मै वस्तुहरूको हत्या हामी गर्नेछौं। तसर्थ जटील प्रश्न के उठ्छ भने कहाँनेर जम्मै मैलाहरू हामीले फ्याँक्नपर्ने हो त ? यसको उत्तर छोटो अनि सरल भए तापनि कठिन छ। जमीन, पानी तथा वायुले सोस्न नसक्ने मैला पदार्थहरूको सिर्जना गर्ने काम हामीले बन्द गर्नुपर्छ; प्राकृतिक ढंगले मानिस, पशु तथा वनस्पतिबाट उत्पन्न भएका मैलाहरू अन्तमा जीवन–चक्रको एउटा अंश बनिन्छ– तिनीहरूले रूप बद्लेर अरू जीवन रूपको अंश बन्दछ। यसलाई डिग्रेडेबल (degradable) भएको भनिन्छ। उदाहरणस्वरूप, पशुहरूको गोबर माटोको अंश बन्दछ। तिनीहरूमा भएको रासायनिक पदार्थहरू भङ्ग हुँदछन्, अनि जराहरू हुँदै तिनीहरू उद्भिद्भित्र पसेर उद्भिद्को वृद्धिमा सहायता गर्दछन्। जब उद्भिद् मर्छ, मृत वनस्पतीय पदार्थहरू फेरि माटोकै एउटा अंश बन्दछ, अनि फेरि कुनै उद्भिद्मा प्रवेश गर्दछ। अनि यो चक्र लगातार चलिरहन्छ। अर्थात् त्यस उद्भिद्लाई केही जन्तुहरूले खाइदिंदा त्यसले जन्तुहरूलाई जिउँदो राख्न साथै तिनीहरूको वृद्धि गराउन सहायता गर्छ, जन्तुहरूको शरीरबाट बाहिर निस्केपछि फेरि एकपल्ट माटोको अंश बन्दछ।

यो गोलाकार गतिक्रम चली नै रहन्छ अनि अनन्त छ। हालसालै मात्र हो हामी मानिस जातिले यस्ता सामग्रीहरू आविस्कार गर्‍यौं जो यो गोलाकार गतिक्रममा मिल्न सक्दैनन् अनि अन्तमा बेकामको प्रमाणित हुनेछन्। ती सामग्रीहरू रासायनिक पदार्थहरूमाथि आधारित छन् जो प्राकृतिक संसारको अंश बन्न सक्दैनन् तथा बन्दैनन्। तिनीहरूलाई नन्–बायोडिग्रेडेबल (non-biodegradable) भनिन्छ। प्लास्टिक्स

र डिटर्जेन्टस यो श्रेणीमा आउँछन्। आजकल ती वस्तुहरू संसारभर दैनिक रूपमा चलाइन्छन्। हाम्रो पानी हाल्ने परम्परागत पित्तले भाँड़ाहरूको साटो प्लास्टिकको प्रयोग भइरहेछ। हामीले बड़ी परिमाणमा डिटर्जेन्टसको उपयोग अनि दुरूपयोग गर्छौं; यद्धपि अझसम्म विकसित देशहरूको तुलनामा हाम्रो परिमाण कम्ती नै छ। जति नै घुमाउरो र नागबेली बाटो भए तापनि जमीनमा भएको धेरजसो प्रदूषण अन्तमा समुद्रमा पुग्दछ। हामीले देखेअनुसार जम्मै पानी अन्तमा समुद्रमा झर्छ अनि यदि यो पानी दूषित छ भने समुद्रलाई पनि निश्चय नै यसले असर पार्दछ।

गहिरो समुद्री प्रदुषण समस्याको समाधान एकमात्र अन्तर्राष्ट्रिय सहयोगद्वारा हुन सक्छ। आफ्नै किनारा क्षेत्रको प्रदुषण र तटवर्ती अपकर्ष हाम्रो विशेष समस्या भएको छ, जुन विषय हामी सचेत रहनपर्दछ अनि जसको समाधान हामी आफैले गर्नुपर्दछ। प्रदूषण भन्नाले केवल मैलो वा फोहोर बुझिन्छ अर्थात् ''बेठीक ठाउँमा राखिएको वस्तु''। प्रदूषणको भिन्न भिन्नै प्रकार र मात्राहरू छन् तर अल्प रकमले पनि प्राकृतिक अनि आवश्यक कामहरू र गतिहरूलाई असर पार्न सक्छ। हामीले देख्छौं कि किनारा, नदीमुख र खातहरूको समीपमा भएको प्रदूषणले माछा-प्रजनन क्रियालाई प्रभाव पार्छ जसले ठूलो समुद्रमा माछाको संख्या घटाउँछ। तर मुम्बईको महिम खातमा भएको स्थल प्रदूषणले म्याङग्रूभजस्तो तटवर्ती वनस्पतिलाई नि:सन्तान पार्छ जुन वनस्पतिमा बालुवा र हिलोलाई उचित अवस्थामा राख्ने अनि तटवर्ती क्षेत्रहरूको स्वास्थ्य कायम राख्ने जिम्मावार छ। तटवर्ती र नदीमुखी जमीनहरू प्रायश: अत्यन्तै मलिला हुन्छन्; नदीले बगाएर ल्याएका पुस्टिकर तत्त्वहरू प्रायश: ती समतल दलदल भूमिमा थुप्रिन्छन् माटोलाई मलिलो पार्दै जब कि अर्कोपट्टि समुद्रतालहरूले माछा हुर्काउने पोखरीको काम गर्छन्। यस्ता क्षेत्रहरूको निम्ति प्रदूषित पानीको एउटा निवारण हो असल वनस्पतीय आवरण स्थापना गर्नु, कारण उद्भिद्हरूले अधिक मात्रामा मैला पदार्थहरू सोस्न सक्छन्।

जब शिल्प विज्ञानको ज्ञान हामीमा बढ्दै जान्छ अनि समुद्री धन हात पार्ने अधिकतर नयाँ उपायहरू हामी आविस्कार गर्दै जान्छौं, अरूको तुलनामा ती तटवर्ती क्षेत्रहरू विशेष मात्रामा पीड़ित हुनेछन्। समुद्रबाट तेल निकाल्नु अनि आणविक र तापीय उपकरणहरूको स्थापना गर्न हामी तत्पर भइरहन्छौं; सिमेन्ट बनाउन कोराल चट्टानहरूको खानी तोड्छौं। प्रत्येक त्यस कार्वाहीले प्राकृतिक तटक्षेत्रको विशाल भागलाई असर पार्दछ अनि यसको प्राकृतिक जीवन अनि प्राकृतिक रूपरंगहरू– माछा, वनस्पति तथा अन्य जीवानुहरू सबैलाई नष्ट पार्दछ। उदाहरणको निम्ति, समुद्रमा तेल निकाल्ने प्वाल खन्नुपर्दा विपुल परिमाणमा आवश्यक यान्त्रिक सामग्रीहरू र नलीहरू अनि

मुख्य गरी मानव उपनिवेशहरूको जरूरत पर्छ। त्यस क्षेत्रका प्राकृतिक रूपरंगहरू कदापि यस्ता परिवर्तनहरूमाझ बाँच्न सक्ने छैनन्। यस्ता जम्मै योजनाहरूलाई त्यागिदिनुपर्छ नभनेर कुनै एउटा योजना शुरू गर्नुभन्दाअघि त्यस योजनाको दीर्घकालीन संसर्गहरू अनि त्यसबाट पाइने सुविधा-असुविधाहरूको स्पष्ट ज्ञान हुनु आवश्यक छ। जाँच पड़ताल गर्दा शायद यो पत्ता लाग्नेछ कि अन्तमा तेलको कूपबाट पाइने नाफाभन्दा अविक्षुब्ध (undisturbed) किनाराबाट पाइने नाफा अझ बेसी हुन्छ।

महासागारहरूमा जे-जति हुन्छ, बंगालको खाड़ी र भारतीय महासागर दुवैमा, त्यसले हाम्रो देशमाथि प्रभाव पार्छ। तर हाम्रो खास जिम्मावार हो हाम्रो तटवर्ती क्षेत्रलाई स्वस्थ र प्राकृतिक अवस्थामा राख्नु। भन्न खोजिएको के हो भने हामीले यसलाई एक्लो राख्ने कोशिश गर्नु पर्दछ। हामीले समुद्री तटमा भएका प्राकृतिक वनस्पतिलाई अनाधिकार फेरबदल गर्नु हुँदैन न त नदीमुखी सिमसारसित हस्तक्षेप गर्नुहुन्छ; समुद्रले किनारा क्षेत्रसित आफ्नै प्रकाशको सम्बन्ध गाँस्ने अवकाश पाउनुपर्छ। यदि हामीले समुद्र हाम्रो वासस्थान नजीक आएको पार्यौं भने समुद्रलाई हामीले पछिल्तिर धकेल्नुको सट्टामा बरू आफ्नो वासस्थानलाई अझै भित्रपट्टि सार्नुपर्छ।

अभाग्यवश किनारा क्षेत्रसित मनपरी गर्ने प्रवृत्ति हामीमा छ। मुम्बईको अनुभवको आधारमा समुद्रको एउटा अंश पुनर्लाभ गरेर शहरको निम्ति अतिरिक्त जमीन प्राप्त गर्ने हामी कोशिश गर्छौं। म्यारिन ड्राइभ र नरिमान पोइण्ट नामक स्थानहरू हामीले फिर्ता लियौं अनि यसको प्रतिफलमा समुद्रले किनाराको अरू ठाउँहरू दखल गर्‍यो, अनि भरसोभा गाउँलाई ध्वंस पार्‍यो। महावलिपुरममा एउटा मन्दिर समुद्रले तान्ने संकटजनक अवस्थामा पुगेको छ; अनि समुद्रलाई पछि धपाउने ध्येयले यसको वरिपरिको क्षेत्र पुर्ने कोशिश हामी गर्दैछौं। किनाराको छेउमा बस्ने वासिन्दाहरूले ज्वारभाटाको ढाँचा बद्‌लेको अनि उनीहरूको घरबार छालले लानु आँटेको कुरो लिएर उजूर गर्न शुरू गर्दैछन्। पानीलाई थिचेर तथा दबाएर सानो पार्न सकिँदैन भन्ने तथ्यलाई हामी भुलिरहन्छौं अनि यदि हामीले जलाशयबाट एक क्यूबिक फीट स्थान लग्यौं भने त्यो स्थानको कुनै अरू उपायद्वारा पुर्ताल गर्नुपर्दछ—जसको निम्ति हामी तयारी छैनौं अनि त्यसो गर्न हामीलाई मनपर्दैन।

यथार्थमा प्राकृतिक किनारा क्षेत्रहरू अर्थात् समुद्रका भागहरू साथै तटलाई यति महत्त्वपूर्ण मानिन्छ कि धेरै देशहरूले म्यारिन राष्ट्रिय उद्‌यान अनि बायोस्फेर रिजर्भ जस्ता संस्थाहरू त्यहा सृष्टि गरिरहेछन्। शान्त विचारले हेर्‍यौं भने हजार-हजार माइल लामो तटक्षेत्र हुँदा पनि हामीले हाम्रा बालक-बालिकावर्गले समुद्रतट हेर्न चाहे भने उक्त तटक्षेत्रलाई कानूनद्वारा रक्षा गर्नुपर्ने छ।

हाम्रो माछा उद्योगको ढाँचा पनि द्रुत गतिमा बद्लिरहेछ। धेरै शताब्दीसम्म हाम्रो वायुचालित नाउहरूले तेल, उर्जा, इन्धन अनि दुर्लभ वस्तुहरूमाथि कुनै खर्च नगरी विशाल परिमाणमा माछा मार्थे।केही टाढ़ाको आँधिलो समुद्रमा जतातत चलाइने ''क्याटामरण'' नामक अद्‌भूत नाउ थियो। यो नाउ डोरीले बाँधेको दुइचारवटा हल्का काठका मुड़ाहरू र एउटा पालले रचिएको हुन्छ। यो डुब्न वा पल्टिनु सक्दैन, यसलाई इन्धनको खाँचो पर्दैन। यहाँ काम गर्नको निम्ति फाँटिलो स्थान पाउने हुनाले र पानीमाथि होंचो भएर हिंड्‌दा समुद्री बाड़ धेरै कम हुने हुनाले माँझी तथा मल्लाहरूले अरू नाउहरूभन्दा यस नाउलाई मनपराउँछन्। यसको असुविधा हो हावामाथि रहेको निर्भरता। फेरि वृक्ष भण्डार रित्तो पारिएकोले जङ्गलबाट चाहिएका विशेष मुड़ाहरू पाउन गाह्रो पर्दछ। तसर्थ क्याटामरणको स्थानमा उर्जाले चल्ने नाउहरू आइरहेछन्–एउटा शोचनीय परितर्वन, कारण क्याटामरण प्राकृतिक संसारको एउटा अंश नै थियो, यसले प्राकृतिक तत्त्वहरूकै प्रयोग गर्थ्यो अनि अद्वितीय रूपमा यो आफ्नो कामको निम्ति ठीक थियो। उर्जाले चल्ने मोटरनाउ भने यसको कोलाहलकारी इञ्जिन, छचल्किने तेल र गन्धहरूको कारणले अर्के श्रेणीमा पर्दछ— प्राकृतिक तत्त्वहरूको माझमा यो एउटा अन्यदेशी वस्तु भएको छ।

एउटा व्यक्तिको जीवन यापनको निम्ति प्राकृतिक ढंगको पेशा नभएर मोटर नाउद्वारा माछा मार्ने काम ठूलो उद्योग हुन गएको छ। वृहत् स्तरमा माछा मार्ने कामले विशाल र व्यवस्थित उद्योगको रूप लिंदैछ। परम्परागत माछाबाट जीविका चलाउने माँझी समुदायहरूलाई ठूलो धक्का पर्नेछ, अनि नयाँ शिल्पज्ञानसित प्रतियोगिता गर्नु नसक्ने तथा त्यसलाई अपनाउन नसक्ने माँझीहरूले आफ्नो परम्परागत ढंगको जीवन यापन माया मार्नुपर्ने छ। धेरै शताब्दीसम्म आफ्नो ढंगले माछा मार्ने क्षेत्रमा नयाँ किसिमको मोटरनाउहरू परिचालन भइरहेको देख्दा गोवाका माँझी समुदायले केही अघिदेखि विद्रोह गरिरहेछन्। किनारादेखि तीन माइल टाढ़ासम्मको क्षेत्र परम्परागत नाउहरूको निम्ति आरक्षित राख्ने अनि त्यस परिधिदेखि बाहिरको क्षेत्रमा उर्जा सञ्चालित मोटर नाउहरू चल्ने युक्तिसंगत परिकल्पनालाई लागू गर्नु कठिन ठहरिएको छ; अनि यो सम्भव नहोला कि प्रत्येक माझी कानूनपालक छन्। एउटा व्यंग्यपूर्ण कुरो के हो भने विदेशी माछा मार्ने नाउहरूले गरेको अवैध तथा गैरकानूनी क्रियाकलापको विरूद्धमा पनि ती माझीहरू नै असन्तुष्टता जनाउँछन्। ती डुंगाहरू स्वयं २०० माइल दुरत्वको घेराले सुरक्षित छन्। आफ्नो किनारादेखि २०० माइल (३२०व० कि०) टाढ़ासम्म माछा मार्ने पूर्ण अधिकार प्रत्येक देशले हालमा पाएको छ। फेरि यस नियमको पालन

सदैव गर्दैन, अनि कमसेकम भारतको सम्बन्धमा जापान, ताइवान, दक्षिण कोरिया र थाइल्याण्डले गरेको नियम उलङ्घनका थुप्रै गुनासोहरू हामी सुनिरहेछौं।

त्यसबीचमा ठूलो परिमाणमा माछा मार्ने आशयले उत्कण्ठित भएर हाम्रा नाउहरू समुद्रको भित्र-भित्रसम्म घुमिरहेछन्। एक तिहाई इञ्च सानो प्वाँल भएका जालहरू प्रयोग गरेर ती माँझीहरूले माछाका एकदमै ससाना बच्चाहरू पनि समात्छन् जसले गर्दा माछा संख्यामा ह्रास आएको छ । ठूलो प्वाल भएका जालीहरू प्रयोग गर्ने व्यवस्था मिलाउनु जरूरी छ।

वर्तमान शताब्दीसम्म समुद्रहरूलाई सञ्चालन गर्ने नियम कानून अति सरल थियो। ती समुद्रहरू सबैको साझा सम्पति थियो अनि कसैको निजी धन थिएन। एउटा देशको किनारादेखि तीन माइल टाढ़ा देशमा जान तथा माछा मार्न सकिन्थ्यो। किनारादेखि तीन माइल टाढ़ोसम्मको पानीमाथि एउटा देशको आधिपत्य रहन्थ्यो, मोटामोटी त्यो क्षेत्रलाई ''महाद्वीपि चट्टान'' भनिन्थ्यो-जहाँ तुलनात्मक परिमाणमा समुद्र धेरै गहिरो छैन। यो परिधिभित्र देशको नियम-कानून जुनै जहाजमाथि पनि लागू हुन्थ्यो। तर गत शताब्दीको उत्तरार्धमा समुद्री परिस्थितिहरू बद्लेका छन् जसरी भूमिगत परिस्थितिहरू बद्ले। हामीले सोंचेको भन्दा अधिकतर धन समुद्रमा पाइन्छ भन्ने जानकारी विश्वले आविस्कार गरेको छ। माछा र लेऊ जस्ता जीवित धन-भण्डारबाहेक समुद्री पींधमा तेल, ग्यास अनि धातुहरू पनि पाइन्छन् भन्ने कुरो हामीलाई थाहा भएको छ। पानीमा तेल पोखाएर विशाल परिमाणमा माछा संख्या नाश गऱ्यो भने यस घटनाको जिम्मावार को बन्नेछ अनि यसको क्षतिपूर्ति कसले गर्नेछ?

हामीलाई याद छ, अर्को देशभित्र पर्ने माछाले अण्डा काड्ने स्थानहरूलाई हस्तक्षेप गऱ्यो भने एउटा देशले पाउन सक्ने माछा तीव्र परिमाणमा घट्न सक्छ। अब यसको उत्तरदायित्व र जिम्मेदार कसरी बाँड्न सकिन्छ?

ती प्रश्नहरूमाथि कुरा गरिएको अब त बीस वर्षभन्दा ज्यादा भइसक्यो तर अझ पनि सन्तोषजनक समाधान प्राप्त भएको छैन। उहिले समुद्रबाट सोझै पाइने नाफा एक मात्र माछा मार्नुमा थियो; आज समुद्रको पींधबाट पैसा कमाउने मौकाहरू यतिविध्न छन् कि कुनै पनि सम्झौता लोभको भावनाले नछोएको हुँदैन। तथापि केही मुख्य क्षेत्रहरूमा समुद्र-सन्धिका नियम-कानूनले उन्नति ल्याएको छ अनि समुद्री कानूनमा अधिक सामन्जस्य ल्याइएको छ। नमूनाको निम्ति, अघि-अघिको तीन माइल (५ व०कि०)-को सट्टामा अब बाह्र माइल (२० व० कि०)-सम्मको क्षेत्रीय पानीमाथि आफ्नो प्रभूत्व रहनेछ। यस परिधिबाहिर नाउ यात्रा, वायु यात्रा अनि समुद्री २०० माइल

(३२०व० कि०)-भित्र पर्ने केबल इत्यादिको अधिकार अन्य देशहरूको हुन्छ; तर जम्मै समुद्री सम्पद्हरू जस्तै माछा, तेल, ग्यास, झारपात इत्यादि तटवर्ती राज्याभित्र पर्छन्। तर विकसित शिल्पज्ञानले गहिरो समुद्रबाट प्रचुर सम्पद् उद्दार गर्ने सम्भाव्यता हामीलाई दिएकोले प्राप्त सामग्रीहरूको उचित अनि क्रमवद्ध वर्गीकरण गर्ने काम अजीर तथा सम्हालिनसक्ने समस्या भएको छ , अनि कुनै भूमिगत सन्धिभन्दा समुद्रीय सन्धिको नियम-कानून बनाउने काम धेरै गुणा जटिल र कठीन छ। त्यहाँ १५० वटा देशहरू मुछिएका छन् अनि ३७० धाराहरूमाथि चर्चा हुन लागेको छ। सन्धिले झगड़ा तथा विचार भेदहरूलाई रोक्न सके यसलाई एउटा ठूलो सफलता मान्नुपर्ने छ जसमा कुटनीतिसित शिल्पज्ञान, राजनीति अनि हामी आशा गर्छौं पर्यावरणीय विचारको समन्वय हुनेछ।

यदि हामीले समस्याहरूको विश्लेषण गर्‍यौं भने समुद्रको स्वास्थ्यलाई बिगार्न सक्ने दुइवटा तत्त्वहरू पाउनेछौं। एउटा हो, नयाँ परिमाणअनुसार परम्परागत काम कार्वाही गरिने अर्थात् नयाँ ढंगको माछा मार्ने विधि, तेलद्वारा प्रदूषण, समुद्री वनस्पतिको निष्कासन अनि म्याङग्रोभको विध्वंश। अहिले हामीमा भएको शिल्पज्ञानको अभाव र व्यापक गरीबी हाम्रै पक्षमा रहेका छन्। शक्तिशाली माछा मार्ने जहाजहरूको सहायताले अन्य देशहरूले समुद्रको पींधसम्मै खोदालिसकेका छन् अनि माछाको संख्या भयपूर्ण स्तरमा गिराउन सफल भएका छन्। उदाहरणार्थ, धेरै वर्षसम्म निष्ठूर रूपमा ह्वेल माछाको शिकार गरिएको थियो, अनि हालमा ह्वेल खूबै विपदजनक अवस्थामा पुगेको हुँदा संरक्षणवादीहरूले ह्वेलको शिकारमाथि तीन वर्षको निषेध लगाउने कोशिश गरिरहेछन्। यद्यपि उनीहरू आंशिक रूपमा सफल भए तापनि भारतीय महासागर कमसेकम ह्वेल बचाउको एउटा सुरक्षित क्षेत्र भएको छ। त्यहाँ ह्वेल मार्न दश वर्षसम्म निषेध गरिएको छ। यूरोपको सबैभन्दा जताततै पाउने अनि सस्ता माछाहरूमध्ये पर्च (perch) नामक माछा ज्यादै मात्रामा मारिएको छ। यसको एउटा कारण हो माँझीहरूलाई माछालगायत लार्भेहरू पनि समात्ने अनुमति दिइएको थियो। बढ्ता परिमाणमा सारडिन (sardines) माछा मारिएकोले कयालिफोर्नियाको ठूला माछा स्थलहरूमा सारडिनको सट्टामा एनको भिज (anchovies) नामक माछा लगाइएको छ। माछा संकटमा परेका देशहरूको एउटा लामो सूची हामीसित प्राप्य छ; अनि उनीहरूबाट हामीले शिक्षा लिनुपर्दछ। हाम्रो हुस्सूपनको कारणले एउटा शोचनीय टिप्पणी के हुन सक्छ भने समुद्रको कृपालु प्राकृतिक उपज हामीलाई उपलब्ध हुँदाहुँदै पनि समुद्री धनको यति विशाल मात्रामा शोषण गर्‍यौं कि कृत्रिम अवस्थाहरूको सृजना गरी माछाको संख्यालाई बढ़ाउन प्रयासबद्ध भइरहेछौं।

द्वितीय आंशकाको श्रोत हो–नयाँ शिल्पज्ञान जसले समुद्रलाई पूर्णतया नयाँ कार्य क्षेत्रको रूपमा चिन्दछ—जस्तै, प्राकृतिक ग्यास, तेल र खनिज पदार्थहरूको खोज पत्ता गर्ने।

हाम्रो लापरवाहीपन तथा लोभले आफ्नै हितलाई नोक्सान पुऱ्याउने कुरो विषयमा अब त हामी केही मात्रामा सचेत भएका छौं, तसर्थ हामी आशा गर्छौं ती नयाँ साहसिक कामहरूमा सावधानसहित पाइला चाल्नेछौं। हामीले ढिकुटीलाई रित्याउन हुँदैन। समुद्र तटसित आदरसहित व्यवहार गर्‍यौं भने, यसले दिएको उपहार लोभ नगरी जतन गर्‍यौं भने, समयको अन्तसम्मै यसले आफ्नो बहुमूल्य सम्पद् हामीलाई दिइरहनेछ। हामीले बारम्बार आफैलाई सम्झाउनपर्ने कुरा के छ भने अतीतमा झैं समुद्रको जताभावी उपयोग गर्नु हुँदैन। हामीसित एउटा स्वस्थ महासागर रहुञ्जेल मात्र हामीले एउटा स्वस्थ भूमि पाउन सक्छौं, हामी समुद्रमाथि निकै खाने कुरा र अरू आवश्यकताहरूको निम्ति सोझो रूपमा नै भर परेका छौं; अनि समुद्रले विशाल परिमाणमा हाम्रो पर्यावरणका अन्य भागहरूलाई प्रभाव पार्छ भने ती भागहरूबाट पर्यावरण स्वयं पनि प्रभावित हुँदछ।

# गाउँहरू

## I

### *तिनीहरूको परम्परागत शक्ति*

भारतमा निम्न वर्गका किसान प्राय: कहिले पनि आफ्नो जमीनमा बस्दैनन्; उसको घर उसले कमाएको जमीनदेखि केही गरेर पनि दुइ-चार वर्ग किलोमिटर टाढ़ास्थित हुन्छ। हरदरमा भारतीय गाउँ झुरूप्प पोको परेर बसेको घरहरूको झुण्ड हो जहाँबाट किसान प्रत्येक बिहान आफ्नो खेतबारीतिर प्रस्थान गर्दछ। यो एउटा आदर्श व्यवस्था हो, कारण आवादी बस्तीको सानो क्षेत्रफलभित्र गाउँले सम्प्रदायको दैनिक घरेलू र सामाजिक खाँचोहरू अवस्थित छन्; यद्धपि ग्रामवासीहरूका खेतबारीहरू वरिपरिका बस्ती इलाकामा छरिएर रहेका छन्।

असल जलश्रोत हुनको कारणले एउटा गाउँको स्थापना भएको हुन सक्छ; अनि, यदि त्यस ठाउँ सुविस्ताजनक र धेरथोर गम्य भए दुइ-चारवटा झोपड़ीहरूले अरू झोपड़ीहरू ल्याउनेछन्। समयान्तरमा एउटा पूर्ण विकसित गाउँ सम्प्रदाय त्यहाँ खड़ा हुन सक्छ जहाँ सबै प्रकारको भौतिक र मानवीय खाँचोहरूको पूर्ति गर्ने प्रबन्ध पनि उपलब्ध हुन्छ। आदर्श गाउँ भन्नाले उत्तम स्तरका तथा चिरस्थायी बनौटहरू भनेको होइन, तर परस्परमा निर्भर गर्ने जनसमुदायको साथ वृहत् मात्रामा सामूहिक आत्म-निर्भरता त्यहाँ हुनपर्दछ। गाउँवासिन्दा प्रत्यक्ष रूपमा आफ्नो मुख्य खानेकुराको निम्ति आफ्नै भूमिको उप्जाउमाथि निर्भर गर्दछ, कि त उसको छिमेकीहरूसँग साटोपाटो वा साटफेर गर्न सक्ने उसको योग्यतामाथि। तर यसको क्षेत्रफल र सामान्य वैभवको आधारमा गाउँलाई कारीगरहरूको पनि आवश्यकता पर्दछ जसले दैनिक खाँचोहरूको आपूर्ति गर्दछ। हलोहरू, गोरूगाड़ीहरू अनि शायद केही घरहरू बनाउन एउटा काठकर्मीको आवश्यकता पर्दछ। एउटा कामी अनि एउटा कुम्हाले त्यहाँ हुनैपर्छ, कारण भाँड़ाहरूबिना जीवन बिताउन सकिँदैन – पित्तल, ताबाँ तथा माटोका भाड़ाहरू नै किन नबनियोस्। यसर्थ जुलाहा, धोबी अनि दर्जीहरू जस्ता कारीगरहरू रहन वान्छनीय छ अनि उनीहरूको उपस्थिति गाउँको क्षेत्रफलमाथि निर्भर गर्छ।

कहिलेकाहीं लुगा बुन्ने, रङ्गाउने वा छाप्ने एउटा मात्र शिल्प व्यवसाय एउटा गाउँले गरिरहेको हुन्छ; अनि यस्ता ठाउँहरू बढ्दै साना शहरहरू हुदाँ उक्त स्थानहरू ती कलाहरूको निम्ति प्रसिद्ध बन्दछन्।

केही मात्रामा आपसी निकटताको कारणले र केही मात्रामा एउटा व्यक्तिको अर्को व्यक्तिमाथि साथै जम्मै सम्प्रदायमाथि पूर्ण रूपले भौतिक र सामाजिक निर्भरता रहेको कारणले यो भन्न सकिन्छ कि छ एउटा गाउँको सबैभन्दा यथार्थ परिभाषा यसको अनुहारमाथि होइन तर यसभित्र भएको सम्बन्धहरूमाथि आधारित हुनुपर्दछ।

एउटा गाउँको स्वभाव र अस्तित्व यसको संरचनामाथि अड़ेको हुँदैन। यसको सफलता अड़ेको हुन्छ यसको साम्प्रदायिक जीवनमाथि, आपसी विश्वास र सम्मानमाथि, पारस्परिक भरोसामाथि, प्रत्येक मानिसको व्यावहारिक खाँचोहरूको पूर्तिमाथि अनि सम्पूर्ण सम्प्रदायको सार्वजनिक सुसम्पन्नपन र कार्यशीलतामाथि। यर्थाथमा ग्रामीण सम्प्रदाय स्थानीय, प्राकृतिक र मानवीय साधनहरूको संगठनले बनेको मिश्रण हो। मानिसहरूको जीवन स्थायी वस्तुहरूसित घनिष्ट भावले जेलिएको छ- स्थानीय ढुङ्गा र हिले माटो घर बनाउनलाई, स्थानीय वनस्पति घर छाउनुको निम्ति, स्थानीय अन्नवाली भोजनको निम्ति। माटो, पानी र भूमिको संरचनाको श्रेष्ठताले उनीहरूले अप्नाएको पेशा, कारीगरी र सीप निर्धारण गर्दछ।

एउटा गाउँका वासिन्दाहरूबीच भएको घनिष्टताको नमूना परम्परागत ढंगमा बोलिने भाषाबाट स्पष्ट हुन्छ –" वह तो हमारे गाउँका आदमी है" भन्ने वाक्यांशभन्दा ज्यादा प्रशंसा एउटा मानिसका गुणहरू विषय हुन सक्दैन। यस कथनले त्यस व्यक्ति विश्वासनीय छ भन्ने कुरो श्रोतालाई जनाउँछ। छिमेकीहरूमाझ भएको आत्मीयताभन्दा गाउँले घनिष्टता अझ गहिरो हुन्छ – यो साइनो र सम्बन्धहरूले जेलिएको जालो हो जसलाई बितेका पुस्ताहरूबीच भएको बन्धन, साझा इतिहास र अनुभवहरूले सुदृड़ बनाएको छ।

हाम्रो गाउँहरूको सन्दर्भमा कुरा गर्नु हो भने जातपातको कठोरताले सम्बन्धहरूमा यथार्थ परिवर्तन ल्याउन प्राय: असम्भव भएको छ। तल्लो जातका मानिसहरू मन नपर्दो काम लिएर आफ्ना स्थानमा अटल रहन्छन्; तिनीहरू भूमिहीन थिए अनि सदैव आफ्नो जमीन्दार वा मालिकको आधिपत्यमा रहन्थे। प्रत्यक्ष रूपमा प्रत्येकको लक्ष्य हुनपर्ने थियो आफ्नै अवस्था सुधार्ने; जातभातको भावनाले ओतप्रोत भएको समाजमा यो गर्न असम्भव छ। पेशा, व्यापार-वाणिज्य, जीवनपद्धति, घरिया आदत अनि सहुलियतहरू साथै अशक्तताहरू एउटा पुस्तादेखि अर्को पुस्तासम्म कुनै परिवर्तनबिना

सुम्पिइन्छ। हाम्रा मानिसहरूले कुनै विशेष जातको रूपमा साथै उनीहरूको व्यक्तिगत काम र दायित्वको भारको रूपमा दोबर जिम्मावार अघिल्लो पुस्ताबाट प्राप्त गरेका छन्। हरदर हिसाबले एउटा व्यक्तिले आफ्नो निर्णय लिने मौका विरलै पाउन सके, न त उ जन्मँदाको सामाजिक स्थितिहरूले उसको निम्ति खनिदिएको बाटो नै उसले बद्लाउन सक्यो।

यदि ग्रामीण जीवनमा संयुक्त परिवार प्रणालीले दिएको केही घनिष्टता र सुरक्षितता थियो भने यसले त्यही परिमाणमा गुप्तता र स्वतन्त्रताको हनन् पनि जोड्तोड्ले गरेको छ। समाजशास्त्रीहरूको निम्ति यो एउटा चाखलाग्दो प्रश्न छ – साम्प्रदायिक जीवनले निक्षेप गरेका अवरोधहरू कहाँसम्म हामीमा भएको उद्यमका अभावको जिम्मेदार छ अनि त्यसो भए कति मात्रामा ! जहाँ परम्परा र रीतिथितिले सबैभन्दा उच्च स्थान ओगटेको थियो, जहाँ एउटा सम्प्रदायको सामुहिक मन्तव्य खूबै मुख्य ठहरिन्थ्यो, कुनै व्यक्तिहरूले नयाँ काम कर्वाही शुरू गर्ने नैतिक तथा शारीरिक साहस त्यहाँ गर्न सक्दैन थिए चाहे त्यो जतिकै मुनासिब, लाभदायक तथा आवश्यक किन नहोस्।

विषयको अर्को पक्ष के थियो भने दुर्बल, असहाय र विकलांगहरूले जसोतसो भाग्यशालीहरूको साथ पाए। बिरलै कसैले गरीबप्रतिको सम्बन्धलाई अस्वीकार गर्न साहस गर्थे। यस्तो धारणाले एउटा गजबको रक्षकको भावना सृजना गर्न सक्यो भने यसले प्रायश: निश्चय नै दरिद्रता र र दायित्वहीनताको भावना बढ़ाउनमा पनि प्रोत्साहन दियो। शायद यसले बलवान् र प्रतिभाशालीलाई पनि आफ्नो शक्तिको पूर्ण उपयोग गर्नदेखि हतोत्साही बनायो कारण फाल्टो आम्दानीको लागि उसले कठोर परिश्रम गर्न चाहन्थ्यो र यदि यो आम्दानी सित्तैमा आसेगाँसेहरूको झुण्डमाझ बाँड़िन्छ भने ?

भारतीय कृषि उद्योगको परम्परागत चलन पनि त्यस्तै छरिता र संगठित गुणले युक्त थियो। खेतबारी जोत्ने गोरूले यातयात र मलको व्यवस्था पनि गरिदिन्छ। त्यही मलले घरको भूइँ र भित्ताहरू लिपिन्थे। त्यसबाहेक गोरूहरूले खस्रो घाँसपात खाइदिँदा जताभावी उम्रने उद्भिद्हरूको नियन्त्रणमा पनि सहायता हुन्थ्यो। अन्नको बोटबाट दाना निकालेपछि परालचाहिँ पशुहरूको घर र आहारको निम्ति प्रयोग गरिन्थ्यो। घर, भित्ता, गाड़ा अनि अन्य अभावहरूको निम्ति एकदमै मामूली स्थानीय सामग्रीहरू चलाइन्थे। विशेष स्थानीय अवस्था र प्राप्य सामग्रीहरूको आधारमा प्रत्येक स्थानले आफ्नै ढंगको शिल्पज्ञान विकास गरेको थियो। एउटा जिल्लाको माटो, चट्टान, पानी र वनस्पतिको ज्ञान अनि दैनिक जीवन यापनको निम्ति ती तत्त्वहरूलाई व्यावहारिक रूपमा मिलाउने काम एउटा यस्तो उपलब्धि थियो जसको विकासमा सैयौं वर्ष समय लागेको थियो।

एउटा मुख्य कुरा के हो भने नयाँ शिल्पज्ञानहरू उपभोग गर्ने ठेलमठेलमा हाम्रो पारम्पारिक ज्ञानलाई हराउनु हुँदैन।

चल्दै आएको परम्पराअनुसार गाउँले व्यक्तिले नगद पैसा आफैले चलाउनु त्यति जरूरत हुँदैन्थ्यो। हात-हतियारको दामस्वरूप एउटा किसानले सिकर्मीलाई आफ्नो अन्नबालीकै केही अंश दिन्थे; धोबीलाई नगद पैसा शायद दिइँदैन्थ्यो तर भोजन गर्ने समयमा उसको ग्राहकको घरमा उपस्थित हुने अधिकार हुन्थ्यो। शिक्षक र मुन्सीको तनखा पनि सामग्रीमा नै तिरिन्थ्यो। शायद यही सत्यताले गर्दा केहीपश्चात् हामीले देख्नेछौं प्राय: प्रत्येक गाउँलेमा नगद व्यवहार गर्ने क्षमता पाइँदैन। वित्त व्यवस्था र साटासाटको व्यापार अति भिन्दा-भिन्दै कुराहरू हुन्, अनि अर्थ विषय थुप्रै कुराहरू छन् जुन एउटा गाउँले सिकारूले बुझ्न गाह्रो पर्छ।

वास्तवमा गाउँले खर्च र शहरिया खर्चबीचमा ठूलो भिन्नता पाइन्छ। गाउँभित्र घर-सामान, घरलाई अझ उत्तम बनाउने, मनोरञ्जन, सुविस्ताका सामाग्रीहरू अनि सजाउने चीजबीज जस्ता कुरोहरूमाथि प्राय: खर्च गर्नुपर्ने छैन। अर्कोपट्टि, बिहाबारी, उत्सव अनि चाड़बाढ़हरूमा अति नै पैसा खर्च गरिन्छ। सम्पूर्ण जीवनको बचत एउटै बिहे- कार्यमा खर्च हुन सक्छ; तथा एउटा बिवाह कार्यले समग्र परिवारलाई ऋणमा डुबाउन सक्नेछ अनि दुइ पुस्ताभित्र पनि त्यस ऋणबाट उनीहरू ऋण मुक्त हुन सक्नेछैनन्।

गाउँको समय-तालिका शहरको भन्दा पूर्ण रूपले भिन्नै हुन्छ। यहाँ घण्टाकाल, दिनकाल, हप्ता तथा महीनाकाल पनि मुख्य छैन। गाउँलेका लागि ऋतुकाल मुख्य छन्। बीऊ छर्ने र अन्नबाली उठाउने ऋतुहरू व्यस्तताले बिनियुक्त रहन्छन्, जब दिनमा आठ घण्टा काम गर्ने रकम त्यहाँ हुँदैन। उनीहरूको दिनकाल सूर्योदयको अघिदेखि शुरू भएर रात नपरिञ्जेल रहन्छ। आँखा देखिञ्जेल समस्त मानिस समुदाय कठोर परिश्रममा तल्लीन रहन्छन्। एउटा अन्नबाली थन्काइसकेपछि अर्को रोप्नुभ न्दा अघिको ऋतुकालचाहिँ फुर्सदको समय भएको हुनाले यस समयमा बिहेबारी अनि अन्य उत्सवहरू गरिन्छन्। यो पनि त्यस स्थितिमा सम्भव हुन्छ जहाँ सालभरि चाहिने लुगाफाटा र घरेलु सामानहरू किनिएका छन् तथा जसको मूल्य, कमसेकम तिरिएको छ, कारण सालभरिको नगद आम्दानी फसल बिक्रीद्वारा प्राप्त हुन्छ अनि सबै नगदी कारोबारहरू यसै समयमा गरिन्छन्।

यही समयमा किसानले मेला उत्सवबाट एक हल गोरू किन्छन्, उसले घरको छानो मर्मत गर्छन्, एउटा कुवा बसाउँछन् तथा केही नयाँ हात-हतियार संग्रह गर्छन्।

बैंकमा पैसा राख्ने आदत गाउँ-बस्तीमा पाइन्न, अनि एउटा सानो गाउँमा सधैँको दैनिक काम कार्वाहीको निम्ति बैंकको आवश्यकता नपरे तापनि पैसा सञ्चय गर्ने र संकटकालको निम्ति नगद रूपियाँ साँचेर राख्ने क्षमता हुनु प्राणभूत ठहरिन्छ जसमा साहूको ऋणमा फँस्नदेखि मानिसहरूलाई रोक्न सकिन्छ। ऋणग्रस्तता एउटा कटु रोग हो जसले गाउँहरूको जीवन अवस्थामा वृद्धि वा सुधार आउन दिंदैन।

ग्रामीण सांस्कृतिक कार्यक्रमहरूमा व्यक्तिगतभन्दा साम्प्रदायिक चहल-पहलमाथि जोड़ दिएको प्रत्यक्ष देखिन्छ। एक्लो अभिनेताहरू थोरै छन्। नाँच-गान जातीय समुदायले गर्ने कुरो हो अनि प्रायशः धार्मिक भावसंवेगको अभिव्यक्ति त्यहाँ पाइन्छ। प्रायः सबै रूढ़ीगत क्षेत्रीय नाट्यप्रदर्शन रामायाण तथा महाभारतका कथाहरूमाथि आधारित छन्। मानिसहरूको व्यक्तिगत सोखहरू वा मनोविनोदहरू त्यहाँ छैनन् अनि निश्चय नै उनीहरूले एक्लो अवस्थामा ती कुराहरूको अभ्यास गर्दैनन्। "कलात्मक" मान्छेले उत्सवहरूमा माटोको मूर्ति बनाएर आफ्नो कलाको परिचय दिन सक्छ, तर उसले ती मूर्तिहरू मौलिक ढंगमा भन्दा नियमित परम्परागत रूपमा नै बनाउनेछन्। यो प्रथाले यथार्थ कलालाईभन्दा व्यापारिक कारीगरलाई प्रेरणा दिंदछ। शारीरिक दृष्टिले गाउँ हल्का र प्रायः सजिलैसित बोक्न हुने वस्तु हो। एउटा पुरानो गाउँ भन्नाले घरि-घरि त्यही स्थानमा गठन भएको गाउँ बुझिन्छ; धेरजसो गाउँहरूलाई सहजै सार्न सकिन्छ; बाड़, सुकौरो, एउटा नयाँ बाटो आदिले सजिलै मानिसहरूलाई गाउँको ठाउँ केही मात्रामा सार्न प्रेरित गर्दछ। जब एउटा सुरक्षित सेङ्चुरी तथा विद्युत योजनाको कारणले एउटा गाउँलाई सार्न आवश्यक हुन्छ, व्यावहारिक समस्या कदापि असजिलो छैन।

ती जम्मै अपरिवर्तनशील जस्ता देखिए तापनि गाउँहरूमा निश्चय नै परिवर्तन आइरहेछ। कोही चिप्ले किराको सुस्त चालमा जसमा यहाँ केही अदल-बदल देखिँदैन; अन्यहरू केही द्रुत गतिमा, अनि त्यहाँ नाइलोनका कमीजहरू, ट्र्याक्टर र वैद्युतिक उत्तोलन यन्त्रका गठहरूले एउटा नयाँ रूप दिलाउँदछन्। परिवर्तनको वेगलाई विद्युतीकरणले नियन्त्रण गरेको हुन्छ, अनि ठूला नगर तथा शहरहरूसित जड़ित यातायातको सुविधाले। ठूला शहरहरूसित बस बाहनले जोड़ेका गाउँहरूले अझै टाढ़ाका गाउँहरूभन्दा नयाँ विचार शैली र जीवन-ढाँचा चाँड़ो रूपमा टिप्दछन्।

व्यावहारिक परिवर्तनको क्षेत्रमा सबैभन्दा मुख्य कुराहरू हुन् उर्जा सञ्चालित कूप पानीका सुविस्ताहरू, उच्चतर बाटो र यातयातहरू। गाउँले वासिन्दांहरूको मनोवृति हेर्दा गाउँले जीवनमा पटक्कै परिवर्त्तन ल्याउन सकिँदैन भन्ने भान हुन्छ। जातभातमाथि ज्यादै महत्त्व दिइएकोले प्राचीनकालदेखि चल्दै आएको आचरणले मानिसलाई अनिच्छुक र आफ्नै भाग्य निर्माण गर्ने काममा अयोग्य बनाएकोले जीवनको मूल्य

होचिएको छ; अर्कोपट्टि व्यावहारिक परिकल्पना वा जोड़दार नवीन पद्धतिको अभावले मानिस सम्प्रदायलाई पछौटे बनाएको छ।

दृष्टिगत हिसाबले भारतीय गाउँ खूबै सुन्दर हुन सक्छ। विशाल वृक्षहरूको छाँयामा रहेका ती झोपड़ी र ससाना घरहरू, सन्तोषी गाईवस्तु, चम्किलो पित्तल र ताँबाका पानी राख्ने गाग्रीहरू अनि कुप वा तलावमा मानिसहरूको रमाइलो हलचल सुन्दरताका चिह्नहरू हुन्। आदर्श रूपमा गाउँ एउटा एकनासे अपरिवर्तनीय तर मनपर्दो ढाँचामा नयाँ दिशातिर लम्किन सक्थ्यो। नि: सन्देह वासिन्दाहरूले अनुभव गरेका कठोरताको परिमाण प्राप्य प्राकृतिक साधनहरूमाथि निर्भर गर्दछ— जलवायु, जमीनको अवस्था, पानीको श्रोत र भरपर्दोपन, उचित फसल पुग्न सक्ने असल हाट- बजार र स्थानीय वनस्पतिमाथि। जब जी तत्त्वहरू उचित ढंगमा सन्तुलित रहन्छन्, तिनीहरूको गतिविधि र सम्बन्धहरू मिलेर एउटा अत्युत्तम परिवेश सृष्टि हुन सक्छ, जहाँ मानव कार्यकलाप र प्राकृतिक तत्त्वहरू सठीक ढंगमा प्राप्य रहन्छन् अनि एउटाले अर्कोबाट फाइदा पाउन सक्दछन्। त्यो कोमल समतोलन (poise)प्राप्त गर्न कठिन छ; नयाँ युक्ति र शिल्पविज्ञानको अनाहूत प्रवेशले वृद्धिलाई असन्तुलित बनाउन सक्छ।

गाउँ-बस्तीहरूमा भारत बाँच्दछ भन्ने कुरो धेरैपल्ट भनिएको छ। योभन्दा सत्य कुरा अरू हुन सक्दैन। भारतभरि छरिएर बसेका हजारौं ठूला-साना उन्नत वा दरिद्र परिवर्तनशील तथा गतिहीन यस्ता गाउँहरूतिर नै हामी सबैले अन्तमा हाम्रो मानसिक र शरीरिक आद्दतहरूको उत्पति पहिल्याउन सक्छौं। हामी आँखा बन्द गरी सबै आधुनिक कुराहरूको अनुसरण गर्न चाहदैनौं; तर वर्तमान संसारमा जे जति अति ज्ञानी कुराहरू छन् त्यसको लेखाजोखाले हाम्रो मनोवृतिलाई हामीले जाँच्न सिक्नुपदर्छ।

# गाउँहरू

# II

## *नवीन दुर्बलताहरू*

भावात्मक शब्दहरूमा भन्नु हो भने गाउँ-बस्ती एउटा आदर्श परिवेश, एउटा सानो सुसंगठित समुदाय जुन हरेक स्वभावका शान्त र सन्तोषी मानिसहरूले भरिएका छन्। तथापि वस्तुस्थितिहरू प्राय: धेरै नै भिन्दै छन्। ज्यादा जस्ता गाउँहरू आम्दानीको असमानताले, हुनेखाने र गरीबहरूको अन्तरले, ज्यादै अशिक्षितताले, साधारण अस्वस्थता तथा विरामीको कारणले, औषधि उपचारको कमी र अभावले अनि गाउँभित्र तथा बाहिरबाट हुन सक्ने परिवर्तनको खूबै कम्ति आशाले पीड़ित छन्।

आयको असमानताको कारण बुझ्न त्यति गाह्रो छैन। प्रत्यक्ष रूपमा के देखिन्छ भने व्यक्तिगत उन्नति दखल गरिएको जमीनमाथि निर्भर गर्दछ। अनि प्राय: बेसी भाग जमीन दुइ-चारवटा परिवारहरूले राखेका छन्; धेरै अरू परिवारहरूमा ससाना टुक्रा जमीन मात्र छ, अनि बाँकी जनसंख्या भूमिहीन छन् अनि धनाढ्य घरपटीहरूका अधिनमा काम गरेर जीविका चलाउँछन्।

यस असमान धन वितरणका कारणहरू खोज्न जरूरत छैन। यति भने काफी होला ठूला जातकोमा बेसी जमीन छ अनि साना जातहरूचाहिँ अति निम्न अवस्थामा छन्। सहुलियतले फाइदाहरू जन्माउँछ अनि यो ज्ञानको सूत्र पनि हो जसले अधिपतिलाई आफ्नो अवस्था सबै प्रकारले सुधार्न सहयोग गर्छ। गरीबीले अझ बढ्ता गरीबी, अज्ञानी र असहायपन जन्माउँछ। विप्लव र सुधारहरू हुँदाहुँदै पनि धेरै कालअघिदेखि कुनै समाज साँच्चै नै समान हुन सकेको छैन। संसारका अरू भागहरूमा धेरैजसो समाजहरूले धन-दौलतको खराब वितरणसित संघर्ष गर्नुपर्दछ भने अर्कोतिर यो कुरो व्यक्तिगत उपलब्धिमाथि निर्भर गर्दछ अनि जसभित्र, कमसेकम सिद्धान्तगत हिसाबले, एउटा व्यक्तिको अवस्था बद्लाउने अवसरको इन्कार गरिएको छैन।

भारतमा जातभातलाई समर्थन गर्ने धार्मिक र परम्परागत मान्यताले व्यावहारिक परिवर्तनलाई असम्भव पारिदिएको छ। आधुनिक सभ्यताले उब्जाएका वस्तुहरू र सहुलियतहरू ठूलो जातका मानिसहरूको निम्ति साना जातहरूलाई वशमा राख्ने, प्रयोग गर्ने अनि दुर्व्यवहार गर्ने साधन मात्र भएको छ। एउटा ज्वलन्त उदाहरण हो हरिजनहरूले मन्दिरमा पस्न नपाउने स्वीकृत चलन; अनि शायद अझ ज्यादा अमानवीय कुरो हो पानी चलाउनदेखि बहिष्कार। कैयौं शताब्दीसम्म चलिरहेको यस प्रकारको व्यवहारको प्रतिफल समग्र देशले आज भोग्न परिरहेछ। हिन्दूजात र हरिजनमाझ भएको उदासपूर्ण शत्रुता र उनीहरूमाझ चलिरहेको असम्य हिंसाले सभ्य देशहरूमाझ हामीलाई टाउको ठाड़ो राख्न अप्ठयारो परिरहेछ।

धेरैजस्तो गाउँहरूको मुख्य पेशा खेतीपाती हो। हाम्रो देशमा साधारणत: किसानको जीवन खूबै कठोर छ। प्राय: कमाइखाने जमीन सानो छ अनि बारम्बार सिञ्चन व्यवस्था अति खराब छ। किसानको पानीको एउटै श्रोत हो वर्षाकाल, तसर्थ, एकसालमा एउटै मात्र अन्नबाली उमार्न सक्छन्। यदि उसको आफ्नो जमीन छैन भने तथा उसको जमीन अति सानो छ भने उसले ठूलो जमिन्दारकोमा काम गर्नपर्ने छ, जसमा फसलको केही अंश उसले पाउनेछ। तर यो कार्य अत्यन्त कठिन छ अनि उत्पादित फसलको दाम भने निम्न छ। खाद्य वस्तुको मूल्य निम्न स्तरमा कायम राख्न सरकार चिन्तित रहेको छ; जसको परिमाणस्वरूप किसानले आफ्नो परिश्रमको मोल यति कम मात्रामा पाउँछन् कि उसले आफ्नो जीवनस्तरमा कुनै साक्षात सुधार ल्याउन सक्दैनन्। निश्चय नै देशमा साधारण जीवनस्तरलाई बड़ाउने एउटा उपाय हो जमीनमा काम गर्ने व्यक्तिलाई आफ्नो कामको उचित मोल प्राप्त हुनपर्छ। यो साँचो हो असल माटो र सिंचाइ जस्तो विशेष प्रकारको अनुकूल अवस्थाहरू भएका स्थानहरूमा, जहाँ किसानवर्गले नगदी फसलहरू लगाउँछन्, किसानवर्ग विल्कुल सम्पन्न छन्। पंजाबका किसानहरू, उदाहरणको निम्ति, सफलताको नमूनाको रूपमा उल्लेखनीय छन्। तर सबै पक्षहरूलाई विचारी लिंदा भारतीय किसानको जीवन दु:ख र वञ्चनाले भरिएको छ अनि अहिलेको चल्ती भाषामा भन्नु हो भने उ "गरीबीको चक्रमा" फँसेको छ जसबाट उ मुक्त हुन सक्दैन।

मुख्य गरी उसको गरीबीले नै उसले उपभोग गर्दै गरेको जमीनलाई निम्न स्तरमा झार्न उसलाई बाध्य गराउँछ जसद्वारा गरीबी अवस्था अझ चड़किन्दछ। भात पकाउने र दाउरा बटुल्ने धन्दामा उसले रूखहरू भएको क्षेत्रलाई नाङ्गो बनाइदिन्छ अनि त्यसो हुँदा भू-क्षय विधिले तिव्र गति लिंदछ। उसले गाईवस्तुको गोबर माटोलाई मलिलो बनाउनको सट्टा भात पकाउनको निम्ति प्रयोग गर्छ । उसले कूप र झीलको डिलसम्मै खेती

लाउँदा वर्षाको झरीले कुवामा माटो बगाँउछ जसद्वारा कुवाको सतह बढ्दछ, अत: यसको शक्तिमा कमजोरी आउँदछ। उसले बाख्रा पाल्छ जसले प्रत्येक हरियाली भूमिलाई उजाड़ बनाउँदछ, वृक्षहरूको पुनरूत्पादनलाई रोक्छ अनि माटोलाई अझ बड़ी मात्रामा क्षीण तुल्याउँछ।

देशको केही समुन्नत क्षेत्रहरूमा बीसौं शताब्दीका लक्षणहरू प्रत्यक्ष रूपमा देखिन्छन्। ट्र्याकटरहरू जस्ता आधुनिक कलपूर्जा प्राय: जतातते पाइन्छन् अनि जहाँ बिजुली आइपुगेको छ त्यहाँ बिजुली सञ्चालित पम्प र पानीका कूपहरू पनि स्थापित गरिएका छन्। किसान गोरूगाड़ीको सट्टामा मोटर साइकलद्वारा यात्रा गर्दछ। ती सबै किसानका निम्ति भयंकर उपहार भएका छन्; ती वस्तुहरू उसको निम्ति ठूलो उपहार हुन् कारण यसले उसको कामलाई अघि बढ़ाउन ठूलो सहायता दिन्छ।

तिनीहरूसँगै आएका छन्, अभाग्यवश, अन्य आधुनिक नवीन पद्धतिहरू, जसले छोटो समयको निम्ति किसानलाई सहायता गरे तापनि वरिपरिको परिवेशलाई दीर्घकालीन नोक्सान पुर्‍याउँछ। अघिबाटै बिग्रेको जमीनले एकमात्र रासायनिक मलको प्रयोगले असल फसल दिन सक्छ; ती रासायनिक पदार्थहरू, केहीअघि नदीको सन्दर्भमा बुझेअनुसार सधैं नै नजीकैको नदी तथा जलाशयमा बग्दछन्। अनि फलस्वरूप त्यहाँको पानी प्रदूसित हुँदछ। फेरि एउटै प्रकारको उद्भिद् रोप्ने आधुनिक अभिरूचिले नाशकारी कीटपतंगको जमघट बढ़ाउँछ; जसले रासायनिक पदार्थहरूको व्यापक प्रयोग गराउँछ। चराहरूले ती रासायनिक पदार्थहरूद्वारा उपचार भएका ती मृत कीटपतंगहरूको भोजन गर्दा ती विषालु पदार्थहरू खाद्य-साङलोमा प्रवेश गर्छन्। केही समयपश्चात् ती कीटपतंगमा विषको प्रतिरोध गर्ने शक्ति बढ्दछ तर विष तिनीहरूको शरीरमा नै रहेकोले यसले ती कीटपतंग खाने चराहरूलाई असर पार्दछ। शिकारका चराहरूको संख्या घटेको कारण डी० डी० टी०-को प्रयोगले भएको हो भन्ने कुरो थाहा लागेको छ। दूषित किराहरू खाएको कारणले चरा नमरे तापनि यसले शरीरभित्रको अण्डाखोल (egg shells)-लाई असर पार्दछ, फलस्वरूप ती चराहरूले प्रजनन कार्य गर्न सक्दैनन्। यस्तो स्थितिमा नाशकारी कीटपतंगलाई वशमा राख्ने चराहरूको संख्या घट्दछ, तसर्थ कीटनाशक पदार्थको प्रयोग अझ बढ़ाएर लैजाने आवश्यकता किसानलाई पर्दछ।

हामीले स्वीकार गर्नुपर्छ कि किसानले खेतबारीमा रासायनिक पदार्थहरूको प्रयोगले उत्पन्न गरेको ध्वंसात्मक परिणाम प्रत्यक्ष रूपले जाने पनि अनि आफ्नो पर्यावरणलाई अब बढ़ता आघात नपार्ने कुरोमाथि उ चिन्तित भए पनि, पुरै तौरले ती पदार्थहरूको प्रयोग बन्द गर्न उ समर्थ हुनेछैन। उ पनि फसल चाँड़ो पाउन सके त हुन्थ्यो भन्ने

कुरोमाथि भर पर्दछ, उसले आफ्नो हातमा आइसकेको नाफा जनसाधारणको कल्याणको निम्ति अर्पण गर्न कदापि सक्नेछैन।

यो बारम्बार उल्लेख गरिएको छ कि गाउँले जीवनमा आफ्नो अवस्था सुधार्नु असमर्थ रहेको कारण अंशत: शिक्षाको अभावले हो। स्वतन्त्रतापश्चात् गाउँहरूमा प्राथमिक पाठशालाहरू खोलेर समग्र जनसमुदायलाई शिक्षा दिने महान् चेष्टा गरिएको थियो। यो काम खूबै सफल हुन सकेन। यो थाहा लाग्यो कि सामान्य शिक्षा गाउँका बालक-बालिकाका निम्ति विशेष रूपमा अप्रासङ्गिक ठहरियो। केही वर्ष लगाएर लिएका पाठशाला शिक्षा कि त सम्पूर्ण तौरले अनुपयोगी थियो, कि त यसद्वारा बालक-बालिकालाई धेरै मात्रामा निष्क्रिय बनाएर परम्परागत कौशल र व्यवसायदेखि टाढ़ा राखिन्थ्यो, अनि अरू कुनै पनि कामको निम्ति उनीहरूलाई बेकामे बनाइन्थ्यो।

गाउँले केटा-केटीहरूले पुस्ता-पुस्तासम्म आफ्नै माता-पितालाई हेरेर अनि उनीहरूलाई काममा सघाएर निपुणता प्राप्त गरेका छन्। त्यहाँ दुइ-चारवटा शिल्प छन् जस विषय प्रौड़ अवस्था पुगेपछि ज्ञान आर्जन गर्न सकिन्छ। एउटा बालक एउटा कलासित बढ्दछ - लुगा बुन्ने, कूप खन्ने वा धानको खेती लगाउने। ती सीपहरू पाठशालामा सिकाइँदैनन् अनि एउटा व्यवसाय तथा व्यापारको सट्टामा आफ्नो निर्माणात्मक बहुमूल्य समय पाठशालामा बिताएपछि त्यस बालक परम्परागत हस्तशिल्प क्षेत्रमा कहिले पनि साँच्चीकै निपुण बन्न सक्दैनन्। अर्कोतिर, पाठशालामा सिक्ने ''पुस्तक ज्ञान''-सित गाउँले बालकले काम गर्नपर्ने विशेष क्षेत्रको कुनै सम्बन्ध भएको जस्तो लाग्दैन। छोटकरीमा एउटा गाउँले बालकलाई भावात्मक ज्ञानको आवश्यकता छैन। उसले व्यावहारिक सत्यताहरू जान्नु अनिवार्य छ जुन उसको वरिपरिको परिवेश र परिस्थितिहरूसित सम्बन्धित छन्।

शहरबजारका मानिसले धेरैवटा संस्थान अनि विशेषज्ञहरूबाट सहायता पाउन सक्छन्, जुन एउटा गाउँले व्यक्तिले पाउन सक्दैन। धेरजस्ता गाउँहरूमा उच्च पाठशाला, अखबार, पुस्तकालय, शिक्षक, चिकित्सक, अस्पताल, धाई, अनि वकिलहरू छैनन्— गाउँलेहरूले आफ्नै सुझबुझ लगाएर ती स्थानहरूको आपूर्ति गर्न पर्दछ। सामान्य ज्ञान (commonsense) भन्ने कुरो त्यो हो जुन विद्यालयमा सिकाइँदैन। तर केही मुख्य तत्त्वहरूमाथि आधार गरेर क्लिष्ट अनि व्यावहारिक सोचाइको आदत बसाल्न सकिन्छ। पढ्ने र लेख्ने ज्ञान, हात-हतियार चलाउने व्यावहारिक सक्षमता, पर्यावरणलाई सर्वोत्तम ढंगमा बुझ्ने अनि प्रयोग गर्ने सामर्थ्य, यिनीहरू नै उसको शिक्षाको नभई नहुने अंशहरू हुन्। गाउँवासीहरूको लागि शहरवासीहरूको भन्दा भिन्दै पाठ्यक्रम हुन आवश्यक

छ। शहरहरूमा पाठशाला पाठ्यक्रम भविष्यको उच्च शिक्षालाई मध्य नजर राख्दै रचिएको हुन्छ; गाउँबस्तीमा भने पाठशाला-शिक्षा काम र पर्यावरणसित गाँसिएको हुनुपर्ने हो, अनि जीवनका चुनौतीहरूलाई सामना गर्नु सक्ने हिसाबले छात्रको विकास गर्नुपर्ने हो। शिक्षा र कामबीच त्यहाँ कुनै खण्डन हुनुहुँदैन।

शायद गाउँले शिक्षाको सबैभन्दा मूख्य पक्ष हो पैसा कसरी चलाउनु अनि यसलाई बुझ्नुसम्बन्धी केही जानकारी हुनु। हामीले बुझेअनुसार गाउँले वासिन्दा मालतालको क्रय-विक्रयभन्दा त्यसको साथै सेवाहरूको साटासाट क्रियामा अभ्यस्त भएका छन्। वर्षमा एकपल्ट नगद पैसा कमाउने अनि खर्च गर्ने आदत उसको छ; बिहेबारीमा, धार्मिक कर्मकाण्ड अनि उत्सवहरूमा उसले धेरै पैसा खर्च गर्छ। यस किसिमको खर्च गराईलाई,जसबाट उसलाई कुनै दीर्घकालीन फायदा हुँदैन, उसले आदेशात्मक सम्झन्छ, अनि उ अन्यासै यस्तो परिस्थितिमा ऋणमा डुब्छन्। उसले साहूबाट एकदमै उच्च सूदमा पैसा बाँकी काढ्छन् अनि ऋणबाट मुक्त हुनभन्दाअघि बाँकी काड़ेको कर्जाको धेरै गुणा बेसी रकम साहूलाई तिर्नपरेको कुरो उसले बुझ्न सक्दैन; यथार्थमा कहिलेकाहीं उ मरेपछि उसको छोरा-छोरीले त्यो ऋण चुक्ता गर्नुपर्नेछ अनि यस्तो स्थितिमा उसले साहूको काम गरेर ऋण तिर्न बाध्य बन्दछ; अनि ठीक रूपमा व्याजको हिसाब गर्न असमर्थ रहनुपर्दा उसको जीवनको सबैभन्दा फूर्तिलो र उत्पादनकारी वर्षहरू प्राय: एउटा कमाराको रूपमा उसले बिताइरहेका हुन्छन्।

गाउँको धेरैजस्ता गतिविधिहरू ऋण र ऋणग्रस्ततामाथि निर्भर गर्दछ। दैनिक आवश्यकताहरूको किनबेच पनि उधारोमा नै चल्दछ। गाउँलेले स्थानीय व्यापारीको दोकानबाट उसका जम्मै खाँचोहरू नगद तिरेर होइन तर उधारोमा लान्छन्। त्यसो हुँदा यो स्वाभाविकै हो उसले चीजमालको मोल ज्यादै तिर्नु पर्नेछ; अनि स्वभावत: दोकानले दिएको बाहेक उसको निम्ति अरू विकल्प त्यहाँ छैन। ''दोकानहरू घुमेर चीजमालको दाम बुझ्ने'' अवस्थामा उ छैन। जुन दोकानले उसलाई उधारो दिन सक्छ त्यसबाट उसले चीजमाल लानुपर्दछ, अनि उसले प्रायस: तल्लो स्तर र मिसाइएको चीजमाल मात्र पाउँछ जसको सट्टामा उसको अन्य उपाय हुँदैन। नगद पैसा तिरेर चीजमाल किन्ने आर्थिक व्यवस्था हाम्रो मानिसले गर्न सके उसले सस्तो मूल्यमा उच्चत्तर सामान किन्न सक्ने थियो।

पैसा सञ्चालन गर्न सिकाउने शिक्षाले लापरवाही खर्च गराई र उधारोका प्रतिफलहरू विषय सचेत गराउँछ। अझ मुख्यत: यस शिक्षाले आफ्नो पैसाको सर्वोच्च मूल्य कसरी प्राप्त गर्न सकिन्छ त्यसको अनुमान गर्ने शक्ति मानिसलाई दिन्छ। उदाहरणार्थ मानिलिऊँ,

उसको रोजी छ –(क) आफ्नो छोरा-छोरीलाई शिक्षा दिने, (ख) घरपरिवारको खानापिनको स्तरमा सुधार ल्याउने, (ग) घरलाई अझ साफ-सुग्घर र बस्नेलायकको बनाउने, तथा (घ) कुनै उत्सव मनाउने। उसले कुनचाहिँ छान्ने छन्? नियमानुगत पहिलो विषयप्रति विरलै कसैले चिन्तन गरेका छन्। साफ-सुग्घरको महत्त्व विषय उसलाई कसैले ज्ञात गराएको छैन न त परिवारको स्वास्थ्य र कल्याणको लागि सन्तुलित भोजनको सम्बन्धमा नै ज्ञात गराइएको छ। उसले जुन प्रकारको सन्तुष्ट जीवन हालपर्यन्त बिताएर आइरहेछ त्यस्तै जीवन भविष्यमा पनि उ बिताउन चाहन्छ, तर उत्सव मनाउने काम एउटा बाध्यता भएको छ, जसले उसको प्रचार हुनेछ, अनि नाम फैलिनेछ, अनि त्यसकारणले उक्त कार्य खूबै आकर्षक रोजी भएको कुरो प्रत्यक्ष हुन्छ।

भविष्यको निम्ति अल्प पूँजी निवेश गर्नु, श्रोतहरूको विस्तारै विकास गर्नु गाउँवासीको निम्ति साधारणत: एउटा विरानो कुरा हुन्छ। यो काम एकमात्र बनियाँ तथा व्यापारीले गर्न सक्छ जसले जन्मदेखि नै पैसालाई चिनेका छन् अनि जसले पैसाको व्यवहारको पूर्व ज्ञानको आधारमा पूर्ण विश्वास र सीपसहित यसलाई सञ्चालन गर्न सक्छन्। शायद गाउँको पाठशाला पाठयक्रममा हिसाब किताब (book-keeping) अध्ययनको एउटा मुख्य विषय हुनुपर्दछ। खास विषयहरूमध्ये दिइने शिक्षाको नाममा स्मरणशक्तिको अभ्यास मात्र गरिँदा यस्तो शिक्षा गाउँका केटाहरूको निम्ति फायदाजनक छैन भन्ने कुरोलाई एकपल्ट जोड़सित दोहोऱ्याए अत्युक्ति नहोला। यस्तो शिक्षाले गाउँले युवालाई खालि असन्तुष्ट र अयोग्य बनाउँछ। हरदरमा अहिलेको शिक्षाले कि त गाउँले वासिन्दाको खास आवश्यकताहरूलाई लत्याउदै अर्कै मार्ग लिइरहेको हुन्छ कि त एउटा समान्तर पाठ्यक्रमको रूपमा यो चलिरहेछ, जुनसित उसको वास्ताविक जीवनको कुनै सम्बन्ध छैन। यो मुख्य ठहरिन्छ कि गाउँमा सिकाइने शिक्षाले ज्ञान दिन सक्नुपर्छ जसले उसको जीवनलाई सुधार्छ अनि सम्पूर्ण बनाउँछ।

हामीलाई बारम्बर अचम्भ लाग्छ कि धेरैजस्ता गाउँवासीहरू आफैले भोगेका कठिनाईहरूप्रति औधी निरपेक्ष देखापर्छन्, अनि आफ्नै सुविस्ता बढ़ाउन पनि अनिच्छुक छन्। हामी गाउँवासीहरूका उदासीनता विषय, तिनीहरूको आफ्नै अवस्थाप्रति भएको अनास्था विषय र व्यक्तिगत तहमा आफ्नै निम्ति केही गर्ने उत्साहको अभाव विषय कुरा गरौं। तिनीहरू अप्ठ्यारो बाटाहरूमा हिँड़छन् तर ती बाटाहरूलाई असल रूप दिनप्रति कुनै श्रमानुदान गर्दैनन्; तिनीहरूले भएको कूपलाई अझ गहिरो बनाउने छैनन् न त नयाँ कूप खन्नेछन्; तिनीहरूले सरसफाइको कुनै व्यवस्था गर्नेछैनन्, न त इन्धनको निम्ति वृक्षहरू रोप्नेछन्, यद्यपि ती जम्मैले अपरिमित ढंगमा उनीहरूले भोगेका कष्टहरू

कम गर्ने थिए। यो उदासीनताको मूल कारण हो भाग्यमाथि उनीहरूको विश्वास अनि त्यस विश्वासको ग्रहण; तर आंशिक रूपमा भए तापनि धेरजसोचाहिँ खराब स्वास्थ्यको कारणले हो। एउटा दुर्बल र बिरामी मानिसले भन्दा एउटा बलियो अनि जोशपूर्ण मानिसले भाग्यमाथि धेरै कम्ती निर्भर गर्छन्। भावात्मक दृष्टिले हेर्दा शहरको बीचमा बस्ने मान्छेभन्दा गाउँमा बस्ने मान्छे ज्यादै स्वास्थ्यकर हुनुपर्ने हो। गाउँलेलाई चारैतिर इश्वरीय स्वच्छ वायु प्राप्त छ, उसको आहार सोझै खेतीबारीबाट आउँदछ, नियमित रूपमा उ चाँड़ै सुत्ने अनि उठ्ने गर्दछ, अनि डेस्कमा बन्धित भएर बस्नुको सट्टामा खेतबारीमा कार्यरत रहनुपर्दा उसको शरीरिक कसरत पनि प्रचुर परिमाणमा हुन्छ।

तथापि, यी सबैले उसको स्वास्थलाई कुनै सघाऊ पुऱ्याएको जस्तो लाग्दैन। गाउँ–बस्तीमा आश्चर्यजनक परिमाणमा कमजोरी मानिसहरू साथै रोगीहरू पाइन्छन्। यसको मूल कसूरदार पानीको मुहान हो जुनचाहिँ गाउँ र वरिपरिका सबै ठाउँहरूमा छरपष्ट रहेका मलमूत्रले अति दूषित छ। तसर्थ, यस प्रकारले दूषित भएको पानी पिउनु, त्यसमा भात पकाउनु अनि धुने काम गर्नु र स्वास्थ्य खराब रहनु जस्ता गाउँलेले भोग्नपर्ने कुराहरू कुनै अनौठो देखिँदैनन्। मानिसहरूलाई शौचालयको निम्ति गहिरो खाड़ल खन्ने र त्यसको प्रयोग गर्ने आदत सिकाउनु नै गाउँको पानी व्यवस्था प्रणालीलाई सफा राख्ने पहिलो कदम हो।

भोजनको कुरा उत्तिकै दु:खजनक छ। गाउँवासिन्दाले खराब भोजन खान्छन् भनेको होइन तर चाहिँदो मात्रामा भोजन उसलाई उपलब्ध हुँदैन। गाउँ–बस्तीका आधाँशभन्दा बेसी जनसंख्या कुपोषणका शिकार भएका छन्।

जब त्यहाँ भीषण गरीबीको ज्वाला दन्किरहेको छ, एउटा सन्तुलित तथा पौष्टिक भोजनको महत्त्व विषय प्रचार गर्नु व्यर्थ छ। अझै तुलनात्मक दृष्टिले हुनेखाने मानिसहरू स्वास्थ्यदायक नहुँदा हुँदै पनि कुनै निश्चित भोजन खान छोड्दैनन्। तिनीहरूको भोजनमा चाहिँदो साग–सब्जी र फलहरू हुँदैनन्; दाल मात्र प्रोटिनको श्रोत बन्दछ। सबैभन्दा भयानक अभावहरू ससाना बालकहरूमा पाइन्छन्। मानसिक साथै शारीरिक वृद्धिको निम्ति एउटा बालकलाई अत्यन्त पुष्टिकर खाद्यको आवश्यकता पर्छ। प्रायश: रीतिथीति र परम्पराको कारणले बालक वञ्चित रहन पर्दछ ; एउटा गाउँलेमा साधारणत: मानिसक र भौतिक चासोहरू नभएको कारण यस्तै वञ्चनाको असरले गर्दा हो भन्ने कुरामा अब हाम्रो विश्वास हुन थालेको छ। उसको जीवनका पहिलो दुइ–तीन सालसम्म उसलाई दूध र पातलो खोले दिइन्छ।

गाउँले जनसंख्याको खराब स्वास्थ्य यस्तो किसिमको छ जसको निवारणको लागि चिकित्सक तथा अस्पतालतिर दगर्नु पर्दैन। के आवश्यक छ भने उच्चत्तर स्वास्थ्य विज्ञान, उच्चत्तर सरसफाई अनि केही निरोधक औषधिको ज्ञान। गरीबी र अपौस्टिकताको दुष्ट चक्र साथै रोगलाई फैलाउने अरोचक परिवेश जसबाट बिरामी र उदासीनता उत्पन्न हुन्छ–यी कुरोहरूलाई तोड्न कठिन छ। एउटा असल शुरूआत हुन सक्छ कुनै खुल्ला मैदानलाई शौचालयमा प्रयोग नगर्नको लागि केही चाप सृष्टि गर्नु। गाउँबीचमा तथा बाहिरी सिमानातिर त्यहाँ कुनै खुल्ला वा अन्य किसिमको स्थान छैन जुनचाहिँ शौचालयको निम्ति अनुपयुक्त छ; जसको परिणामस्वरूप गाँऊबस्तीका क्षेत्रहरू दृश्यमय र सुगन्धमय हुनको साटो घृणाका पात्र भएका छन्।

एउटा उत्तम गाउँको, हामी मानिलिन्छौ, लक्षण हो मानव सम्प्रदाय र यसको वरिपरिको जग्गाबीचमा भएको एउटा सन्तुलित क्रिया–प्रतिक्रिया। गत: शताब्दीहरूमा धेरथोर यो प्राप्त भएको थियो। पुस्ता–पुस्तासम्म पर्यावरणको काखमा गाउँले शान्तिमय जीवन बितायो, यसको जनसंख्याको सम्बर्धनको निम्ति जमीनबाट प्रशस्त खाद्य उपलब्ध हुन्थ्यो, अनि त्यहाँ कहिले पर्यावरणलाई रित्तो पार्ने प्रवृत्तिका चाहहरू थिएनन्। तथापि गत: चालिस वर्षभित्रमा यस स्थितिमा परिवर्तन आएको छ। बस गाड़ी हिँड्ने बाटोदेखि दुरत्वका गाउँहरूभन्दा मूल बाटोमा वा त्यसको छेउमा भएका गाउँहरूले परिवर्तनको हावा अझ तीव्र रूपमा अनुभव गरेका छन्। विचार बुद्धिहरू, यस्तो भान हुन्छ, बस गाड़ीबाट यात्रा गर्छन्। गाँउले जीवनको सुस्त अनि उराठलाग्दो वेगमा बस गाड़ीले असन्तुष्टको भावना जन्माउँछ भने अर्कोपट्टि यसले उज्ज्वल प्रकाशहरू, उत्तेजना, चलचित्र अनि असल तनखा भएको नौकरीको चाहना पनि उत्पन्न गराउँछ। विपरीत ढंगमा यसले कतिपय फाइदाहरू ल्याउँछन् –उहिल्यैदेखि चल्दै आएको बन्धनलाई खकुलो पार्ने, बाह्य संसारको उच्चत्तर ज्ञान, उचित शिक्षा–प्रबन्धका सम्भावना अनि उन्नत पौष्टिक आदतहरू हासिल गर्ने।

विशेष गरी गत: पचास वर्षभित्रमा उचित रोगनाशक औषधिको विकास द्रुत गतिमा भएकोले जनसंख्या वृद्धिमा सहयोग पुगेको छ। क्षयरोग, औले जरो, माई तथा प्रसूति जस्ता मारक रोगहरूले अब मानिस मर्दैनन्। त्यसमाथि पहिलो वर्षको उमेरमा धेरै कम्ती बालकहरू मर्दछन्। फलस्वरूप: धेरैजसो गाउँहरूमा आश्चर्यजनक परिमाणमा वासिन्दाहरूको जनसंख्या बड़ेको छ, अनि हरेक व्यक्तिलाई पाल्न सक्ने फसल अब त्यहाँ पाइन्न।

एउटा नयाँ अभावको खूबै स्पष्ट नमूना हो काठपात। अर्ध शताब्दीअघि दाउरा यति प्रचुर मात्रामा पाइन्थ्यो कि यसको दाम तिर्नपरे शायद यो अनौठो लाग्ने कुरा हुन्थ्यो। घरको दैलोमै सुकेका झिक्राहरू तपाईंले बटुल्न सक्नुहुन्थ्यो। धेरजसो गाउँहरूमा सिँयालदायक ठूला वृक्षहरू नियमित रूपमा पाइन्थे। बुढ़ापाका मानिसहरू विशाल वर वा पिपलको वृक्षमुनि भेला हुने चलन थियो। स्वभावत: गाउँको अंश भएको हुनाले वृक्ष थरिहरू त्यसै क्षेत्रमाथि निर्भर रहन्थे; तर वर, पिपल, तितरी, नीम वृक्षहरू बहुमूल्य हुनको साथ शितलदायक र दीर्घायू वृक्षहरू हुन् जुन मरूस्थलबाहेक भारतको प्राय: सबै क्षेत्रहरूमा असल रूपमा सप्रन्छन्। आजकल अधिकतम सिँयाल भएको गाउँ पाउन मुसिक्ल पर्छ, जुन गाउँमा भात पकाउने प्रशस्त दाउरा तथा अन्य खाँचोको निम्ति प्रशस्त काठपात पाउन सकिन्थ्यो। अकस्मात, काठ एउटा अप्राप्य वस्तु भएको कुरो हामी अनुभव गर्छौं। प्राचीनकालमा बीउ-बिजनहरू आफैआफ उम्रन्थे, वृक्षहरूलाई रोप्न पर्दैन थियो। हिज-आज बीउ उम्रन सक्तैन कारण असंख्य मानिस र गाई-गोरूद्वारा गाउँभित्र अनि वरिपरिका जमीन कुल्चि- मिल्चि गरिन्छ, अनि माटो खँदिलो र चाम्रो भएको छ; एउटा साहसिलो बिरूवाले जसोतसो गरेर उम्रने कोशिश गरेको खण्डमा पनि यसलाई फेरि कि टेकिदिन्छ कि त ध्वंस गरिदिन्छ। ती संकटहरूको सामना गरेर पनि यदि एउटा दृड़ शरीर बिरूवाले एउटा सानो रूख हुन सक्यो भने यसलाई कि दाउरा कि त खम्बाको निम्ति तुरन्तै काटिने सम्भावना हुन्छ।

किन हरेक गाउँले आफ्नो आवश्यक काठपात आफैले उत्पादन गर्न सक्दैन? सिद्धान्तगत एउटा गाउँले आवश्यक काठपात सामुहिक तौरले उत्पादन गर्ने कुरा सरल अनि सहज सुनिन्छ। एउटा सानो जमीनको टुक्रामा खालि दुइ-चारवटा ससाना रूखहरू रोप्नुहोस् अनि तिनीहरूलाई एक्लै छोड़िदिनोस्। पाँच वर्षपछि ती रूखहरूले एउटा सानो बाक्लो जङ्गलको रूप धारण गरेको हुनेछ; अनि तपाईंले रूख काट्ने र पुनर्रोपन कार्यको चक्र शुरू गर्न सक्नुहुनेछ। यथार्थमा यो परिकल्पना कठिनताहरूले भरिएको छ। यो कसरी निश्चित गर्नु कि गाई-गोरू तथा झन् खराब मात्रामा बाख्रा बिरूवाहरू भए ठाउँ पस्दैन भनेर? यो कसरी पक्का गर्नु कि पूर्ण रूपले ती वृक्षहरू बढ्नभन्दा अघि तिनीहरूलाई कसैले "चोर्दैन" भनेर। हाम्रो समस्या खास गरेर रोपेर तिनीहरूको हेरचाह गर्नु होइन, समस्या हो कसरी अनुशासन र सहयोगिता पैदा गर्नु जुनबिना हाम्रो काम-कार्वाही सफल हुन सक्दैन।

गाउँको कूपलाई साझा रूपमा सबैले प्रयोग गर्दै आएको प्रथासितै भारतीय गाउँ फस्टाएको छ। कूपमा पानी रहुञ्जेल आफ्नो भाग लिनुमा अनुशासनको त्यति

आवश्यकता हुँदैन, तर यस्तो अवस्थामा हरेकले यो अनुशासनको पालन गर्छन्। हामीले यस्तै प्रकारको मनोवृत्ति बसाल्न जरूरी छ जसले गाउँवासीहरूलाई जङ्गल रोप्न अनि यसको उपज न्यायिक रूपमा बाँड्चुड् गर्न सक्षम बनाउने छ। जे होस्, कृषि कार्य-अन्तर्गत ढाड् भाच्ने परिश्रमको तुलनामा रूखहरू रोप्ने अनि हेरचाह गर्ने काम तुच्छ छ।

निः सन्देह कठिन परिश्रम र अनिश्चित फिर्तासित भारतीय किसान राम्ररी परिचित छन्। यो सत्य कुरो हो, यन्त्रकीकरणको अघि संसारका सबै किसानवर्गले जीमन जोत्थे, बिउ छर्थे अनि फसल उठाउँथे, जस्तो हामी भारतमा आज गर्छौं। अरूको तुलनामा कुन कुरोले हाम्रा किसानवर्गको दशालाई केही ज्यादा कठिन बनाँउछ भने त्यो हो गर्मी। बाहिर सौम्य तथा नातिशीतोष्ण जलवायुमा रहेर काम गर्नु एउटा कुरो हो, टंटलापुर घामको तापमा काम गर्नु धेरै गुणा कठिन छ।

हाम्रो देशका धेरैजसो बाटाहरूलाई गोरूगाड़ी हिंड़ेकोले मात्र बाटाहरू भनिएका छन् अनि ती बाटाहरू नभएको भए हाम्रा हजारौं गाउँहरू अन्य गाउँ-बस्तीदेखि काटिने थिए। हाम्रो गाईवस्तु नै हाम्रो कृषीय अर्थव्यवस्थाको मुख्य सहारा हो भन्ने प्रश्नमा दुइमत छैन। तर एउटा असल चीजको बेशी परिमाणले पनि असुविधा सृष्टि गर्छ, अनि भारतमा आज अत्यधिक गाईवस्तु छन्, विशेष गरी दुर्बल र बिरामी गाईवस्तु छन्। जसरी काठपात आफै पुनर्उत्पादित हुने वस्तु हो भनेर हामी अझ पनि भन्छौं, गाईवस्तुले पनि आफैलाई हेरचाह गर्न सक्छ भन्ने धारणा हाम्रो छ। जब तिनीहरू वृद्ध हुन्छन् अनि काम गर्न असमर्थ हुन्छन्, तब तिनीहरूको हेरचाह हामी गर्न छोड्दछौं। हामी ती पशुहरूलाई जताततै हिंड्न दिन्छौं, जे पायो त्यही खानु दिन्छौं। यसघड़ी ती जन्तुहरू समग्र देशको निम्ति एउटा अभिशाप बन्दछ। कारण मृत्युको अपेक्षा गर्दै जब ती वृद्ध बिमारी पशुहरू कष्ट भोग्दै वरिपरि घुमिहिंड्छन्, तिनीहरूले ठूलो क्षति गरिरहेका हुन्छन् जसको प्रतिफल झट्टै बुझ्न सकिन्न—नमूनाको निम्ति वृक्षहरूको पुनर्उत्पादन क्रियामा रोकावट ल्याउने काम त्यहाँ हुँदछ।

हामीले अघि नै एउटा अनौठो सत्यताको रिपोट गरेका छौं कि जब स्कूलहरूको स्थापना गरी गाउँमा "शिक्षा" ल्याइन्थ्यो, कहिलेकाहीँ त्यस शिक्षाले गाउँलाई अन्तमा अझ दरिद्र बनाउँछ। स्कूलमा राम्रो पढ्ने ज्ञानी बालकहरू नजीकैको महाविद्यालयमा भर्ना लिन्छन्, अनि पछि शहरहरूमा नौकरी खोज्छन्। कम शिक्षितहरू गाउँकै कामहरू गर्न तत्पर रहन्छन्, अर्थात् गाउँले ती व्यक्तिहरूको सेवा र सहायता गुमाउँदछ जसले गाउँको अवस्थालाई सपार्न सक्थे। जसले कृषकीय पद्धतिमा सुधार ल्याउन सक्थे, सामाजिक चेतना जगाउने काममा पथ-पदर्शकको काम गर्न सक्थे तथा जसकोमा

नयाँ गतिविधि शुरू गर्ने चतुरपन र बल पाइन्थ्यो, ती मानिसहरू शहरहरूमा लेखपढ काममा व्यस्त छन् अनि गाउँले जीवन नीरस र कठोर दुवै प्रकारले लगातार चलिरहेछ।

तसर्थ, यो एउटा ठूलो समस्या छ, कारण भारतीय गाउँ वासिन्दाको स्वाभाविक परम्परानुयायीपनले गर्दा एउटा "परदेशी" तथा "नौलो मान्छे"-लाई गाउँको कामकुरोमा अंशग्रहण गर्न अत्यन्त गाह्रो पर्दछ। जसले गाउँलाई भित्रबाट चिन्दछन्, जो गाउँले जीवनका अभिन्न अंश छन्, उसैले मात्र गाउँले वास्तवमा के चाहन्छ सो जान्दछन्; गाउँ-बस्तीले नयाँ विचारधारा ग्रहण गर्ने विषय जनसमूहको प्रतिक्रिया जसले ठम्याउन सक्छन्। यो सत्य हो गाउँमा बसोबासो गर्ने अनि गाउँलेहरूको अवस्थालाई सुधार्न सघाउने केही समाजसेवकहरूले शानदार सफलता प्राप्त गरेका छन्। तर यस्ता कर्ताहरू कम्ती मात्रामा छन् अनि पाउन गाह्रो पर्छ। गाउँ-बस्तीहरूको अवस्थालाई सुधार्ने एउटा उपाय हो-समझदार अनि शिक्षित स्थानीय ठिटोहरू गाउँ फर्केर यसको कार्यकलापमा भाग लिने अनि यसको निम्ति उनीहरूलाई प्रोत्साहन दिने।

धेरै दृष्टिकोणले जवान लोग्ने मानिसहरूले खेतबारी र गाउँलाई त्यागेर शहरमा नोकरी खोज्ने काम एउटा ठूलो खति ठहरिन्छ। जमीनका प्रत्येक टुक्राको आफ्नै विशिष्ट गुणहरू छन्-माटोको स्वभाव, जल सतह, अनि थुप्रै अरू कुराहरू। कुनै क्षेत्रको माटोको विशेष अवस्थालाई बुझ्नु धेरै पुस्ता समय लाग्दछ, अनि हालसालैको पुस्ता पितापूर्खाहरूले प्राप्त गरेका ज्ञान र अनुभवका भण्डार हुन्। गाउँका ठिटाहरू बाहिर जाँदा गाउँलेले यो ज्ञान गुमाउँछ; अनि नयाँ मान्छेले जमीन उपयोग विषय सिक्ने प्रक्रियामा धेरै समय नष्ट गर्छन्।

बहुप्रयोजनीय गोरूगाड़ीको सट्टामा ट्र्याक्टर र जीपगाड़ी ल्याउने कुरोमाथि भारतीय गाउँ-बस्तीमा वृहत्स्तरमा आधुनिकरणको आवश्यकता छैन, तर के चाहिन्छ भने मध्यवर्ती शिल्प विज्ञान (intermediate technology)। हामीलाई बढ़ी र उच्चत्तर ढंगमा बनाइएको गोरूगाड़ी चाहिन्छ; हामीलाई अझ राम्रो कृषकीय हात-हतियारको खाँचो छ, विशाल जलसिंचन परिकल्पनाको ठाउँमा हामीलाई थुप्रै कूप र तलावहरू चाहिएको छ। हावाबाट उर्जा अनि सूर्यबाट ताप पाउने विषय हामीले सिक्नपर्ने छ। माटोको देखभाल र यसलाई अझै राम्ररी बुझ्ने काम गर्नुपर्ने छ। अर्को शब्दमा, हाम्रो देशमा प्रचण्ड परिमाणमा पाइने साधानहरूको उचित उपयोग गर्ने कुरो हामीले जान्नुपर्छ। थोरै सुविधाहरूको सहायताले पनि धेरै देशहरू आफ्नो जीवनस्तरलाई उच्च दर्जामा पुऱ्याउन सफल भएका छन्।

# शहरहरू

# I

## *संस्कृतिहरूको मोजेक*

यदि गाउँचाहिँ मानिस जाति र पर्यावरणमाझ हुने क्रिया–प्रतिक्रियाको केन्द्र स्थान हो भने शहर एउटा स्थान हो जहाँ एउटा मानिस जाति र अर्को मानिस जातिबीच त्यस्तै क्रिया–प्रतिक्रिया चलिरहन्छ। शहरहरू ती स्थानहरूमा देखापर्दछन् जहाँ कुनै विशेष कारणले मानिसहरू जमघट हुने गर्छन्। यो चीजमालको आदन–प्रदानको निम्ति हुन सक्छ तथा रेलकेन्द्र पनि हुन सक्छ जहाँ मालमत्ताहरू उतारिन्छन् वा अर्को बाहनमा लदाइन्छन्। अथवा शहर एउटा विश्वविद्यालय वा मन्दिर जस्तो संस्थाको वरिपरि उप्जन सक्छ, अथवा पहाड़ी स्थानहरूमा वा एउटा रमणीय दृष्टि तथा सुन्दर भूमिको वरिपरि पनि शहरको वृद्धि हुन सक्छ, जहाँ मानिसहरू छुट्टी मनाउन आउँदछन्।

हिउँको डल्लोझैं एउटा सानो चिरस्थायी बसोबासोले अरू वासिन्दाहरूलाई आकर्षण गर्दछ अनि निवासस्थानको रोचकतामाथि निर्भर गर्दै शहरको क्षेत्रफल बढ्दछ, अनि यसको स्वभाव बदलँदै जान्छ। साना–ठूला शहरहरूमा नै महान् सभ्यताहरूको विकास भएको छ। सभ्यता र संस्कृति त्यो फूलको थुङ्गो हो जुन मानिस, विचार, प्रतिभा, पेशा, कला अनि संस्थालयहरूको संयोगद्वारा निक्लेको परिणाम हो—छोटकरीमा, असंख्य मानवीय गतिविधिहरूको एकाअर्काको टक्कराई र आपसी प्रभावको फल हो। एक प्रकारले शहर एउटा विशाल गाउँ जस्तो हो जहाँ धेरै मानिसहरू, धेरै हलचल, गतिविधिहरू इत्यादि पाइन्छन्। तर त्यहाँ दुइवटा कुराहरू हामीले याद राख्नुपर्ने छ। पहिलो, गाउँले जीवन प्राकृतिक संसारमाथि निर्भर गर्दछ अनि जहिले पनि प्रकृतितर्फ नै हाम्रो आँखा दौड़न्दछ - खेतबारीहरू, अन्नबालीहरू, माटोको अवस्था अनि जलवायु। शहरहरूमा पनि निश्चय नै त्यस्तै स्थिति पाइन्छ कारण हामी अन्तमा हाम्रो खाँचो पूर्तिको निम्ति प्राकृतिक सामग्रीहरूमाथि नै निर्भर गर्दछौं; तर शहरमा ती सामग्रीहरूमाथि ज्यादै आश्रित रहनुपरेको सत्यता प्रत्यक्ष रूपले देखिन्न, कारण चीजहरू तयारी अवस्थामा आउँछन्

तर काँचो रूपमा होइन। शहरवासीहरूका निम्ति प्राकृतिक चीज कहाँबाट आए सो कहिले पनि स्पष्ट हुँदैन, यो अज्ञात नै रहन्छ।

दोस्रो कुरो, शहरको आकार र कार्यकलाप गुणात्मक दृष्टिले गाउँको भन्दा भिन्दै हुन्छ। यसको कार्य व्यवस्था गहन मात्र नभएर अझै ज्यादै औपचारिक अनि कानूनी साथै प्रशासनिक हिसाबले ज्यादै मिश्रित ढंगको हुँदछ।

सबैभन्दा स्पष्ट वस्तु घर विषय कुरा गरौं। गाउँमा कसैले पनि आफ्नो लागि झोपड़ी बनाएर त्यहाँ बस्न सक्दछ, तर शहरमा भने यसले समस्या सृजना गर्नेछ। घरहरू ती स्थानहरूमा हुनपर्छ जहाँबाट मूल बाटो सहजै पुग्न सकिन्छ, जहाँ सफाई र पानीको बन्दोबस्त छ, अनि बिजुली पनि लगाइएको छ। [भारतमा यस प्रकारको बन्दोबस्त प्राय: सदैव अप्राप्य रहन्छ जुन कुरो हामी आगामी परिच्छेदमा देख्नेछौं।] यसबाहेक धेरजसो शहरहरूमा घर र बाटोमाझ कति जमीन छोड़ेको हुनुपर्छ त्यस विषय कानून र अन्यन्य नियमावालीहरू लागू गरिएको हुन्छ। पानी र सफाई जस्ता जन सेवाहरूमा निकै पैसा खर्च हुन्छ, अनि नगर अधिकारीले त्यो निश्चय गर्नुपर्दछ कि घरहरू उचित स्थानहरूमा बनाइनेछन् जसबाट पूर्ण फाइदा हामीले पाउन सकौं। यस अतिरिक्त, शहरभित्रको हरेक बाटोमा दृष्टिगत हिसाबले सबै कुरो मिलेको हुनुपर्छ। क्रमिक ढंगमा हो भने एउटा सूट्केसमा तपाईंले धेरै चीजहरू हाल्न सक्नुहुन्छ। त्यसरी नै एउटा शहरमा विशाल संख्यामा मानिसहरू सुविस्तासित बस्न सक्छन् यदि उनीहरू सफा र क्रमबद्ध छन् भने।

नगर परिकल्पना र निमार्णको सबैभन्दा मुख्य अंश हो भूईंमनि बिछ्याइएका पानीका मूल नलीहरू र मैला बगाउने नलीहरू जस्ता आवश्यक ''सुविधाहरू''। यदि तपाईंले एउटा उत्तम ढंगको फोहोर बग्ने प्रणाली र असल जल आपूर्ति प्रबन्ध गर्न सक्नुभए घरहरू बनाउने काम सजिलो हुन्छ। वास्तवमा, सबैभन्दा गरीबवर्गको घर निर्माणको निम्ति एउटा यस्तो जमीन रोजिन्छ जहाँ पानी, जल-निकास र मैला फ्याँक्ने प्रबन्ध उपलब्ध छ, जहाँ गरीब मानिसहरू आफैले घर बनाउन सक्दछन्। ती झोपड़ीहरू जति नै साना र असुविधाजनक भए तापनि उक्त प्रबन्धले हालको स्थितिलाई टार्न सक्थ्यो जहाँ घरहरू हिलो र फोहोरले घेरा लगाएको छ, अनि स्वच्छ जल पाउन कठिन छ। बाटोका छेउतिर शिरदेखि धेरै माथि बिजुलीका तारहरू तनक्याइएका छन्, अनि कहिलेकाहीं रूखहरूसँग जोड़िन पुग्छन् जसका हाँगाहरू तारहरूलाई छुने डरले काटिरहन पर्दछ।

जल प्रणाली, फोहोर फ्याँक्ने व्यवस्था, बिजुली अनि जल-निकास, जसलाई शहरको रक्षाविधान (infrastructure) भनिन्छ, नागरिकहरूका स्वास्थ्य र हितको निम्ति खूबै मुख्य ठहरिन्छन्। तर ती कुराहरूलाई स्पष्ट रूपमा देखिँदैन। एउटा शहरका निम्ति देखिने वस्तुहरू हुन्, चाहे हामालाई मन परोस् वा नपरोस्, यसका घरहरू, बाटाहरू, महलहरू, वृक्षहरू पार्क तथा उद्यानहरू। ती कुराहरूद्वारा नै एउटा दर्शकले अनि शहरवासीले पनि शहरको श्रेष्ठताको अनुमान गर्दछन्।

यो आवश्यक छ कि शहरभित्र हरेक बाटोको रूप नरमाइलो वा लथालिङ्ग हुनुहुँदैन यदि सदैव सो बाटो सुन्दर रहन नसके तापनि। दृष्टिगत खज्मज्ले मानसिक खज्मज् जन्माउन सक्छ अनि शहरभित्र मानिसहरू घचाघच अवस्थामा बस्नपर्ने हुनाले यो जरूरी छ कि प्रत्येक स्थानको शारीरिक रूपरंग मिलेको र रमाइलो हुनुपर्दछ। धेरैवटा देशहरूले उद्यानको घेराको ढाँचा र परिमाण अनि बाटोदेखि छोड्नुपर्ने जीमनको क्षेत्रफललाई नियमित गरेर उक्त विचारलाई अझ युक्तिसंगत टुंगोमा पुऱ्याउँछन्। ती देशहरूले प्रत्येक निमार्ण योजनालाई स्वीकृति दिनभन्दाअघि होशियारसित जाँच गर्छन्, अनौठो वा असुहाउँदो नदेखियोस् भन्ने कुराको निश्चय गर्नको निम्ति।

यथार्थमा संसारमा ज्यादै नाम चलेका शहरहरू ती हुन् जसले आफ्नो वस्तुकलामा गौरव गर्छन् अनि यस कलाको रक्षा गर्छन् साथै विगतका उत्कृष्ट कृतिहरूकै अनुसरणमा अन्य घरहरू पनि बनिनुपर्छ भन्ने कुरोमाथि जोर गर्छन्। हाम्रो देशमा दिल्ली शहर गौरवमय रूप र कारीगड़ीको एउटा प्रत्यक्ष उदाहरण हो जुन गौरव धेरै शताब्दीसम्मै बाँचिरहेको छ। आग्रा शहरको अवस्था ठीक विपरीत छ। यहाँ संसारका सर्वसुन्दर महलहरू पनि छन् तर त्यसबाहेक त्यहाँ न कुनै सौन्दर्य छ न त कुनै कुरो मिलेको छ, यो केवल भद्दा, कुरूप र गुजुमुज्ज घरहरूको थुप्राई मात्र हो।

शहर एउटा शारीरिक आकार भएको टोली हो। यो घर र बाटाहरूले ढाकेको स्थान हो। केही उद्यानहरू पनि त्यहाँ हुन सके भाग्यकै कुरा सम्झिनुपर्छ। तर खास गरी, शहरले त्यहाँ बस्ने मानिसहरूका विचारहरू, इच्छाहरू अनि कार्यकलापहरूको अनि ती कुराहरूले अरूमाथि पारैको प्रभावको प्रतिबिम्ब गर्दछ। ती जम्मै संयुक्त रूपमा संयोगवस तथा योजनागत सम्भव हुन सकोस् वा नसकोस्, एकमात्र शहरी वासिन्दाहरूले शहरलाई चरित्र तथा स्वाभाव दिन सक्छन्। दिल्ली जस्ता केही शहरहरू नौकरशाही र आधिकारिक स्वभावका छन्; मुम्बई शहरमा प्रचण्ड रूपमा व्यापार-वाणिज्यको स्वभाव

पाइन्छ। कुनै शहरहरू औद्योगिक छन्, कुनैमा महाविद्यालय अनि शैक्षिक जीवनले प्रभुत्व जमाएका छन्, अनि कुनै शहरहरू विशाल र शान्त छन् जुन सेवामुक्त मानिसहरूको निम्ति आदर्श ठहरिन्छ। कोही शहरहरूमा मानिसहरू उत्तेजनीय अनि कल्पनाशील छन्, कोही ठाउँहरूमा धर्मपरायण र शान्त, कोहीमा अनि जाँगरिलो अनि कोहीमा निचमारा अनि बेकामका। नागरिकहरूको मूल जोदाहा पेशा र भौगोलिक पक्षहरूसित व्यक्तिगत र जातीय गुणहरू मिलेर नै हरेक शहरलाई आफ्नै प्रकारको व्यक्तित्व र "सहानुभौतिकता" (feel) दिइएको हुन्छ, जुन एउटा खूबै विशिष्ट अनि स्पृश्य गुण मानिन्छ।

सानो अवस्थाबाट बढ्ने शहरहरूसित विमषपूर्वक अनि परिकल्पित ढंगमा निर्माण गरिएका चन्दिगरह (चण्डीगड़) जस्ता केही शहरहरू छन्। यहाँ सरकारले एउटा नयाँ राजधानी एउटा विशेष स्थानमा बनाउने निर्णय लिँदछ अनि त्यसपछि नगर योजनाकारहरू विशेष उद्देश्यको पूर्ति गर्ने सुहाउँदो रूप तयार गर्न खटाइन्छन्।

एउटा सुपरिकल्पित शहर होशियारसित केही ससाना क्षेत्रहरूमा विभक्त गरिएको हुन्छ। अर्थात्, त्यहाँ केही स्थानहरू उद्योगका निम्ति छुट्याएका हुन्छन्, केही दोकानहरूका लागि, केही व्यापार कार्यालयका निम्ति अनि केही बस्ने घरहरूका निम्ति। आवासीय स्थलमा कसैले पनि जमीन किन्न पाउँदैनन् अनि उद्योग शुरू गर्न सक्दैनन्। वास्तवमा सुआयोजित शहरहरूमा औद्योगिक स्थलहरू सीमांकन गर्दा हावा बहने दिशाहरू सावधानसहित अध्ययन गरिन्छन्, जसमा धुवाँ र गन्ध जन इलाकातिर बहन नसकोस्।

बिस्तारै अहिलेका आकारमा वृद्धि भएको पुरानो शहर र एउटा शुरूदेखि नै विकास भएको शहरमाझको अन्तर यसका बाटाहरूबाट बुझ्न सकिन्छ। पुरानो "प्राकृतिक" शहरका बाटाहरू बटारिएका अनि घुमौरा छन् जसमध्ये कोही फराकिलो अनि कोही साँघुरा छन्। यसको कारण ती बाटाहरू पहिले खेतबारी धाउनका लागि शायद बनाइएका थिए। जब शहर बाहिरतिर फैलिन थाल्यो, अनि प्रत्येक कृषिभूमि शहरको निम्ति बिक्री गरिन थालियो, यसको सिमाना बाटोमा परिणत भयो। एउटा नयाँ शहरमा जहाँ पहिले जम्मै जमीन प्राप्त गरिसकेर नगर योजना तयारी गरियो, बाटाहरू सोझा छन् अनि एकअर्कामा समकोण बनाउँछन्। बाटोको मानचित्र वर्गक्षेत्र कोरिएको कागजझैं देखिन्छ। यो क्रियाशील र युक्तिसंगत हुँदाहुँदै पनि यसले केही मात्रामा सुबिस्ता र मनोहरताको भाव गुमाएको हुन्छ। हरेक बाटो एउटै किसिमको छ, त्यहाँ धेरै कम्ती स्मरणीय सीमाचिह्न छन्, एकपल्ट बिर्सेपछि तथा यदि तपाईंले सड़कचिह्न पढ्न असमर्थ

हुनुभयो भने तपाईंलाई आफ्नो बाटो पाउनु निकै गाह्रो पर्नेछ। पुरानो ढंगको बाटो प्रणालीमा यस्तो असुविधा हुँदैन, कारण यहाँ हरेक बाटोको आफ्नै प्रकारको स्पष्ट रूप हुन्छ।

चाहे ती बाटाहरू सोझो होस् वा घुमाउरा, फराकिलो वा साँघुरा, पुरानो वा नयाँ बाटाहरू शहरका धमनीहरू (vital arteries) हुन्। हामीले भनिसकेका छौं, शहर शहर नै हो कारण यहाँ मानिसहरू आफ्ना विचारहरू आदान-प्रदान गर्न समर्थ हुन्छन्। मानिसहरू कार्यस्थलमा जानैपर्‍यो अनि त्यसपछि घर फर्कनु नै पर्‍यो; बालकहरू विद्यालय र महाविद्यालयमा जानैपर्दछ। सर-सामान किन्न, मानिसहरूलाई भेट्न अनि मनोरञ्जनको निम्ति तपाईं शहरको विभिन्न ठाउँहरूमा घुम्नैपर्‍यो। जतिञ्जेल बाटाहरू कार्यशील, संकटमुक्त र सुविस्ताजनक छन् त्यतिसम्म शहर सफल भएको बुझिन्छ।

जब हामी बाटाहरू विषय कुरा गर्छौं, यसमा निश्चय नै यातायातका साधन समावेश छन्। केही आधुनिक शहरहरू यति साना छन् कि मानिसहरू बाटोको वारपार हिँड्न सक्दैनन्, अनि फलत: त्यहाँ बसहरू, रेलगाड़ीहरू, ट्रामहरू, घोड़ागाड़ीहरू, मोटर वाहन र अटोरिक्साहरू छैनन् भने मानिसहरू एउटा ठाउँदेखि अर्कोमा जान सक्दैनन्। शहर निगमको कर्तव्य बाटाहरू बनाउनु अनि हेरचाह गर्नु हो भने उचित यातायात सेवाहरूको व्यबस्था मिलाउने कर्तव्य पनि यसैको हो। एउटा शहर जहाँ मानिसहरू सहजसित हिँड़डूल गर्न सक्दैनन्, यस्तो शहरले खास कर्तव्य उचित रूपमा गरेको हुँदैन।

यद्यपि बाटाहरूको आयोजना र हेरचाह गर्ने जिम्मावार शहर अधिकारीहरूको हो, बाटाहरू र यातायात अनुशासित ढंगमा चलाउने कार्यमा नागरिकहरूको पनि उत्तरदायित्व रहेको हुन्छ। यसलाई हामी बाटाहरूको ''सफ्टवेर'' भन्न सक्छौं— यातायातका नियम र विधानहरू, गाड़ी चलाउने स्तर, पैदल हिँड़ने यात्री र साइकिल चढ्ने मान्छेको व्यवहार। बाटाहरू अति नै राम्रो भए तापनि जबसम्म ती बाटाहरूको प्रयोगकर्ताहरूले अरूलाई ध्यानमा राखेर व्यवहार गर्दैनन् तबसम्म ती बाटाहरूले आफ्नो प्रभावशालिता गुमाउनेछन्। प्रत्येक दिन लण्डन शहरभित्र द्रुत गतिमा अनि दक्षतापूर्वक हिँड़डूल गर्ने मानिसहरूको संख्या अति विशाल छ; अनि धेरजसो कार्य क्षमता ती सेवाहरू उपयोग गर्ने मानिसहरूको अनुशासित चालचलनबाट व्युत्पन्न हुँदछ।

अरू थरिका सञ्चार-दूरभाष, रेडियो, दुरदर्शन, खबरकागज अनि पत्रिकाहरू पनि शहरहरूमा उपलब्ध छन् अनि शहरवासिन्दालाई समाचार र घटनाहरूसित सम्बन्धित रहेको कुरो यस सञ्चारले दिदँछ, जुन गाउँबस्तीमा पाइन्न। धेरजसो देशहरूमा गाउँबस्तीमा पनि दूरभाष पुगिसकेको छ; भारतमा भने यो शहरदेखि केही बाहिरका

ठाउँहरूमा मात्र पुगेको छ, अनि यसलाई एउटा संकटकालमा चलाइने वस्तुको रूपमा मात्र मानिन्छ। गाउँबस्तीमा हुनुपर्ने आकाशवाणी र समाचार-पत्रहरूको ज्यादै आवश्यकता शहरहरूमा भएको देखिन्छ। यसको कारण हुन सक्छ एकाबिहान शहर वासिन्दाकोमा खबरकागज पुग्दछ, जब एउटा गाउँबस्तीका वासिन्दाले खबरकागज प्राप्त गर्नुको निम्ति २४ घण्टासम्म अपेक्षा गर्नपर्दछ, यदि उ चन्दा दिएर ग्राहक बनेको छ भने। शहरवासिन्दाले समाचार सुन्ने, त्यसमाथि चर्चा गर्ने अनि चारैतिरबाट मन्तब्य बटुल्ने अवसर पनि पाउँदछ, कारण कुनै पनि दिनको समाचार लिएर बाटामा, बजारमा, कार्यालयमा, रेल र बसगाड़ीमा कुरा गरिन्छ। कहिलेकाहीँ खबर कागजमा समाचार मुद्रित हुनुभन्दाअघि शहरभरि समाचार फैलिसकेको हुन्छ। स्वभावत: यो कुनै आश्चर्यको कुरो होइन कि शहरवासिन्दाले आफूलाई ''सबै कुरोसित अवगत'' रहेको अनि बाह्य संसारसित ''चलिरहेको'' देख्न चाहन्छ; शहरदेखि टाढ़ा बस्नपरे उसले आफैलाई हराएको तथा वञ्चित भएको अनुभव गर्दछ।

एक प्रकारले गाउँहरूको तुलनामा प्रायै शहरहरू ''अनुकूल'' ठहरिन्छन्। शहर वासिन्दाहरूले ठान्छन् कि कलमा पानी पाउनु, घरहरूमा बिजुली पाउनु, उचित अवस्थाका हिँड़ने बाटाहरू पाउनु, जरूरत परेको खण्डमा प्रहरी सुरक्षा पाउनु उनीहरूको अधिकार हो। गाउँले वासिन्दाले न ती कुराहरूको आशा गर्छन् न त तिनीहरूलाई ती प्राप्य छन्।

धेरैजस्तो शहरवासिन्दाहरू शहरभित्र प्राप्य मनोरञ्जनमाथि स्थूल रूपमा निर्भर रहन्छन्। हरेक साँझ उनीहरूलाई व्यस्त राख्ने चलचित्र, नाँचघर, संगीत-जलसा (concert), भाषण, सभा अनि मिश्रित कार्यक्रमहरू प्रशस्त मात्रामा छन्। पैसावालाहरूका लागि होटेल र रेस्टोरेन्टहरू छन्, अथवा यदि तपाईं पैसा खर्च गर्नु चाहनुहुन्न भने दोकानमा राखिएका चीजहरू मात्र घुम्दै हेर्नु सक्नुहुन्छ। धन भएको वा धन नभएको अनि गरीब मानिसहरूमाझ प्रत्येक तहमा चहलपहल र कार्यकलाप शहरमा चलिरहन्छ जुन किसिमको गतिविधि गाउँहरूमा पाइन्न।

एउटा असंगत (paradox) कुरो के छ भने सबै प्रकारका सञ्चार सुविस्ताहरू हुँदाहुँदै पनि शहरभित्र कुनै व्यक्ति अनाम रहन सक्छ जुन कुरो गाउँमा असम्भव बन्दछ। शहर यति विशाल छ कि व्यक्तिगत कामकुरोमा खोजी निन्दा गरी बस्न सकिँदैन, अनि स्वतन्त्र रूपमा तपाईंले आफ्नो स्वेच्छअनुसार काम गर्नु सक्नुहुन्छ, तपाईंको आफन्तसितको गाँठो बन्धनको सट्टामा तपाईंले आफ्नै मित्रहरू चुन्न सक्नुहुन्छ। शहरले साँच्ची नै तपाईंले रोजेको कुरो दिएको जस्तो लाग्छ। तपाईं हूलमा वा एक्लै बस्न सक्नुहुन्छ; तपाईं थुप्रै काम कुरोमा संलग्न रहन सक्नुहुन्छ, तथा एकदमै एक्लो जीवन बिताउन सक्नुहुन्छ।

तपाईंले आफ्नै रहड्हरू, चाखहरू अनि आमोद-प्रमोदहरू छान्नु सक्नुहुन्छ। कमसेकम भावात्मक दृष्टिले कार्य छानबीनको छनौट तथा कमसेकम जीवन निर्वाह गर्ने उपायको रोजी तपाईंसित छ। जहाँ यति असंख्य मानिसहरू अनि यतिविध्न संस्थानहरू र गतिविधिहरू छन्, एउटा बलवान् अनि चतुर मानिसले जीवन निर्वाहको उपाय आविष्कार गर्ने मौका सदैव त्यहाँ निहित हुन्छ। शहरको शिलास्तर (pavements) सुनले छाएको छ भन्ने कुरोमा पूर्ण सत्यता लुकेको छ।

अन्तिम विश्लेषणमा एउटा शहर रमाइलो हुनु वा नरमाइलो हुनु शहर वासिन्दाहरूकै आचार-व्यवहारमाथि निर्भर गर्छ। बाटा-घाटातिर के मानिसहरू एकाअर्कामा नम्रसित बोल्छन्? के उनीहरूले बस बिसौनी र रेल अड्डानमा अनि सिनेमा टिकटको लागि सुक्रम (orderly) ताँती बनाउँछन्? के मोटरगाड़ी चालकहरूले यातायात नियमावाली उचित रूपमा पालन गर्छन्? के तपाईंले दोकानदारलाई विश्वास गर्नुहुन्छ जब उसले एउटा चीजको मोल तपाईंलाई बताउँछ? के आधा रातमा शहरको बाटोमा एक्लै हिँड्नुपर्दा तपाईं आफूलाई सुरक्षित सम्झनुहुन्छ? यी सबै प्रश्नहरूको उत्तरहरूले शहरको कानूनी व्यवस्थाको अवस्था जाहेर गर्दछ।

असल नागरिक बन्नुको निम्ति मानिसहरूले केही व्यक्तिगत फुर्फुर अनि आक्रमणशीलता त्याग्न सिक्नुपर्नेछ जसमा अरू मानिसहरूको मन्तव्यलाई पनि अटाउन सकौं। घर बनाउने काममा एउटा असल कारीगड् घर स्वयंलगायत शहरको बाटो र स्थानीय अवस्थितिको जम्मै छौँटकाँटसित जाग्रत रहन्छ। त्यस्तै प्रकारले एउटा सर्वश्रेष्ठ नागरिक उनी हुन् जसले बहुसंख्याको सुविस्ताको निम्ति आफ्ना इच्छाहरूलाई केही मात्रामा निम्न पदस्थ गर्दछन्।

विचारशील हुनु, एउटा चक्काको उपकारी दाँतँ बन्ने योग्यता हुनु, अरूको अधिकारहरूमाथि सदैव सचेत रहनु-यी कुराहरूको पालनद्वारा एउटा असल शहरी जनमानसको सृजना गर्न सकिन्छ। गाउँले जीवनको चापहरूबाट मुक्त भएकोले अनि शहरको आफ्नै तुलनीय स्वतन्त्रता र गुमनामतासित संलग्न रहेकोले वास्तवमा शहरले त्यहाँ बस्नेहरूमाथि विभिन्न किसिमका प्रतिबन्धहरू लगाएको अनि ती वासिन्दाहरूबाट अधिकतम आत्मसंयम आशा गरिएको कुरोलाई सहजै भुल्न सक्छौं। कारण एउटा शहरले यथोचित हिसाबले त्यस समय मात्र काम गर्न सक्छ जब यसका नागरिकहरू आफ्नै व्यवहारमाथि चेवा गर्न तत्पर रहन्छन्। अत्यन्त शक्तिशाली प्रहरी बलले पनि जनमानसलाई अनुशाशित तथा कानून अधीनस्थ हुन बाध्य गराउन सक्दैन यदि जसमानस स्वयंले यस कुरोलाई चाहदैनन् भने। भाग्यवश सबै कुराको विचार गर्दा अनुशासनकै पक्षमा मानव स्वभाव ढल्केको पाइन्छ।

# शहरहरू

## II

## *नगरीय उत्पातहरू*

१९४५ सालसम्म तपाईंले हाम्रो कुनै पनि ठूलो वा सानो शहरमा एउटा अति मनोहर जीवन बिताउन सक्नुहुन्थ्यो, तपाईंको आयस्ता यदि अल्प परिमाणकै भए तापनि। आजकल धनवानलाई पनि धेरजसो ठूला शहरहरूमा सुबिस्तासित बस्न गाह्रो पर्दछ। किन? त्यहाँ के भएको छ? निश्चय नै यति भीषण ''उन्नति'' र ''विकास'' -ले जीवनस्तरमा सुधार ल्याउनपर्ने थियो, विकृति होइन। किन तब हामीले ती बितेका दिनहरूको सम्झना गरिरहन्छौं जुन समय हामी एउटा विशाल शहरको बीचमा बस्न सक्थ्यौं र पनि एउटा फूलबारी हामीसित रहन्थ्यो, हाम्रोमा धोएको लुगा झुण्डयाउने अनि पापर र मसलाहरू सुकाउने ठाउँ हुन्थ्यो; हामीले हाम्रा आफन्तहरूको कुनै तनाउ बेगर स्वागत गर्न सक्थ्यौं; हामी कुनै ठाउँमा, कहीं पनि आफ्नै समयमा पुग्न सक्थ्यौं; अनि हामी राती डररहित हिंड्डूल गर्न सक्थ्यौं।

ती प्रश्नहरूको छोटो अनि सरल उत्तर हो अत्याधिक जनसंख्या। भारतको जनसंख्या १९३० सालमा जति थियो त्यसको प्राय: साँढ़े दुइगुणा अहिले भएको छ - १९३० सालमा एउटा घरमा बस्ने छ: जना मानिसहरू थिए भने त्यहाँ अहिले १५ जना भएका छन्; जहाँ कुनै एउटा बाटोमा कुनै पनि समय १०० जना मानिसहरू हिंड्थे भने त्यहाँ अहिले २५० जनाभन्दा बेसी मानिसहरू हिंड्छन्। वास्तवमा हाम्रा शहरहरू विषय कुरा गर्नु हो भने जनसंख्या ठीक दोबर मात्र नभएर धेरै गुणा बढ़िसकेको छ; कारण शहरको आफ्नै जनसंख्या वृद्धिमाथि गाउँबस्तीबाट विशाल परिमाणमा लगातार अन्तर्प्रवेश भइरहेछ। धेरजसो ठाउँहरूमा कृषि व्यवसाय एउटा कठिन र फाइदाहीन पेशा भएको छ, अनि शहरको उज्ज्वल बत्तीहरूको तुलनामा गाउँले जीवन उत्तेजनाहीन छ। एउटा मानिसको अधिनमा कमाइखाने विशाल जमीन छैन भने उसले सोच्न सक्छ कि शहरमा नै उसको निम्ति समुन्नतिका मौकाहरू ज्यादा छन् भनेर। चाहे एउटा कारिन्दा व्यवसाय पाउनेसम्मको शिक्षा लिएको मानिस अथवा बौद्धिक ज्ञान नभएको अशिक्षित व्यक्ति नै

उ किन नहोस्, शहरीया जीवनमा नै उच्चत्तर मौकाहरू लुकेका छन् भन्ने कुरोमा उसको पूर्ण विश्वास छ। अनि, जतिसम्म नगदी पारिश्रमिकको सवाल उठ्छ, सम्भवत: उसको विचार ठीक ठहरिन्छ।

ती शहरहरू, मानिसहरूको खचाखचले "फुटिरहेछन्"। तिनीहरू नयाँ आगन्तुकहरूलाई अटाउनका निम्ति बाहिरफेर चारै दिशाहरूमा फैलिन्छन्। गृह उपनिवेशहरू (housing colonies) अनि "गृह रेखाचित्रहरू" (layouts) घर बनाउन सक्ने मानिसहरूलाई अटाउनको निम्ति बाह्य परिधिमा निरन्तर थपिन्दै जान्छन्। गृह निर्माण कार्यले बसाइँ सरूवाहरूको अन्तर्प्रवेश विधिमा प्रोत्साहन दिन्छ। वरिपरिका गाउँबस्तीका श्रमिकहरू प्रलोभित भएर गृहनिर्माण कार्यमा आउँदछन्। यो अल्पकालिक श्रमिक दल गाउँमा कहिले पनि फर्किँदैनन् तर पानी, नाली तथा फोहोर फ्याँक्ने बन्दोबस्त नभएको कुनै बाँझो जमीनमा टिनको झोपड़ी बनाएर त्यहाँ बसोबासो गर्छन्। ती झोपड़ीहरूलाई अनेक प्रकारले "बस्तीहरू" तथा "झोप्रा पट्टिहरू" भनिन्छ अनि शहरीया जीवनकै एउटा अभिन्न अंश ठानिन्छ।

हामी शहर योजनाकारको दूर्दशा बुझ्न सक्छौं यदि एउटा घरेलु परिवारसित भएको मेललाई अवलोकन गर्‍यौं भने। मानिलिउँ, त्यहाँ दुइवटा सुत्ने कोठा भएको घर छ। त्यसका वासिन्दाहरू छन् एउटा मान्छे, उसकी पत्नी अनि दुइ बालकहरू। दुइ बालकहरू एउटा कोठामा अनि आमा-बाबु अर्को कोठामा सुत्छन्, अनि त्यहाँ अर्को केही विशाल कोठा छ जुन बसेर बातचीत गर्नु, भोजन गर्नु अनि अतिथिहरूको स्वागत गर्नको लागि प्रयोग गरिन्छ। हरेक कुरो मिलेको छ। बालकहरू प्रत्येकको आफ्नो ओछ्यान र डेस्क छ जहाँ तिनीहरू लेखपढ़ गर्न सक्छन्। तिनीहरूले आफ्ना पुस्तकहरू, खेल्ने सामग्रीहरू अनि लुगाफाटाहरू आलमारी वा दराजमा राम्ररी राख्छन्। मानिलिउँ, यस परिवारमा छ: जना आफन्तहरू सधैंको निम्ति बस्न आए। घर-व्यवस्था मिलाउन अब असम्भव हुँदछ। नुहाउने कोठाको ज्यादै प्रयोग हुन्छ, स्नानको निम्ति तपाईंले धेरै समय पर्खनुपर्छ। ती आफन्तहरू जहीं पनि सुत्न सक्छन्; हरेक व्यक्तिको चीजमाल राख्ने प्रशस्त जग्गा त्यहाँ छैन, चीजमाल जतातत‌ै थुप्रिन्दछ, कुनै चीज पनि ठीक ठाउँमा राख्न सकिँदैन, घरको साफ-सुग्घर पनि ठीकसित गर्नु सकिँदैन। चीजहरू अब बिग्रन थाल्छन्, घरको मरम्मत तथा हेरचाह गर्न सकिँदैन। घरका मानिसहरू एकअर्कामा रिसाउन थाल्छन्, मैला र लथालिङ्गको निम्ति एउटाले अर्कोलाई दोष्याउँछन्। घरपरिवारमाझ भएको सम्बन्धमा तनाउ आउँछ। तसर्थ, घरभित्रको व्यावहारिक विशृङ्खलतासित अनुपयुक्त मिजास पनि त्यहाँ सृष्टि हुन्छ। चार मानिसको एक समयको सुन्दर, शान्तमय परिवार अब दश मानिसको अव्यवस्थित साथै तनावपूर्ण परिवार भएको छ।

हाम्रा शहरहरूको दुर्दशा यही भएको छ। एउटा निश्चित जनसंख्यालाई पुग्न सक्ने सहुलियत र व्यवस्थाहरू मिलाएर बनाइएको शहरहरूले आज धेरै गुणा बेसी जनसंख्याको हेरचाह गर्नपरेको छ।

यथोचित प्रहरी सुरक्षा पाइने प्रसंगमा हाम्रो जस्तै संसारभरि धेरै शहरहरूको स्तर हालमा घटेको छ। तर उर्जा, पानी र सरसफाइको अपर्याप्ताले एउटा समस्याको रूप लिएजस्तो छ जसको भुक्तभोगी अरू देशहरूभन्दा बेसी हामी भएका छौं। शहरभित्र उपलब्ध हुनुपर्ने हरेक वस्तु जुन एउटा व्यक्तिले आफ्नो अधिकार सम्झन्छ, सो वस्तु कि कम्ती परिमाणमा प्राप्य छ कि त पुरै अप्राप्य छ।

घर निर्माणको अवस्थालाई लिएर कुरा शुरू गरौं। दुइ–चार वर्षअघि शहरहरूमा पनि जताततै फुलबारी भएका घरहरू तथा कम्पाउण्ड पाइन्थ्यो। आज यस्ता जम्मै घरहरू नाश गरिएका छन् अनि तिनीहरूको सट्टामा निवासका ब्लकहरू बनाइएका छन्। दश, बीस वा पचास परिवारहरूले पनि त्यो ठाउँ ओगट्न सक्छन् जहाँ पहिले केवल एक परिवार थिए। यसको अर्थ हुन्छ उनीहरूलाई दश, बीस वा पचास गुणा बेसी पानीको जरूरत हुनेछ; त्यहाँ दशदेखि पचास गुणा बेसी मैला वा फोहोर हटाउनपर्ने छ; अघाडि घर भएको बाटोमा हिंड्ने मानिस, सानो गाड़ी, स्कूटर र साइकलहरूको संख्या त्यही परिमाणमा बढ़ेको छ। अनि यो स्थिति एउटै घरबाट उपजेको छ; त्यही नतीजा त्यो बाटोस्थित अरू घरहरूको पनि हुनेछ, यसकारण घचाघची, कोलाहल अनि धूलो–मैलोको वृद्धिको कल्पना तपाईंले गर्नोस्।

एउटा धर्षणबाट चन्दीगरह जस्तो नयाँ शहर निमार्ण गर्नु खूबै महँगो कारबार हुनेछ। सबै ''मूलभूत कुरोहरू'', सहुलियतहरू–सबै कुरोहरू, जसले हामीले बुझेअनुसार एउटा शहरलाई शहर बनाउँदछ, सरकारद्वारा बन्दोबस्त भएको हुनुपर्छ। एउटा क्षेत्र जहाँ लाखौं मानिसहरू बस्न, काम गर्न, खेल्न, सिक्न, कारबार गर्नु सक्छन्, अनि शासित रहन्छन्, यसको परिकल्पना गर्नु एउटा विशाल कार्य छ।

नयाँ शहर निर्माण गर्ने काम शुरू गर्नमा सरकारको अनिच्छा भएको कुरो हामीले सहजै बुझ्न सक्छौं। जनसंख्यालाई वर्तमान शहरहरूमा थुप्रिन दिने अनि ती शहरहरू चारैतिर फैँजिन दिनु खूबै सस्तो र सहज काम हो। कम्ती आयस्ता भएका मानिसहरूलाई कुनै खाली जमीनको टुक्रामा बस्न दिनु सस्तो पर्दछ, जहाँ टिन र बोराका टुक्राहरू र नरिवल जातीय वृक्षको पातले झोपड़ीहरू बनिन्छन्, गाउँमा झैं पानी, नाल तथा मैला फ्याँक्ने व्यवस्थारहित अवस्थामा मानिसहरू बस्छन्। अभाग्यवस, हाम्रो जलवायु यस प्रकारको अर्द्ध–बाह्य (semi-outdoor) रहनसहनको निम्ति

रोचक छ। चिसो जलवायु सुहाउँदो हरेक व्यक्तिको निम्ति मुनासीब ढंगमा घर बनाउने प्रबन्ध हामीले गर्नपर्ने थियो।

हाम्रा धेरैजसो नगरीय समस्याहरूको कारण हो गाउँकै रहन–सहन र आचार–व्यवहार शहरमा पनि मानिसहरूले गरेको सत्यता, स्वास्थ्यसम्बन्धी हाम्रा बानीहरू, सड्क र सार्वजनिक ठाउँहरूमा हामीले देखाएका व्यवहारहरू, हाम्रो आफ्नै कोलाहलकारी र अव्यवस्थित घरेलु जीवन – अनुशासित शहरिया जीवनको निम्ति उपयुक्त छैनन्।

शहरभित्र अरूका अधिकारहरू विषय तपाईं सदैव सचेत रहनपर्छ, अर्थात् तपाईं एक्लै रहेको भन्दा भिन्दै प्रकारले यहाँ चल्नुपर्छ। खेतबारीमा एउटा मान्छेले आफ्नै इच्छाअनुसार उसले सक्ने चर्को स्वरमा गीत गाउन सक्दछ, शहरको बाटोमा हिँड्ने मान्छेले होशियार भएर धीमा स्वरमा बोल्नु पर्दछ। गाउँबस्तीमा एउटा सानो जनसमूह भेला भएर दिन बिताउन सक्छन्, अनि यसले कसैलाई बिथोल्दैन। शहरको शिलास्तरमा दुइ साथीहरूको भेटघाट र अभिनन्दनको आदान–प्रदानले अरू पदयात्रीहरूलाई यथेष्ट झिंझो गराउन सक्दछ। एउटा मान्छेले खेतबारीमा थुक्न सक्छ अनि यसले जमीनलाई अझ मलिलो मात्र बनाउँछ, तर उसले सो काम शहरको बाटोमा गरे मानिसहरू घृणा अनुभव गर्छन् साथै दु:खित हुन्छन्। चाड्बाड्, उत्सव अनि कर्मकाण्डहरू हल्ला गर्दै गाउँमा मनाउन सकिन्छ, अनि हरेकले तीबाट आनन्द लिन्छन्। शहरमा हल्ला र मान्छेको घचारोले झिंझो पैदा गर्छ जुन छेउका मानिसहरूले मनपराउँदैनन्। हामीले यो पनि याद राख्नुपर्छ कि जब एउटा गाउँले शहर पस्छ, उसले उसित उसको अपरिवर्तनीय गाउँका आद्दतहरू पनि बोकेर आएका हुन्छन्। यसकारण हाम्रो शहरिया जनताले कहिले पनि शहरिया स्वभाव आर्जन गर्न सक्दैनन् जुन स्वभावले वासिन्दाहरूलाई शहरिया जीवनको निम्ति योग्य बनाउन सक्थ्यो।

साधारण नागरिकले शहरिया जीवन सुहाउँदो आफ्नो व्यवहार मिलाउन सक्दैन भने बहु तले निवासहरूले बनेको ठूलो समूहमा बस्नुपर्दा उसलाई मिलेर बस्नु अझ कठिन पर्छ। बहु तले निवासहरूको समूह एउटा विशाल संयुक्त परिवारसित तुलनीय छ। कुनै एक भाड्ादारको कार्यकलापले अरू सबैलाई असर र असुविस्ता पार्न सक्छ। चर्को आवाजको रेडियोले, कोलाहलकारी केटाकेटीहरूले अनि झगड़े प्रौढ़ मानिसहरूको कारणले अरू भाड्ादारहरूको जीवन असह्य बनाउन सक्छ। खिड्कीबाट मैला फ्याँकने, तल्लो तलामा लाग्ने गरी मैला पानी फ्याँक्ने, अघाड्िको बरण्डामा लुगा झुण्ड्याउने आद्दतहरू जस्ता कुराहरूले अरू भाड्ादारहलाई मात्र होइन तर बाटो हिँड्नेहरूलाई

पनि झोक्याउछ। एउटा घरमा हो भने ती वस्तुहरूलाई एउटा फुलबारीको भित्ताले शिष्टतासित छेलेर राख्ने थियो। हाम्रा विशाल घरहरूले, अझ ओजस्वी र अनाम हुनुको साटो, घरेलु जीवनका ती पक्षहरूलाई नलुकाएर उदाङ्गो पार्दछन्। दृष्टिगत हिसाबले धेरैवटा मूल्यवान ब्लकहरू गन्धे ठाउँ भएका छन्, कारण फोहोर ठाउँका सबै मूल लक्षणहरू तिनीहरूमा पाइन्छन्-जस्तै, असुग्घरपन, मैला अनि गोपनीयताको अभाव।

एउटा भवनभित्र पनि सार्वजनिक ठाउँहरू जस्तै प्रवेशद्वार, सिंढी र पथहरू कसैको निजी सम्पत्ति नभएकोले अवहेलित रूपमा तिनीहरूको व्यवहार गरिन्छ। कोही मानिस पनि तिनीहरूको अनुहार र निर्वहणका निम्ति जिम्मादार छैनन्, यद्यपि हरेकले तिनीहरूको उपयोग गर्दछन्, अनि जुन अवहेलना त्यहाँ प्रतिबिम्बित हुन्छ त्यो हाम्रो जनसाधारणको असल दृश्यहरूप्रतिको उपेक्षा वा अनादरको नमुना हो भन्न सकिन्छ।

यदि बस्ने घर स्वयं खूबै अपर्याप्त, अनाकर्षक अनि अन्तमा अप्राप्य भएको छ भने स्कूल, महाविद्यालय तथा अस्पतालहरू जस्ता उतिकै आवश्यक कुराहरूको के हाल होला ? ती संस्थानहरू सम्पूर्ण वा आंशिक रूपमा राज्य अधिनस्थ छन्, तर तिनीहरू पनि चाहिएकोदेखि कम मात्रामा छन्। यदि हामीले एउटा शहरलाई प्राथमिकताको आधारमा हेर्‍यौं भने हामीले बुझेका सबैभन्दा मुख्य कुराहरू छन् (क) सहुलियतहरू— हाम्रो पुराना मित्रहरू, पानी, फोहोर फ्याँक्ने व्यवस्था, बिजुली, (ख) बाटाहरू, सार्वजनिक यातायात अनि सञ्चार जहाँ डाक र दूरवार्ता सेवाहरू पनि सामेल छन्, (ग) निवास निर्माण अनि दोकानहरू, (घ) स्कूल, महाविद्यालय र अस्पतालहरू, (ङ) खुला मैदान अनि उद्यानहरू, (च) चलचित्र घर र भोजनालयहरू। निश्चय नै प्रत्येक मानिसको प्राथमिकता केही भिन्दै हुन्छ। ससाना केटाकेटी भएको मान्छेले स्कूललाई प्राथमिकता दिन्छ भने एउटा बिमारी मान्छेले पहिले अस्पताललाई प्राथमिकता दिएको हुन्छ। तर विशेष रूपमा मुख्य आवश्यकताहरू पहिले आउँछन्। अरू कुराहरू पछिबाट। अनि, यो हुँदाहुँदै पनि प्रायश: चलचित्र र भोजनालयहरू जस्ता कम आवश्यक कुराहरू कुनै पनि शहरमा चाँडै फैलिन्छन्, जब कि स्कूल र बसगाड़ीको संख्या स्थिर रहँदछ। कारण सरल छ। एउटा भोजनालय स्थापना गर्नु सजिलो छ, निश्चय नै नाफा तुरन्त पाइन्छ, अनि यस प्रकारले धन कमाउन चाहने जुनै पनि व्यक्तिले यो गर्न सक्छन्। अर्कोपट्टि सरकारद्वारा स्कूलहरूको स्वीकृति हुनपर्छ, अनि एउटा साँच्चीकै असल स्कूलको सिद्धान्त पैसा कमाउनु होइन। तसर्थ, ती उपयोगी प्रतिष्ठानहरू जहिले पनि कम संख्यामा हुन्छन्, तर भोजनालय र चलचित्र घरहरूको संख्या भने द्रूत गतिमा बढ्दछन्।

निश्चय नै एउटा मनासीब भनाइ के छ भने ससाना घर तथा एक तले घरमा बस्ने परिवारलाई घरबाहिर मनोरञ्जनको आवश्यकता पर्दछ। जबसम्म उनीहरूमा विश्राम र आनन्द उपभोग गर्ने साधनहरू हुँदैनन्, उनीहरूले कार्यसाधक हुने गरी काम गर्न सक्दैनन्। मानसिक स्वास्थ्यको दृष्टिकोणबाट पनि आफ्नो दैनिक धन्धाबाट मानिसहरूलाई छुट्टी लिने आवश्यकता पर्छ। यो तर्क जति नै स्वस्थ ठहरिए तापनि अन्तमा परिणाम कनाहा हुन्छ। राम्रा स्कूलहरू राम्रो चलचित्र घर तथा भोजनालयभन्दा पनि धेरै गुणा बेसी महत्त्वपूर्ण छन्।

एक प्रकारले, शहरवासिन्दाहरूको मनोरञ्जनको निम्ति सर्वोत्तम साधन हो खुल्ला मैदानहरूको उपस्थिति। मनोवैज्ञानिकहरूले पत्ता लगाएका छन् कि हामी सबैलाई प्राकृतिक संसारसित सर्म्पक राख्न जरूरी छ। तपाईं एउटा घचारो ठाउँमा बस्नुभएको होस् वा नहोस्, एउटा सुन्दर देशमा हिँड्नु, पहाड़ चढ्नु, पौड़ी खेल्नु वा माछा मार्नु, झीलमा नाउ खियाउनु, कागजको नौका बनाएर पानीमा खेल्नु, यी सबै विश्रान्ति र आनन्दका विशाल श्रोतहरू हुन्। ती अमोद-प्रमोदहरू नागरिकहरूले नि:शुल्क पाउँदछन्; तर शहर अधिकारीको लागि भने ती कुराहरू खर्चिलो ठहरिन्छ कारण बहुमूल्य ठाउँ मनोरञ्जनका निम्ति त्यसै छोड़िदिनु पर्दछ।

तथापि, शहरहरूको निम्ति खुला ठाउँहरू प्राणभूत छन्, अनि हालसालैमा देखापरेको घुँइचोलाई विचारिलिंदा ती शहरका ''फोक्सोहरू'' (lungs) -को आवश्यकता अझ गहिरिएर जान्छ। ती खुल्ला ठाउँहरू मनोरञ्जनका स्थानहरू मात्र होइनन् तिनीहरूले शहरको मैला र प्रदूषणको मात्रालाई पनि कम गराउँछन्, अनि यहाँका वासिन्दाहरूको स्वास्थ्य स्तरमा पनि सुधार ल्याउन सहायता गर्छन्। अघि-अघिका नगर योजनाकारहरूमा शहरहरूको बीचमा हुनपर्ने विशाल फुलबारीहरूको महत्त्व विषय एउटा तीव्र ज्ञान पाइन्थ्यो। आधुनिक नगर अधिकारीहरूले भने खुल्ला मैदानहरूको परिकल्पना र निर्वहण गर्ने विषय त्यति चासो राखेको देखिँदैन। हाम्रा धेरजसो शहरहरूमा नैराश्यपूर्वक ढंगमा अत्याधिक मात्रामा मानिसको घुँइचो बढ़ेको छ, अनि कहिले त्यो जनसंख्या घट्छ होला भन्ने कुरो मनमा कल्पना गर्नु पनि एउटा असम्भव कुरो हुनेछ। यस्तै गजमौरा अवस्थामा हामी बाँच्नपरेको छ, तर भविष्यमा हुने सबै विकास कार्यहरू सक्रम र सुआयोजित रूपमा सम्पन्न भएको हेर्न हामी चाहन्छौं। हाम्रा नगर योजकहरूले यस तथ्यलाई याद राख्नपर्छ कि मैलापन र अनियमितताले मानिसहरूको मानसिक कल्याण साथै शारीरिक स्वास्थ्यमाथि असर पार्दछ। वास्तवमा एउटा बिग्रिरहेको मानसिक अवस्था शारीरिक विरामीभन्दा ज्यादै खराब ठहरिन्छ, कारण यो पत्ता लाउने योग्य अनि

चिकित्सा गर्ने योग्य हुँदैनन्। यसले हरेक प्रकारको दुराचार सृजना गर्छ अनि एउटा यस्तो अवस्थामा पुर्‍याउँछ जहाँ अति क्षुद्र कारणहरूले हिंसाको स्फोटन हुँदछ। घटनाहरूको अनुक्रम प्राय: यस प्रकारको छ: गन्दगी र भताभुङ्ग अवस्थाहरूले मानसिक अस्थिरता अनि अराजकता उत्पन्न गराउँछ; अराजकताले फेरि गोलमाललाई अझ चड्काउँछ, अनि यसलाई दमन गर्नको निम्ति केही विशाल अनि अझ खर्चिलो प्रहरी शक्ति चाहिन्छ। तर कम्ती खर्चमै पनि एउटा उच्चत्तर परिवेशको प्रबन्ध गर्न सकिन्थ्यो।

सुनियोजित ढंगमा शहरी क्षेत्रहरूको परिकल्पना गर्ने कामको प्रारम्भिक मूल्य जति नै खर्चिलो भए तापनि अन्तमा, यो मानिसको प्रसंगमा अनियोजित गजमौराको मोलभन्दा निकै नै सस्तो हुन्छ। बेङ्गलोरको पुराना ठाउँहरूमा अत्युत्तम शहर परिकल्पनाको झलकहरू देख्न पाइन्छ, अनि वर्तमान नगर प्रकल्पकहरूले यसको अध्ययन र अनुकरण गरी फाइदा उठाउन सके राम्रो हुने थियो भन्ने हामीलाई लाग्छ। उदाहरणको निम्ति, बाटोको अन्त:स्थलले धेरै समस्याहरू समाधान गर्न सक्छ। जम्मै घरहरू मूल बाटोपट्टि नफर्केर, मूल बाटोदेखि ससाना गल्लीहरू छुट्टिन्छन् जसद्वारा केही टाढास्थित ४-देखि ६ वटा घरहरूको समूहमा पुग्न सकिन्छ। यस्तो व्यवस्थाका फायदाहरू हुन् (क) घरहरूको आफ्नो गोपनीयता त्यहाँ हुन्छ, (ख) तिनीहरू मूल बाटोको होहल्ला र धूलोमूलोबाट मुक्त छन्, (ग) गल्लीका अन्त:स्थलहरू नानीहरू खेल्नको लागि निरापद छन्, अनि (घ) मूल बाटोको लमाई छोटो हुन्छ जसद्वारा सरकारलाई बाटो बनाउनमा कम खर्च लाग्नेछ। यस प्रकारको रूपांकनमाथि स्पष्ट रूपमा होशियारसहित विचार गरिएको थियो अनि जुन ठाउँहरूमा सम्भव हुन्छ त्यहाँ यसलाई लागू गराउन उचित ठहरिन्छ।

तर शहरका अघिबाटै बनिसकेका भागहरूलाई के गर्नपर्ने हो जो मानिसले घचाघच छ? हामीले हरेक कुरोलाई उखेलेर आरम्भबाट फेरि काम शुरू गर्न सक्दैनौं। हामीले अत्यधिक खर्च नगरी स्थितिमा सुधार ल्याउनको निम्ति के गर्न सक्छौं?

बेस, जसरी घरलाई सुविधाजनक वा असुविधाजनक, आनन्दप्रद वा मन नपर्ने यसभित्रको व्यवस्थाले बनाउँदछ, त्यसरी नै एउटा शहर क्षेत्र वा बाटोको रंगरूपले यसलाई रमाइलो वा नरमाइलो खालको बनाउन सक्छ। बाटोका पेटीहरूमा मैलाको थुप्रो थुप्रिंदा एउटा राम्रो बाटो नराम्रो हुन्छ, पेटी असमान भए हिंड्न सकिंदैन। बाटो सेपेर घरहरू बनाए पेटीको क्षेत्रफल घटनेछ, अनि यो राम्रो हुनेछैन, अनि चौबिसै घण्टा यातायातको आवाजले प्रतिदिन सताइरहने छ। मैला ढ्वाङबाट चुली भएर मैला पोखिरहेको, रोड़ा र घर बनाउने सामग्रीहरू यत्रतत्र छरपस्टै रहेको अनि घुम्मकड़

गाईवस्तुले सड्कको यातायातलाई भंग गरेको–यस्तै कुराहरू नियमित रूपमा हाम्रा प्राय: सबै शहरहरूमा पाइन्छन्। ती कुराहरूलाई क्षुद्र असुबिस्ताको रूपमा लिइन्छ साथै यति तुच्छ ठानिन्छ कि अधिकारीवर्गले तिनीहरूको भनेजस्तो वास्तै गर्दैनन्। तथापि यदि बाटोका पेटीहरू मात्रलाई पनि साफसुग्घर राखेर मान्छे हिँड्ने योग्यको बनाउन सके शहरी जीवन कति सुध्रेर जाने थियो होला। के यो काम निश्चय नै हाम्रा नगर शासकहरूको सामर्थ्यभित्रको कुरो होइन र ?

खूबै उपेक्षा गरिएको अर्को "तुच्छ" कुरो हो हाम्रा शहरहरूमा रूखहरू रोप्ने अनि बचाउने काम। हाम्रो जलवायुमा छौँया आवश्यक छ, अनि हाम्रो जीवनको सम्पूर्ण दृष्टिकोण बद्लिन सक्ने कुरो हाम्रो सिँयाल वा चर्को घाममा भएको बसाईमाथि निर्भर गर्छ। बसगाड़ीलाई पर्खिन्दै गरेको होस् वा नजीकैको दोकानतिर जाँदै गरेको होस्, विशाल छौँयादायक वृक्षहरूको उपस्थितिले एउटा मन नपर्दो कार्यलाई मनपर्दो बनाउँछ। वास्तवमा, कसैले विश्वास गर्न नसक्ने कुरो यो होइन कि यदि हाम्रा शहरका बाटाहरूमा पातले ढाकेको ठूला वृक्षहरूको पंक्ति भएको भए साथै बाटो छेउका पेटीहरू सफा भएको भए मानिसहरूले ताँती लागेर बसगाड़ी पर्खनुको सट्टामा बरू केही दुरत्व हिँड़ेर नै जान मनपराउँथे; अनि यसले सार्वजनिक यातायात प्रणालीमा भएको भारलाई हल्का पार्ने थियो।

सिँयाल उपार्जनको सरल कार्यबाहेक त्यहाँ एक दर्जन अन्य उपायहरू छन् जसद्वारा रूखहरूले एउटा बस्न नालायकको ठाउँलाई रमणीय अनि बस्ने योग्यको बनाउँदछन्। रूखहरूले, उदाहरणको निम्ति, धेरै मात्रामा घिनलाग्दो दृश्य र मैलालाई लुकाउन सक्छन्; घरहरूलाई धूलोदेखि जोगाउँछन्, अनि सम्पूर्ण शहरको धुलाम्मे अवस्थालाई कम गराउन सक्छन्। यथार्थमा रूखहरूले साक्षात रूपले वायुमा प्रदूषणको मात्रा घटाउन सक्छन्। न त त्यहाँ केही सन्देह छ कि एउटा सानो, बाक्लो जङ्गल भएको ठाउँमा तापको मात्रा धेरै कम हुन्छ जुन रूखहरूको अनुपस्थितिमा हुन नसक्ने कुरा थियो; फुल्ने वृक्षहरूले शहरलाई सुन्दरता दिन्छन् अनि वासिन्दाहरूको हृदयलाई प्रफुल्लित पार्दछन्; अनि अन्तमा तर कदाचित सानो परिमाणमा होइन— रूखहरूले आवाजलाई दबाउँछन्, कहिलेकाहीँ पूर्ण रूपले शोषण पनि गर्न सक्छन्।

ती सबै वास्तविकताहरूसित शहरको बाटोमा हिँड़ने मानिस अवगत छन्, अनि निश्चय नै नगर अधिकारीहरू पनि। तसर्थ यो अविश्वसनीयजस्तो लाग्दछ जब पुराना विशाल रूखहरू अनियमित ढंगमा काटिन्छन्, कि बाटोको चौड़ाइ बढ़ाउनलाई, बिजुलीका तारहरू टाङ्नलाई कि त ती रूखहरू "बाटोमा रहेको" कारणले। एउटा

रूखलाई छिप्पिनु ५० वर्ष लाग्छ; यसलाई काट्नु २ घण्टा लाग्छ। हामी सम्झन्छौं रूखलाई तथा यसको अंशलाई ध्वंश गर्ने कुनै पनि प्रचेष्टा एउटा साँच्चीकै अपराधी काम हो जसमा दोषीलाई जेलको दण्ड दिनुपर्ने थियो। यो याद राख्नपर्छ कि जसले रूपियाँको थैली चोर्छ, उसले एउटा विशेष व्यक्तिको मात्र हानि गरिरहेको हुन्छ। तर जुन मान्छेले रूखलाई ध्वंस गर्छ, उसले हजारौं व्यक्तिहरूको हानि गरिरहेको हुन्छ, वास्तवमा शहरका जम्मै जनमानसको। आम जनताको सम्पति नाश गरेकोमा दिइएको परम्परागत सजाय व्यक्तिगत सम्पतिको तुलनामा धेरै गुणा सख्त हुँदै आएको छ। अनि यो बिल्कुल युक्तिसंगत छ कारण एउटा व्यक्तिको निम्ति हजारौं मानिसको जीवन र सुखलाई असर पार्ने नराम्रो काम गर्नु लाजमर्दो कुरो हो।

वर्तमान रूखहरूलाई बचाएर अनि सुरक्षाको साथ नयाँ रूखहरू रोपेर त्यसबाट प्रत्यक्ष रूपमा पाइने फायदाहरूप्रति किन हाम्रा शहरहरूमा ध्यान दिइँदैन? के यो जुन कुरोले तत्कालै आर्थिक नाफा दिँदैन त्यो महत्त्वहीन हो भन्ने धारणाको कारणले हो? के यो सौन्दर्यबोध र नियम पालन गर्न सक्ने कुरोको कमी हामीमा भएकोले हो अनि के कच्चा घरहरूको थुप्राइले हामीलाई सन्तोषजनक शहरी रमणीयता दिन सक्छ? स्थिति साँच्चै नै अलमल्ल पार्ने किसिमको छ, अनि स्पष्टीकरण पाउन कठिन छ।

समय-समयमा बाटाहरूमा बिरूवाहरू रोप्ने नित्यक्रम भावना दर्शाइन्छ अनि एकजना राजनैतिक व्यक्तिलाई प्रथम बिरूवा रोप्न निमत्याइन्छ। एक-दुइ महीनाभित्रमा बिरूवाहरू मर्दछन् अनि वृक्षरोपन महोत्सव फाइदाहीन बन्दछ, खबर-कागजहरूमा मुख्य समाचारको रूपमा छापिनबाहेक। एउटा साँच्चीकै वृक्ष-रोपन कार्यक्रमले निश्चय गर्नुपर्छ कि (क) रोप्नअघि बिरूवा कमसेकम ६ फीट (२ मिटर) अग्ला छन्, (ख) बिरूवा रक्षक घोच्चाहरूको घेरा बलिया अनि अग्ला छन् जसमा गाईबस्तु र मान्छेबाट बिरूवालाई जोगाउन सकिन्छ, अनि (ग) रोपेको एकसाल पछिसम्म बिरूवाहरूको हेरचाह नियमित तरिकामा गरिन्छ। शहरमा भएको विपुल साधनहरूको प्रसंगमा ती शर्तहरूको पूर्ति गर्न गाह्रो नपर्ला। तर फेरि जसरी शिरदर्दको कारण शिरमा नभएर कलेजामा हुन सक्छ, त्यस्तै प्रकारले हाम्रो वृक्षहीन अवस्थाको कारण पनि हुन सक्छ सस्तो दाममा इन्धनको अभाव अनि घुमिहिँड्ने गाईबस्तुको प्रचुरता। शहरभित्र बाटोको छेउमा हुने वृक्ष-रोपन कार्यको साथ-साथ इन्धन-वृक्षहरू पनि रोप्न पर्दछ अनि गाई-बाख्रालाई जताभावि चर्नु दिनु हुनेछैन।

रूखहरूको ताँतीबीच छाँयाले ढाकेका बाटाहरू हामी सबैको सपना हो। तर यसबाहेक नागरिकलाई बसेर संसार चलेको हेर्नको निम्ति खुल्ला ठाउँ पनि चाहिन्छ।

सिमेन्ट र अलकत्रले उसलाई घेरेकोले आफ्नो मानसिक स्वास्थ्य राम्रो राख्नको निम्ति उसले कुनै एउटा ठाउँ पाउनपर्छ जहाँ उसका खुट्टाहरूले उपकारी पृथ्वीको स्पर्श गर्न सकोस्, जहाँ उसले फूलहरू देख्नु अनि सुँघ्नु, कीरा-फटेंग्रा अनि चराहरू कराएको सुन्नु अनि अनुहारमा शुद्ध वायु बहेको अनुभव गर्नु सकोस्। विगत दिनहरूमा हरेक शहरमा थुप्रै यस्ता मरूद्यानहरू पाइन्थे; आजकल एक-दुइवटा पाउन पनि गाह्रो पर्छ, अनि शहरवासिन्दाले हप्तौं दिनसम्म प्राकृतिक सौन्दर्यलाई हेर्ने अनि रसपान गर्ने मौका नपाई समय बिताउन पर्दछ।

कुनै बनौट नभएको जमीनलाई काम नलाग्ने जमीन भन्ने हाम्रो धारणा छ। एक वर्ग गजको हिसाबले जमीनले दिन सक्ने रूपियाँको अन्दाज हामी गर्छौं अनि जमीनलाई रूखहरूको लागि मात्र प्रयोग गर्ने अनि शहरलाई ताजा वायु दिने कुरोलाई फजूल खर्च भनी सम्झन्छौं। हाम्रा गरिमाहरू यस्तै प्रकारका छन्। ताजा वायुको त्यो श्वास कुनै निमार्णभन्दा हजारौं गुणा बेसी महत्त्वपूर्ण छ। खास गरी, हाम्रो प्रयत्न हुनुपर्छ उद्यान र खुल्ला जग्गाहरूको परिमाण र संख्या शहरभित्र बढ़ाउने, तर तिनीहरूलाई अलि-अलि गर्दै खाएर अन्तमा पूरै ध्वंश पार्ने होइन।

एक-दुइ उद्यानहरू अझै पनि धेरैवटा शहरहरूमा पाइन्छन्, तर यो प्रत्यक्ष देखिन्छ कि शहरले तिनीहरूको कुनै ख्याल राख्दैनन्, अनि ठाउँ ओगटेकोमा असन्तुष्ट छन्। उद्यानको कुना काप्चाका जमीनहरू अरू उद्देश्यहरूको लागि लैजाने निरन्तर प्रयास त्यहाँ भइरहेको हुन्छ - बेङ्गलोरको एक समयको सुन्दर कुब्बोन उद्यानभित्र एउटा टुँड़िखेल स्थापना हुने भएको छ, मुम्बईको बाहिरी भागको एउटा विशाल उद्यानभित्र एउटा नगरपालिका स्कूल हुने अनुमति दिइएको छ अनि यस्तै अरूहरू।

शहरमा बस्ने धेरै मानिसहरूको निम्ति नगरपालिका उद्यान एकमात्र स्थान हो जहाँ तिनीहरू प्राकृतिक रूप र रचनाहरूसित आत्मसात हुन सक्छन्। शहर अधिकारीवर्गले उद्यानलाई सर्वोत्तम अवस्थामा राख्नको लागि अमितब्ययी रूपमा प्रयास र रूपियाँ खर्च जारी राख्नुपर्ने छ, जो मानिसहरू उद्यानमा प्रवेश गर्छन् उनीहरूले साँच्चीकै आनन्ददायक अनि प्रेरणादायक अनुभव प्राप्त गर्न सक्नेछन्। चिरस्थायी कुरोहरूमध्ये त्यहाँ घाँसपात, ओझेलदायक रूखहरू अनि सम्भवत: पानी हुनपर्छ, अकोपट्टि अस्थायी कुरोहरूमा बद्लँदो रूपाकार र वर्ण भएको ऋतुकालिक फूलहरू त्यहाँ हुनपर्दछ।

ठूला-ठूला उद्यानहरूबाहेक हरियालीले ढाकेका ससाना थुम्काहरू पनि जनमानसको भावसंवेग र मिजासलाई शान्त पार्न उपयोगी हुन सक्छन्। केही शहरहरूले अनुभवका निम्ति टापूहरूमा साना फूलबारीहरू बनाउने अनि हेरचाह गर्ने अनुमति उद्योगहरूलाई

दिएका छन्। यो एउटा उत्कृष्ट परिकल्पना हो— यसले सार्वजनिक धनलाई बचाउँछ, उद्योगलाई आफ्नै विज्ञापन गर्ने मौका दिन्छ, अनि फेरि शहरलाई , सानो परिमाणमा भए तापनि एउटा रमणीय हरियाली दिन्छ। तथापि हरेक शहरमा केही सय प्रयोग नगरिएका मैला ठाउँहरू छन् जुन फोहोरका थुप्रोहरू बन्ने मार्गमा पर्छन्, तथा जहाँ मानिसले खिया लागेको टिनका झोपड़ीहरू खड़ा गरी अनुमतिबिना बस्छन्। ती ठाउँहरूलाई सफा सिनित्त पारेर त्यहाँ पौधाहरू लाउन सकिन्थ्यो अनि यस कार्यले शहरमाथि अलौकिक प्रभाव सृष्टि गर्ने थियो। सहस्रौं संख्यामा साना-ठूला फूलबारीहरू अनि वृक्षहरू भएको एउटा शहरको कल्पना गर्नुहोस्, जहाँ सबै बाटाहरू सफा छन्, यो आफैआफ सुन्दर भएको तपाईंले देख्नु हुनेछ।

फोहोर-गन्धपछि शहरको द्वितीय महान् अभिशाप हो आवाज। धेरै विशेषज्ञहरूको भनाइअनुसार अर्को पुस्तामा भारतमा अझ विशाल अनुपातमा बहिरा मानिसको संख्या हुनेछ। हाम्रो आवाजको सतह अति उच्च छ अनि मान्छेको कानले यसलाई थाम्न सक्दैन। हामीले हाम्रा कानहरूको सुक्ष्मग्राह्यतालाई घटाइसकेका छौं, हामी जोड़सित बोल्छौं, हामी अति ज्यादै चिच्चाउछौं, चर्को आवाजमा रेडियो सुन्छौ, कान फुट्ने गरी फिल्मी दुनियाँका बातचित सुन्छौं, हाम्रा ध्वनिबर्द्धकहरू अति उच्च स्वरमा गर्जन्छन्, हाम्रा गाड़ीका सिटीहरू मुटु छेड़ने प्रकारका छन् अनि तिनीहरूको घरिघरि प्रयोग गरिन्छ।

आवाज थाम्नु सक्ने योग्यता र मनमा चिन्तन गर्ने अनिन्छुकतामाझको घनिष्ट सम्बन्धमाथि विचार-विमर्ष गर्ने काम एउटा चाखलाग्दो विषय छ। हामीलाई याद छ जब एउटा पवित्र व्यक्तिले तपस्या गर्न चाहन्छ, उ अग्लो पहाड़को प्राकृतिक मौनताको शरण लिन्छ; कारण कसैले पनि कोलाहलपूर्ण परिवेशभित्र एकाग्र गर्न वा सम्झनु वा तपस्या गर्न सक्दैनन्। हामीमध्ये धेरैजसो महान् विचारकहरू छौं भन्ने कुरोको दावा नगरिकन यो अझ पनि सत्य ठहरिन्छ कि हाम्रो दैनिक जीवनमा हामीले ध्यानमग्न हुनु, अध्ययन गर्नु तथा उचित प्रकारले विचार गर्नु सक्दैनौं— ध्वनिवर्द्धक गाड़ीको सिटी अनि यातायातको आवाजले गराएको बाधाको कारणले गर्दा। यातायातको आवाजको सतह हाम्रा शहरहरूमा धेरैजसो अरू देशहरूको स्वीकार्य सतहभन्दा ज्यादै माथि छ। हाम्रा मालगाड़ी, दुइचक्के बाहन र स्वचालित रिक्साहरू संसारका अरू भागहरूका यस्तै वाहनहरूको तुलनामा धेरै ज्यादा आवाज निकाल्छन्। ती वाहनहरूका शरीर हल्लन्छन् अनि खटखट आवाज गर्दै हिँड्छन्, इन्जिनहरू ज्यादै आवाजकारी छन्, अनि सबैभन्दा खराब कुरो के छ भने हाम्रा ट्रकहरूले एक प्रकारको वायुचालित

सिटीमा पैसा लगाउँछन् जुन आवाजचाहिँ सोझै श्रोताको कर्णपटबाट निस्कन्छ। वायुचालित सिटीको विरूद्धमा हामीसित कुनै नियम-कानून छैन जुन स्थिति धेरै अरू देशहरूमा पाइन्न।

केवल अस्तव्यस्ततापूर्ण कोलाहल एउटा कुरो हो तर शायद ध्वनिबर्द्धकबाट निस्केको फिल्मी संगीतको चर्को आवाजको आयतनभन्दा पनि डरलाग्दो कुरो हो संगीत स्वयंको खोक्रा गुणहरू। हाम्रा फिल्म निर्माताहरूले आविष्कार गरेको खोक्रो , अर्थहीन अनि बेसुरो संगीतजस्तो अन्य कुनै भारतीय संगीत छैन, अनि यो विश्वासनीय छ कि यसको असावधानताले श्रोताहरूको मनलाई निश्चय नै असर पार्दछ। मानिस भएर आत्मदर्शन गर्ने र फिल्मी गीतहरूको धूनलाई मनन गर्ने अभ्यास हामीले गरेका छैनौं जुन संगीतले हाम्रो कार्यकलापको पृष्ठभूमि बनेको जस्तो छ अनि हामीलाई विचारशुन्य अवस्थामा राख्न मद्दत गर्छ। निश्चय नै हामीले दिनहुँ सामना गर्नुपर्ने समस्याहरू विषय तर्कशास्त्रअनुसार विचार गर्न सकेका छैनौं।

तसर्थ, शहरहरूभित्र हाम्रो जीवन गम्भीर विचार तथा अध्ययन गर्ने साधन हुन सकेको छैन। पाठशालाका कक्षाहरू र कार्यालयहरू लगातार चलिरहने होहल्लाको परिवेशभित्र काम गर्नुपर्दछ। मध्यरात र प्रात: कालको बीचको समयबाहेक हाम्रा जम्मै इन्द्रियहरूमाथि गाड़ा रूपमा हमला भइरहेको हुन्छ जुन बेला दृष्टिगत कोलाहल अँध्यारोमा लुप्त हुन्छ अनि आवाजकर्ताहरू सुत्न जान्छन्। यो भन्नुमा कुनै सन्देह छैन कि ससाना कुराहरूमा बारम्बार भइरहने झगड़ा चलचित्र-टिकटको ताँतीमा, बसगाड़ी बिसौनीमा, हाटबजार र दोकानमा, व्यापारीहरूमाझमा-विशेष गरी तिनै कोलाहल अवस्थाहरूमा बस्दा उत्पन्न भएको तनाव र धक्काको कारणले हो। हरेक व्यक्तिका नशाहरू तन्न छन्, शहरीया जीवनको मन नपर्ने अवस्थाहरूले सहिष्णुता अनि आत्म-नियन्त्रणको माग गर्दछ, अनि जुन कुरो हराउन आँटिका छन्; अनि शहरीया जीवनको दैनिक नित्यक्रमको प्रत्येक खुड़किलोमा देखापर्ने नयाँ अड़चनहरूले समस्यालाई अझ दुर्बल बनाउँछन्।

जब हामी भारतीय शहरीया जीवनमाथि दृष्टि राख्छौं त्यहाँ तीन कुराहरू खूबै स्पष्ट छन्-(१) विशाल रूपको परिर्वतनपट्टि नलागेर सरल ढंगको साफ-सुग्घर र सुव्यवस्था मात्रले पनि शहरीया जीवनलाई धेरैसम्म सुधार्न सकिन्थ्यो, (२) नगरा धिकारीवर्गमा यो सफाइ र सुव्यवस्था हासिल गर्ने उपायहरू छैनन्, नत्र भए उनीहरूले सो काम गरेका हुने थिए, (३) नागरिकहरूले तथा '' जनसाधारण''-ले आत्मसंयम पालन गर्दै अधिकारीवर्गलाई सहायता पुऱ्याउने चेष्टा गर्नु आफ्नो जिम्मवार सम्झिँदैनन्।

त्यहाँ दुइवटा विशिष्ट उपायहरू छन् जुन अपनाउनाले हामी जनसाधारणले अधिकारीवर्गलाई शहरको हेरचाह गर्नुमा सहायता गर्न सक्छौं। मैलाको थुप्रो र कोलाहललाई अझ बढाउने कष्ट नगरेर विपरीत ढंगमा हामीले उक्त काम गर्न सक्छौं; अनि सक्रिय भई उचित प्रकारले कार्यहरू गरेर तथा शहरलाई बिगार्नदेखि अरूलाई रोक्दै यथार्थ ढंगमा हामीले उक्त काम गर्न सक्छौं।

आफैलाई कुनै असुविस्ता नपारी हामीले दुइचारवटा उपायहरूको जाँच गरिहेरौं जसमा शहरका समस्याहरूलाई अझ तीव्र हुनदेखि रोक्न सक्छौं। बाटोमा हामीले देखाएको व्यवहारलाई लिएर हाम्रो चर्चा शुरू गरौं: हामीले बाटोमा मैला फ्याँक्ने प्रथालाई रोक्न सक्छौं अनि पैदलयात्रीहरूले वारपार गर्ने बाटोबाहेक अरू बिन्दुहरूबाट बाटो पार गर्नु उचित हुनेछैन। हामीले मित्रहरूसित बातचीत गर्नको निम्ति बाटोबीचमा तथा पेटीमा उभिनु हुँदैन अनि अरूको बाटो थुन्नु हुँदैन। पंक्तिमा उभिनपरे आफ्नो स्थानमै रहने आचारनिष्ठता हामीमा हुनु सक्नुपर्छ, चाहे टिकट घरमा होस् वा बसगाड़ी बिसाउनीमा। साइकल-यात्रामा बाटोको अनुचित भागमा हिँड़नदेखि हामीले आफैलाई रोक्नुपर्छ, साथै बाटोबीचमा जताभावी हिँड़नदेखि, आँखा चिम्लेर वेगसित पेटीमाथि दगुर्नदेखि अनि बत्तीबिना साइकल कुदाउनदेखि। मोटरसाइकल चालकले वेगसित बाहन कुदाउने छैन यद्यपि यो अधिकार उसित छ, अनि उसले बाहनको इञ्जिनमा एउटा ध्वनि अवरोधक पनि लगाउन सक्छ। मोटरगाड़ी चालकले यातायातको नियमकानून पालन गर्नुपर्छ अनि संकटमय समयमा बाहेक सिटी लाउन हुँदैन। यदि हरेक मानिसले यतिसम्म पनि गरे भने कल्पना गर्नुहोस् एउटा शहरमा जीवन कतिसम्म सुखी हुन सक्ने थियो।

अन्य सार्वजनिक ठाउँहरूको सम्बन्धमा यही भन्न सकिन्छ कि रेल बिसाउनी तथा हवाई अड्डामा जाँदा प्रत्येक यात्रीसित दुइ दर्शनार्थीहरू मात्र साथमा गए उचित हुनेछ। ती स्थानहरू यात्रीहरूका व्यवहारको निम्ति रूपांकन गरिएका छन् अनि यात्रीहरूका आफन्तहरू र साथीहरूले आवश्यक औपचारिकतालाई खलबल्याई दिनु अन्याय ठहरिन्छ। यस मुहूर्तमा हामीले एकछिन पर्खेर हाम्रा परम्परागत बानीहरूलाई गम्भरी हेरौं। ती दिनहरू जब एउटा यात्री गोरूगाड़ीमा यात्राको लागि प्रस्थान हुन्थे, आफन्तहरू उसको घरको दैलोमा जम्मा भएर उसलाई माल्यार्पण गर्दै सफलताको कामना जनाउँदा सो कार्य खूबै उपयुक्त देखिन्थ्यो। त्यही दस्तुर हवाई अड्डा तथा बस बिसाउनीमा लैजाँदा समाजविरोधी कर्म हुँदछ। तपाईंले सैकड़ौं अन्य मानिसहरूको आराम, सुखसुविस्ता अनि कार्यकलापलाई भङ्ग गर्नुहुनेछ। अर्को दृष्टिकोणबाट हेर्दा तपाईंले खास यात्रीहरूको लागि प्रवन्ध गरिएको सुविधाहरूमा धक्का पुर्‍याउनु हुँदैछ -चाहे रेलको भोजनालयमा होस् वा हातमुख धुने ठाउँमा।

तो सबै त्रुटिहरू कुनै मेहनतबिना गर्न सकिने स्वभावका छन्। हाम्रा घरपरिवारको एकान्तमा हामीले गर्नपर्ने कर्तव्यहरू अझै सरल छन्। संक्षेपमा हामीले आफ्नै प्रदूषणलाई रोक्न कोशिश गर्नुपर्छ तथा साधारण शब्दमा भन्नु हो भने प्रदूषणद्वारा बाटो हिँड्ने व्यक्तिको आँखा, कान र नाकमा क्षति पुर्‍याउने काम हामीले गर्नु हुँदैन। अर्थात्, हामीले सार्वजनिक ठाउँहरूमा मैला नफ्याँकेर मैला ढवाङमा मात्र मैला फ्याँक्नुपर्छ; हामीले घरभित्रका आवाजहरू चाहे ती बालक रोएको आवाज वा रेडियोको आवाज नै किन नहोस् घरबाहिर जान दिनु हुँदैन; अनि हामीले यो तय गर्नुपर्दछ कि बाटोबाट हेर्दा घरको दृश्य नरमाइलो देखिनु हुँदैन। अमिल्दा रंगहरूले रंगिएको घर एउटा मैलो तथा भद्दा घर जस्तै नरमाइलो हुन सक्छ। कुनै पनि धोएको वस्तु सबैले देख्ने गरी सुकाए यसले रंगले बढ़ाएको घरको शोभालाई बिगार्ने छ।

हामीले याद राख्नपर्छ कि कहिलेकाहीँ आकस्मिक रूपमा हिँड्ने बटुवालाई मात्र हाम्रो घरको दृश्य र आवाजले बिरक्त पार्दैन। खापाखाप गर्दै बस्दाखेरि, जुन कुरो शहरहरूमा पाइन्छ, हाम्रा छिमेकीहरूलाई चौबिसौं घण्टा हामीले उप्जाएका प्रदूषणले सताइरहेको हुन्छ। शहरीया जीवनले धेरै तनाउको सामना गर्नुपर्छ; हाम्रा छिमेकीहरूले भोगेका कष्टहरूमाथि अरू कष्टहरू थपिदिने काम हामीले नगरौं अनि हाम्रै ढोकाको पल्लोपट्टि बस्न पर्‍यो भन्ने पश्चातापको भावना उनीहरूको मनमा उत्पन्न गराउने काम नगरौं।

संसारका धेरै शहरहरूमा घरको मालिकले आफ्नो घरको आँगन ''सफा अनि स्वास्थ्यकर अवस्था'' -मा नराखे उसको माथि कानूनी मुद्दा दायर गर्न सकिन्छ। न्यू वर्कमा घरको अघिल्लो भाग मैला राखे १०० डलर जरिमाना गरिन्छ, साथै यदि यो मैला नै बसे प्रत्येक दिनको दण्ड तिर्नुपर्छ। सिङ्गापुर शहरका बाटाहरूमा कागज फ्याँकनेले भारी दण्ड तिर्नुपर्छ, जबकि न्यू वर्कमा त्यही कुकर्मले उसले झ्यालखानाको सजाय पनि पाउन सक्छ। ती कड़ा प्रकारका नियम-कानूनहरू बराबर रूपमा लागू रहन सके अन्तमा सबै नागरिकहरूले त्यसलाई स्वागत गर्ने थिए। अति भीड़ हुँदाहुँदै पनि सिङ्गापुर संसारको सबैभन्दा सफा शहर हो; अग्ला घरहरू र बाक्लो जनसंख्या भए तापनि हिँड्डूल गर्न तथा साना तर राम्ररी निर्वाह गरिएको कुनै पनि हरियो चौरमा बिसाउन खूबै आनन्ददायक हुन्छ।

के हामी शहरमा बस्नेहरूले शहरहरूको अवस्था सुधार्नको निम्ति केही गर्न सक्छौं ? कुनै शक्ति, अधिकार वा प्रभावको अनुपस्थितिमा एउटा एक्लो नागरिकले शहरलाई अझै बस्नेयोग्य बनाउनको लागि के गर्नु सक्ला र ? बेस, एउटा सफा र स्वास्थ्यकर

पर्यावरण पाउनु हाम्रो अधिकार हो भन्ने कुरो शुरूमा नै अधिकारीवर्गलाई जनाउनुपर्छ। उचित अधिकारीवर्गसमक्ष उजूर गर्ने आद्दत हामी बनाउन सक्छौं। प्राय: जम्मै शहरहरूमा भारतमा पनि आवाज र प्रदूषण विरूद्ध कानूनहरू बनिएका छन्। यसकारण जब ध्वनिबर्द्धक निकट स्थानमा बज्छ, स्थानीय थानामा टेलिफोन गर्ने अधिकार तपाईंको छ अनि थानाद्वारा यसलाई बन्द गर्न सक्नुहुन्छ। यदि यो बन्द नभए बन्द नहुञ्जेल तपाईंले टेलिफोन गरिरहन सक्नुहुन्छ। तपाईंले ट्रक र बसगाड़ीहरूबाट उप्जेको कालो धुँवाको मुस्लो विषय उजुर गर्नु सक्नुहुन्छ; ध्वनि, मैला, रूखहरूलाई लागेको चोट विषय तथा जुनै विषय पनि जसले शहरीया जीवनलाई नरमाइलो बनाउँछ। तपाईंले कुनै पनि कुरो विषय प्रतिवाद गर्न सक्नुहुन्छ अनि वास्तवमा गर्नैपर्दछ जुन कुरो अनुचित छ वा जस्तो हुनपर्ने त्यो अवस्थामा छैन, अथवा जसले तपाईंलाई वा कसैलाई असुविस्ता पारिरहेको छ।

ती परिस्थितिहरूमा गुनासो पोख्नु कुनै अनुग्रह होइन तर कर्तव्य हो। मानिसहरूले असन्तोष देखाएनन् भने वासिन्दाहरू सबै कुरोहरूसित खुशी नै छन् भन्दै खोक्रो विश्वासमा अढ़िने ती अधिकारीवर्गलाई दोषारोपण गर्न सकिँदैन। प्रतिवादहरू फोन वा पत्रद्वारा, औपचारिक भेटघाटद्वारा वा स्थानीय छापाखानाको प्रकाशनद्वारा, जुनै माध्यमद्वारा गरे तापनि तिनीहरू सदैव आवश्यक छन् अनि प्रायश: प्रभावकारी हुन्छन्। हामीले तीससाना स्वेच्छाधीन कामहरू गर्नु सक्छौं तथा गर्नैपर्दछ जसद्वारा अधिकारीवर्गलाई अवस्था सुधार्न सहायता मिल्नेछ। कारण अन्तिम उपायस्वरूप स्थानीय अधिकारीवर्ग नै शहरका अवस्थाहरूको जिम्मेदार छन् अनि उनीहरूले देखाएका चासो सिधै रूपमा जनता स्वयंले राखेका चाख र चिन्तासित सम्बन्धित छन्।

